# कामकलारहस्य

रथी धनशमशेर ज. ब. रा.

नेपाल र एशियाली अनुसन्धान केन्द्र
त्रिभुवनविश्वविद्यालय
काठमाडौं, नेपाल

प्रकाशक–

नेपाल र एशियाली अनुसन्धान केन्द्र
त्रिभुवन विश्वविद्यालय

प्रकाशन मिति– वि. सं. २०३६ आषाढ
प्रकाशित प्रति– ५००

मूल्य– Rs 65.50

मुद्रक–
शान्ति प्रिण्टिङ्ग प्रेस
फोन : १४३६१
ओम्बहाल, काठमाडौं ८



श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव सरकार

# समर्पण

पैल्हे कामकलाविषे विविध ती भेदादिको वर्णन
पश्चात् पीठ जगाउने किसिमका तत्त्वादिको वर्णन ।
तेस्रोमा अनि भेदवर्णन सबै ती पञ्चमीमूर्तिको
चौथोमा पनि कूटमन्त्रहरूको उद्धारको वर्णन ॥

श्रीनक्सालनिवासीनी भगवतीका पीठको वर्णन
साथै मन्दिरतोरणादिहरूको भित्री रहस्याङ्कन ।
राखी चित्रसमेत खण्ड पहिलो तैयार पारीकन
श्रीवीरेन्द्र महाधिराज प्रभुमा गर्छू म यो अर्पण ॥ ॥

वि. सं. २०३१ — विनीत
गुरुपूर्णिमा — धनशमशेर ज.ब.रा.

# वक्तव्य

आजको युगमा नेपाली जनताको जीवनस्तर उठाउने क्रियाकलाप र यसै कार्यलाई सगाउ पुग्ने खालको अनुसन्धान कार्यको सर्वाधिक महत्त्व र व्यापकता रहन गएको छ। अधिकांश नेपाली बुद्धिजीवीको ध्यान यसै दिशातर्फ केन्द्रित हुनु स्वाभाविक कुरा पनि हो। तर यस्तो तात्कालिक महत्त्वको विषयमा सम्पूर्ण स्रोत, साधन र ध्यान दिनुपर्ने बाध्यता देखिए तापनि नेपाली समाजको विभिन्न ऐतिहासिक समयमा पछ्याई आएका परम्परा तथा विशेषताहरूको खोजी गर्ने कार्यलाई बिर्सिन सकिंदैन। समष्टिरूपमा नेपाली समाजको ऐतिहासिक पृष्ठभूमिको अवलोकन गरी उभ्याउन सकिएन भने नेपाली समाजको बहुपक्षीय प्रकृतिलाई बुझ्ने काममा हामी पछि पर्नेछौं।

यसै हुँदा नेपाल र एशियाली अनुसन्धान केन्द्रले नेपाली जनजीवन र संस्कृतिका विशेषतायुक्त विविध पक्षलाई लिई अनुसन्धान गराउने काम पनि गर्दै आएको छ। यसमा केही मात्रामा सफलता पनि पाइएको छ। यसै सिलसिलामा कुनै समय नेपालमा निकै महत्त्व ओगटेको कामकलाविषयको रहस्यको विश्लेषण र विवेचना गर्ने उद्देश्यले प्रस्तुत विषयमा एउटा आधिकारिक ग्रन्थ तयार गर्ने काममा यस विषयका ख्यातिप्राप्त, वयोवृद्ध विद्वान् रथी श्रीधन शमशेर जङ्ग बहादुर राणा लाग्नुभएको थियो। हाल सो विषयको ग्रन्थ तयार भई प्रकाशनमा ल्याउन पाउँदा यस केन्द्रको तर्फबाट एउटा महत्त्वपूर्ण विषयमा केही प्रकाश पार्न सकिएको छ। यस्ता गहन रहस्यमय विषयको खोजी गर्दा एकै पटकमा सम्पूर्ण कार्य पूरा भएको ठान्न नसकिए तापनि निकै ठूलो पक्षलाई अघि सार्न पाइएको छ भन्ने यस केन्द्रले ठानेको छ। त्यसैले सम्बद्ध विषयको शोध खोज गर्ने विद्वान्हरूलाई यसले ठूलो सघाउ पुऱ्याउनेछ भन्ने आशा यस केन्द्रले लिएको छ। यस्तो जटिल विषयको विवेचनामा धैर्यपूर्वक लामो समयसम्म परिश्रम गरी प्रस्तुत ग्रन्थ तयार गरिदिनुभएकोमा वयोवृद्ध विद्वान् लेखकलाई हामी हार्दिक बधाइ दिन चाहन्छौं।

**प्रा. डोरबहादुर विष्ट**
कार्यकारी निर्देशक
नेपाल र एशियाली अनुसन्धान केन्द्र
त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर।

२०३६ आषाढ

# विषयसूची

# भूमिका

नेपालका देवालयहरूमा रहेका रतासन मूर्तिहरूको बारेमा स्वदेशी तथा विदेशी सबैको कौतूहलपूर्ण जिज्ञासा रहिआएकोले सो जिज्ञासा यथासंभव पूर्ति गर्ने उद्देश्यले यो पुस्तक प्रस्तुत गरिएको छ। नेपालका देवालयहरूमा रहेका ती मूर्तिहरू धेरैजसा कामकलासम्बन्धी भएका र ती सबै रहस्यमय भएकाले त्यस्ता कामकलासम्बन्धी मूर्तिहरूको यथासंभव रहस्योद्‌घाटन यस पुस्तकमा गर्ने चेष्टा गरिएको छ। विशेष गरी श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको राज्यकालमा मौसूफप्रतिको भक्तिभावले प्रेरित भई यो लेखिएको हो।

यसमा विभिन्न देवालयहरूमा रहेका अन्य मूर्तिहरूका साथै कामकला-सम्बन्धी कामासक्त मूर्तिहरू पनि तत्तत् मन्दिरभित्रका पीठस्थ मुख्य देवताको स्वरूप, मन्त्र, ध्यान र आवरणदेवता आदिको संकेतका निमित्त राखिएका हुन् र तिनबाट ती देवताको मन्त्रोद्धार हुन सक्छ भन्ने कुरा सोदाहरण यसमा प्रस्तुत गरिएको छ। यसको मुख्य विषय यही हो र यसै कुरालाई सर्वसाधारणमा विदित गराउनु यसको मुख्य लक्ष्य पनि हो। जिज्ञासु पाठकहरूले यसै दृष्टिकोणबाट यसको अध्ययन गरेमा सबै स्पष्ट हुनेछ।

यसमा मैले आफ्नो आजसम्मको अध्ययन र गुरुमुखबाट प्राप्त ज्ञानको आधारमा यथासंभव शास्त्रीय प्रमाणहरूको उद्धारणसमेत दिएर यो पुस्तक प्रस्तुत गरेको हुँ।

त्यसरी यसमा दिइएका उद्धरणहरूमध्ये कुनै अंशहरू आफूले धेरै अघि संकलन गरेका र कुनै गुरुमुखबाट मात्र अवगत भएका हुँदा हाल तिनका स्थलको यथार्थ स्मरण हुन नसकेकोले कुनै कुनैमा ग्रन्थ र स्थलको उल्लेख नगरिएको पनि छ ।

यसमा सर्वप्रथम एउटा सानो प्रस्तावना दिइएको छ र त्यसमा प्रस्तुत पुस्तक लेख्नाको आवश्यता र पुस्तकका विषयको केही दिग्दर्शन गराइएको छ र मुख्य "कामकला" संबन्धी संक्षिप्त विवरण प्रस्तुत गरिएको छ । त्यसमा प्रसंगात् अग्नि–सोम–सूर्यात्मक रक्त शुक्ल र मिश्र बिन्दुको सम्बन्धमा पनि छोटकरी परिचय दिइएको छ र तन्त्रको सांकेतिक भाषाको गुरुमुखगम्य रहस्यार्थको नमूनास्वरूप केही गूढ श्लोकहरूको अर्थ पनि देखाइएको छ ।

तन्त्रशास्त्र प्राचीन कालदेखि नै प्रचलित आगमशास्त्र हो र यो एउटा छुट्टै वाङ्मयको रूपमा रहिआएको छ । यसको क्षेत्र अति नै विशाल र विस्तृत छ । यसको आफ्नै उत्कृष्ट विशेषता छ र यो आफू आफैमा परिपूर्ण छ । यो विभिन्न संप्रदायमा विभाजित छ र यसका अनेक शाखा उपशाखाहरू छन् ।

तन्त्रशास्त्र पनि एउटा आफ्नै ढंगको विज्ञान वा विशिष्ट ज्ञानको प्रतिपादन गर्ने शास्त्र हो र यो केवल भौतिक विज्ञानको मात्र प्रतिपादन गर्ने नभई मुख्यतया विशेष प्रकारको रहस्यमय आध्यात्मिक विज्ञानको प्रतिपादन गर्ने शास्त्रको रूपमा प्रसिद्ध रहिआएको छ ।

यसका आफ्ना आफ्ना आचार उपासनाक्रम र मन्त्र यन्त्रका महत्त्वपूर्ण विषयहरू तत्तद् ग्रन्थमा धेरैजसो सबै आफ्नै गूढ सांकेतिक भाषामा प्रतिपादित हुन्छन् र फलतः देवमन्दिरको कामकलासंबन्धी रतासन मूर्तिहरू पनि तिनै सिद्धान्तको आधारमा आफ्ना पीठसंबन्धी रहस्यलाई अधिकार र योग्यता नभएका व्यक्तिहरूबाट जोगाएर गोप्य राख्न र अधिकार भएका योग्य साधकहरूलाई तिनैबाट तत्संबन्धी संकेत प्रदान गरेर शिवको आफ्नो परम्परा अक्षुण्ण राख्न रहस्यमय विचित्र ढंगले कलापूर्ण मूर्तिका रूपमा राखिएका चित्रमय मूक भाषाका द्योतक रूप हुन् ।



त्यस कारण तन्त्रसंबन्धी यस्ता गूढ भाषा र तीद्वारा प्रतिपादन गरिएका रहस्यपूर्ण विषयहरू सर्वसाधारणका लागि स्वतः सुबोध नहुनु स्वाभाविकै हो । यसमा कुनै आश्चर्य मान्ने कुरो छैन । किनभने यो विषय नै यस्तो छ । अत एव यहाँ साधारण तथा शिक्षित जिज्ञासुहरूलाई केवल मोटामोटी रूपमा विषयबोध गराउने उद्देश्यले यो पुस्तक लेखिएको छ । त्यसैले यो सबैलाई सरल र सुबोध हुन्छ भन्न सकिंदैन । प्रचलित भाषामा सरल शैलीमा लेखिएका कतिपय आधुनिक विज्ञानका विषयहरू पनि त साधारण शिक्षित जगत्लाई त्यसै बुझ्न कठिन पर्दछ भने हाम्रा प्राचीन तन्त्र शास्त्रका गूढ सांकेतिक भाषामा लेखिएका विषयहरू खालि पुस्तकका भरमा एकपल्ट किताब हेर्दैमा सबैले कसरी बुझ्न सकून् । किताबमा लेखिंदैमा सबै विषय सबैले बुझ्न सक्ने हुन्छ भन्न पनि त सकिंदैन । तन्त्रको सिद्धान्त त्यसमा प्रतिपादित विषयको परिभाषा त्यसको परम्परा र तिनको मान्यताहरूका संबन्धमा अलिकति पनि ज्ञान नभएको सर्वसाधारण शिक्षितैले पनि यसलाई त्यसै बुझ्न सक्तैनन् ।

तन्त्रका यस्ता रहस्यमय गूढ विषयहरू गुरुमुखगम्य छन् र तिनलाई राम्ररी बुझ्न एउटा राम्रो आधार तयार हुनुपर्दछ । यस विषयको राम्रो ज्ञान प्राप्त गर्न चाहनेले तन्त्रको राम्रोसंग छुट्टै अध्ययन गर्नुपर्दछ र त्यसको सबै परिभाषा बुझ्न सक्ने हुनुपर्दछ ।

तन्त्रविषयको अलिकति पनि ज्ञान नभएका, त्यसको आधारै नभएका, त्यसको परिभाषा नै नबुझेकाहरूलाई यसमा प्रतिपादित विषयहरू अस्पष्ट र दुर्बोध भए भने त्यसमा मेरो केही भन्नु छैन । ती विषयहरूको पूरापूर विश्लेषण गरेर विस्तृत व्याख्या गर्न लाग्ने हो भने एउटा अर्कै विशाल ग्रन्थ तयार हुन जानेछ । त्यस कारण प्रस्तुत पुस्तकमा संबद्ध तान्त्रिक सिद्धान्तको एउटा मोटामोटी संकेत गरेर मुख्य विषय देवालयहरूमा कामकलासंबन्धी मूर्तिहरूको स्थापना के आधारमा किन गरियो भन्ने सम्म मात्र दर्शाउने चेष्टा गरेको हुं ।

यस पुस्तकबाट जिज्ञासु शिक्षितवर्गले केही आधारभूत कुराहरूको ज्ञान गरी अनि तिनैको माध्यमबाट अरू साधारण जनतालाई यसको ज्ञान गराउनु यसको एउटा लक्ष्य हो ।

यसमा परेका हरएक उक्ति र प्रत्येक विषयको पूरापूर विश्लेषण गरी उक्तिपिछे सोद्धरण शास्त्रको प्रमाण दिएर ती सबैको विस्तृत व्याख्या गर्न शिवजीले मात्र सक्ने र अरूले गरेर साध्य मात्र नहुने होइन कि असंभवं हुने र यस्ता कतिपय विषय त अहिले सर्वसाधारणमा देखिएका पाइएका ग्रन्थहरूमा प्रत्यक्षतः सुलभ नभई केवल गुरुमुखबाट मात्र परम्परागत रूपमा पाइने हुँदा तिनलाई शास्त्रीय उक्ति दिएर प्रमाणित गर्न नसकिने पनि छन्। यस्तो यो विषय यत्र तत्र शास्त्रमा स्पष्टतया उल्लिखित र सर्वत्र सुलभ हुने सबैले बुझेको वा बुझ्ने भई दिएको भए रामायण र महाभारतको कथा झैं यसरी यहाँ पुस्तकको रूपमा लेखिरहनुपर्ने थिएन होला र लेख्नुपर्ने भए अहिलेसम्म सबैले प्रकाशित गरिसकेका हुन्थे होलान् र यस्ता कतिपय विषयहरू कतै कुनै पुस्तकमा नभेटिए पनि कुनै लेखकको वा व्यक्तिविशेषको मस्तिष्कबाट उसले आफ्नो परिपक्व बुद्धिले आत्मानुभवले मथेर विचारेर निकालेको पनि हुन सक्छ। त्यस्ता विषयको शास्त्रीय उक्ति प्रमाणहरू दिन कदापि संभव हुँदैन।

अन्त्यमा यो पुस्तक तयार गर्न आवश्यक यथायोग्य सहयोगसहित यसको प्रकाशनको अभिभारा समेत नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालयले लिइदिएकोले अरू बढी उत्साहसाथ यो पुस्तक तयार गरी यहाँ पाठक वर्गको हातमा राख्न संभव भएको हो।

यो पुस्तक तयार गर्नमा सर्वप्रथम श्री पण्डित कृष्णप्रसाद भट्टराईज्यूबाट हरकुरामा यथेष्ट सहयोग प्राप्त भएको छ। वहाँको पूर्ण सहयोग विना यो पुस्तक लेख्न संभव नै हुने थिएन। वहाँको हर प्रकारको यथेष्ट सहयोगको लागि म वहाँमा हार्दिक कृतज्ञतासाथ सधन्यवाद सादर प्रणाम गर्दछु।

नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालयका तर्फबाट सहयोग प्राप्त गराईदिनुभएकोमा उक्त संस्थाका निर्देशक प्रति हार्दिक कृतज्ञता प्रकट गर्दछु।



श्री ५ महाराजाधिराज सरकारको हुकुम बमोजिम छोरा नानी प्रमुख सेनानी श्री नीरविक्रम "प्यासी" ले श्री ५ को सरकार, पुरातत्त्व विभागद्वारा देव देवालयहरूका फोटोहरू तथा राजदरवार पुस्तकालयबाट तन्त्रसंवन्धी अंग्रेजी पुस्तकहरू उपलब्ध गराईदिएकोमा उनलाई पनि सधन्यवाद हार्दिक स्नेह प्रकट गर्दछु। साथै श्री ५ को सरकार पुरातत्त्वविभाग प्रति पनि कृतज्ञता प्रकट गर्दछु।

पुस्तक तयार गर्ने क्रममा विभिन्न आवश्यक प्रबन्धहरू मिलाई थप फोटोहरू उपलब्ध गराइदिएकोमा नाति नानी डा. श्रीरत्न शमशेर ज.ब.रा. लाई पनि हार्दिक स्नेह प्रकट गर्दछु।

पण्डित श्रीहरमोहन भट्टराईज्यूले यस पुस्तकको प्रतिलिपि गरी दिनु भएकोमा वहाँलाई पनि सप्रेम धन्यवाद दिन्छु।

नानी श्री शन्तनु प्रताप राणाले अन्य संबद्ध पुस्तकहरूद्वारा सहयोग गरेकोमा निजलाई सस्नेह आशिष दिन्छु।

छोरा नानी श्री मछेन्द्र शमशेर ज.ब.रा. ले पुस्तक तयार गर्ने संवन्धी यावत् प्रवन्ध र अन्य आवश्यक कामहरू समेत गरिदिएकोमा र छोरा नानी श्री गोरख शमशेर ज.ब.रा. ले पाण्डुलिपि प्रतिहरू टाइप गर्नमा सघाई दिएकोमा दुवैलाई सस्नेह आशिष दिन्छु।

अन्त्यमा यसमा संयोगवश कतै केही अशुद्धि रहन गएको भए त्यसमा विद्वान् पाठकहरूले सच्याई पढनुहुनेछ भन्ने आशा गर्दछु।

धनशमशेर ज.ब.रा.
नक्साल।

# प्रस्तावना

नेपाल प्राचीन कला र कालीगढीले पूर्ण देव–देवीका मन्दिरहरूको लागि विश्वप्रसिद्ध छ। वास्तुकला र शिल्पकलाको क्षेत्रमा नेपालले परापूर्व-कालदेखि नै विशिष्ट एवं मौलिक परम्परा कायम राख्दै आएको कुरा सर्वविदितै छ। नेपालका मन्दिरहरूमा हुने धातु, पत्थर, काठ आदिका सुन्दर, आकर्षक मूर्तिहरू स्वदेशी तथा विदेशी विद्वान्हरू कला–समीक्षक तथा अन्वेषकहरू र पर्यटकहरूको लागि ठूलो रहस्य जिज्ञासा र खोजीको विषय भएको छ। नेपालका यस्ता कलात्मक मूर्ति तथा चित्रहरूको निर्माण तन्त्रमा आधारित भएकोले पनि रतासन मूर्तिहरू झन् रहस्यमय हुन गएकोले यसको सही व्याख्या गर्न कठिन हुने सबैले महसूस गरी आएका छन्। बाहिर देख्दा शृङ्गारी र अश्लील जस्ता मूर्तिहरू मन्दिरमा किन राखिए होलान् भन्ने कुराको जिज्ञासा सर्वसाधारणलाईसमेत लाग्नु एक किसिमले स्वाभाविक पनि छ। यस्तो चित्र मन्दिरका टुंडालहरूमा रहनुमा अवश्य पनि कुनै गूढ तात्पर्य होला भन्ने मानिसहरू एकातिर छन् भने अर्कोतिर मन्दिरलाई वज्रपातबाट जोगाउन त्यसो गरिएको हो भन्ने मानिसहरू पनि कम छैनन्। फेरि यस्ता रतासन मूर्तिहरूलाई लौकिक रतिलीलाका कामोद्दीपनका चित्रहरू झैं अश्लील मानी हस्सीमा उडाएर हिंड्ने बुज्रुगहरू पनि कम छैनन्। यति मात्र होइन, विदेशी आगन्तुक अनुसन्धानकर्ता र पर्यटकहरूलाई गाइड र दोभाषेहरूले यसबारे कपोलकल्पित वा गलत व्याख्या गर्ने गरेकाले मन्दिरका यस्ता महत्त्वपूर्ण रतासन मूर्तिहरूबारे भ्रम फैलन गएको छ। स्वदेशी र विदेशी विद्वान्हरूले यसबारे चाख देखाएर यसको महत्त्व दर्शाउन केही पुस्तकहरू र लेखहरू प्रकाशित गरेका छन्। तर कलाको दृष्टिले अति रहस्यमय मानिने मन्दिरहरूका विशेष महत्त्वपूर्ण अंग टुंडालमा रहेका रतासन मूर्तिहरूबारे स्पष्ट र यथार्थ



ज्ञान हुन सक्ने पुस्तकहरू आजसम्म प्रकाशित भएको थाहा पाइएको छैन। टुंडालमा रहेका रतासन मूर्तिहरूको रहस्य जान्न बुझ्न खोज्नुको सट्टा त्यसलाई अश्लील एवं हास्यास्पद रूपमा लिइनु निश्चय पनि राम्रो कुरो होइन। त्यसैले आफ्नो ज्ञान र क्षमताले भ्याएसम्म जनसाधारणमा कामकलासम्बन्धी यथार्थ ज्ञान गराउन र यस कलाको महत्त्वलाई लोप हुनबाट बचाउन यस "कामकला रहस्य" को रचना गरिएको हो। सर्व साधारणलाई कामकलासम्बन्धी यथार्थ ज्ञान गराई स्वस्थ धारणा सिर्जना गर्नु यसबारे उठेका भ्रमहरू निवारण गरी नेपालको गौरवमय तान्त्रिक परम्परा र तन्त्रमा आधारित कला अक्षुण्ण राख्नु यसको अभीष्ट रहेको छ।

नेपालका प्रसिद्ध मन्दिरका टुंडाल र यसमा रहेका कामकलाको तान्त्रिक रहस्यहरू विशद रूपमा उद्धृत गर्ने काम निश्चय पनि सजिलो छैन। तर पनि नेपालको गौरवका प्रतीक देव–देवीका मन्दिरहरूको महत्त्वलाई बढाउँदै लाने उद्देश्यले टुंडालका रतासन मूर्तिहरूबारे यथाशक्य अध्ययन एवं अन्वेषण गरी प्रस्तुत पुस्तकमा तान्त्रिक एवं कलात्मक रहस्यहरूको उद्घाटन गर्ने प्रयास गरिएको छ।

❡ धेरैलाई तान्त्रिक कामकला र लौकिक रतिलीला दुवैलाई एकै ठान्ने भ्रम भएको देखिन्छ। तर यी दुवैमा आकाश जमीनको भेद छ। काम भनेको "काम्यते योगिभिरिति" अर्थात् योगीहरूले चाहना गरिने ब्रह्म वा ईश्वर हो। कला भन्नाले कलयति (कामम्) अर्थात् अव्यक्त कामरूप ईश्वरलाई अभिव्यक्त गर्ने एक किसिमको शक्ति भन्ने बुझिन्छ। फेरि "क" आकाशको सूचक र "ल" पृथ्वीको सूचक हुनाले 'कला' सर्वव्यापिनी प्रपञ्चेश्वरीको प्रतीक भन्ने बुझिन्छ। अतः 'कामकला' निराकार ईश्वरको विविध प्रकारको लीलाको प्रदर्शन हो। लौकिक रतिलीलाचाहिँ कामशास्त्रमा वर्णन गरिएको दाम्पत्यजीवनको विधान हो।

---

❡ यहाँ उल्लिखित 'कामकला' नाद र विन्दुहरूको अरू बढी विश्लेषणात्मक अध्ययनको लागि 'गणेश एण्ड को.', मद्रासबाट प्रकाशित 'दि सर्पेन्ट पावर' को परिचय हेरे हुन्छ।

कामकला मुख्य पांच किसिमका छन् । जस्तै–

१. अहंरूपी कामकला– अहं अर्थात् म भन्नु नै कामकला हो । "अ" र "ह" को बीचमा सबै अक्षर अन्तर्गभित भएर रहेको छ। त्यसैले "अहमाकाराख्यसिद्धकामकलाम्" भनेर श्रुतिले बताएको छ । त्यस कारणले यो एक प्रकारको नादमय कामकला हो ।

२. विन्दुरूप कामकला - उपरोक्त अहंरूपी कामकला 'अ' रूपी प्रकाशको "ह" रूपी विमर्श रूप ऐनामा टक पर्न जांदा चित्तमा स्फुरण भएको विन्दु रूप हो । यही विन्दु विकसित भएर चणकाकार बन्यो र त्यही फुटेर दुइ फ्याक प्रकाशांश श्वेतविन्दु र विमर्शांश रक्त विन्दु दुइ विन्दु बन्न गए । फेरि सोही दुइ बिन्दुको परस्परानुप्रवेश हुँदा तेस्रो मिस्र विन्दु बन्न गयो । अनि क्रमशः श्वेतविन्दु चन्द्रविन्दु रक्तविन्दु अग्निविन्दु र मिश्रविन्दु सूर्यविन्दु बने । त्यसपछि चित्तको ज्ञान, इच्छा र क्रिया तीन शक्ति वा अवस्थाको भेदबाट एक त्रिकोण बन्न गई त्यो त्रिकोणमा यी तीनवटा विन्दुको खेलबाट विन्दुरूप कामकला बन्दछ । यस विषयमा विस्तृत वर्णन गर्नुपर्ने हुंदा पुस्तकको अध्ययनबाट नै विदित हुने छ। यस विषयमा एउटा सानो आगमोक्ति यस्तो छ—

"अग्रविन्दुपरिकल्पिताननामन्यविन्दुरचितस्तनद्वयीम् ।
नादविन्दुरशनागुणास्पदां नौमि ते परशिवे परां कलाम् ॥"
–कामकलाविलास चिद्वल्ली पृ. २१

३. भावरूप कामकला– अब सोही अहंमा सः रूप ब्रह्मको आभास पर्दा अहं सः = हंसः सः अहं = सो ऽ हं इत्यादि भावरूप कामकला बन्दछ।

४. अक्षरात्मिका कामकला 'ई'– यो कामकला स्वतः स्पष्ट नै भएको हुँदा यसको बारेमा केही भनिरहनुपरेन ।

५. रत्यात्मक कामकला– जुन कामकलाको अर्थ लगाउदा काम भन्नाले कन्दर्प अर्थात् कामदेव र कला भन्नाले त्यही कामको रतिलीला वा विलास भन्ने बुझिन्छ, जसलाई रत्यात्मक कामकला भनिन्छ ।



यी तथाकथित अश्लील रतासन मूर्तिहरूले यस्तो पवित्र देवालयमा किन ठाउँ पाए भन्ने विषयमा बडो गहन कुरा छ । यस सम्बन्धमा 'सिद्धडामर तन्त्र' मा यस्तो उक्ति छ ।

तन्त्र, मन्त्र, योग र यन्त्रहरूका रहस्यहरू कहिले शिवजीले सोध्ने पार्वतीले बताउने, कहिले पार्वतीले सोध्ने शिवजीले बताउने गरेर गौरीकञ्चुकीय तन्त्र, महायोनितन्त्र इत्यादि पार्वतीले लुकाएर राख्नुभएका तन्त्रहरूसमेत खोतलिए। रहस्यहरू खोतलिईसकेपछि शिवजी झल्यांस्स हुनुभयो र पार्वती पनि झस्किनुभयो र शिवजीले जम्मै खोतली खोतलीकन मन्त्रको उद्घाटन गरिदिनुभएपछि कलियुगमा सबैजना मुक्ति पाएर स्वर्ग जान्छन्, सबैजना मुक्त भएर ब्रह्मा, विष्णु, महेश्वर, आफै हुन सक्ने सम्म रहस्यको उद्घाटन भई सक्यो भने अब के बाँकी रह्यो र कलियुगको त प्रभाव नै रहदैन भनी जगतै नाश गर्छु भनेर धुमधामसंग जाग्नुभयो र जगतै नाश गर्न थाल्नुभयो। अनि शिवजीले त्यहाँबाट भागेर अन्यत्र एकान्तस्थानमा गई विष्णुको स्मरण गर्नु हुँदा विष्णु पाल्नुभएर कति कारणले बोलाउनुभयो भनी शिवजीलाई सोद्धा शिवजीले भन्नुभयो "तन्त्रको रहस्यका पूरै उद्घाटन भयो। पहिले मैले पनि होस गरिन र पार्वतीले पनि होस गरिनन् । आफै ब्रह्मा, विष्णु, महेश्वर हुने सम्म पनि विधिहरूको जम्मै उद्घाटन भयो । फलस्वरूप पार्वतीले जाज्वल्य भएर जगतै भस्म गर्न लाग्नुभयो अब म के गरूं ? यस्तो सुन्ना साथ यो धन्ना नमानी वक्स्योस् यसको उपाय म गर्छु भनेर विष्णुले शिवजीसंगै पार्वतीकहाँ गएर "आमा किन रिसानी भयो ?" "भनेर सोध्नुहुँदा" हेर्नुहोस् न आफै ब्रह्मा, विष्णु, महेश्वरसम्म हुने फेरि ब्रह्माण्डै सृष्टि गर्न सक्ने खास ब्रह्मा स्वरूप हुने सम्म पनि जम्मै विधि–विधान शिवजीले प्रकाश गर्नुभयो। यसरी प्रकाश भएर कलियुगमा सबैजना धर्मात्मा हुने भएपछि कलियुगको प्रभावै रहेन। त्यसैले अब म जगतै भस्म गर्छु, अब जगत् राख्दिन भन्ने पार्वतीको वचन सुन्नासाथ बडो नम्र भएर हात जोडेर विष्णुले–आमा, यस्तो रिस देखाउनु उचित छैन। मेरो कुरा सुनिवक्स्योस्–यसको सजिलो उपाय छ, म ठीक गर्छु भनेर भन्नुभयो। अनि "के गर्नुहुन्छ त ?" भनेर पार्वतीले सोध्नु हुँदा विष्णुले–द्वापरको अन्त्य हुने वित्तिकै कृष्ण द्वैपायन नामको वेदव्यास भएर म जन्मनेछु र १८ पुराण, १८ उप–पुराण यस्तो किसिमले

बनाउछु कि त्यसमा कथाहरू, इतिहासहरू बाहिर देख्दा चुट्किला शृङ्गारी देखाएर मन्त्रको अर्थ, योगको अर्थ, रहस्यहरू त्यसै भित्र घुसाई दिन्छु। भित्र विचार गरेर गुरुबाट ज्ञान पाएमा त्यसको यथार्थ रहस्य थाहा हुने गरी "गुरुवक्त्रगम्य" गराउने छु। योग्य व्यक्तिहरू यथार्थ तत्त्व पाएर मुक्त भै हाल्छन् – अयोग्य व्यक्तिहरू चाहि चुट्किला मट्किला कथाहरूमा रूमल्लिने छन्। यी पुराणहरूमध्ये कुनैमा शिव ठूलो कुनैमा विष्णु ठूलो, कुनैमा गणेश ठूलो इत्यादि यस्तै गरेर प्रत्येक पाञ्चायनको नाममा बन्ने छ। शिव ठूलो भनेर वर्णन गरेकोमा शिवकै मन्त्रहरूको उद्धार, विष्णु ठूलो भनेर वर्णन गरेकोमा विष्णुकै मन्त्रहरूको उद्धार, गणेश ठूलो भनेर वर्णन गरेकोमा गणेशकै मन्त्रहरूको उद्धार गरेर राखिदिनेछु भन्नुभयो। विष्णुको यस्तो वचन सुनेर "तपाईले ठीक अठोट गर्नुभयो, कलियुगमा तपाई नै विशेष पूज्य हुनु हुनेछ" भनेर पार्वती खुशी भई आशीर्वाद समेत दिनुभयो। अनि प्रकाश भैसकेको तन्त्रबारे के गर्ने नि भनेर सोध्नुहुँदा, शिवजीले पनि यस्तै गरेर योगाभ्यासको विधान अश्लील श्लोकमा र मन्त्रोद्धार चाहिं अश्लील मूर्तिमा निहित गराउनु हुनेछ भन्ने विष्णुले सम्मति दिंदा शिवले पनि सो कुरा स्वीकार गर्नुभयो। त्यसमा पार्वती समेत खुशी भई उहाँले पनि त्यही सल्लाह मान्नु भयो र सोहीबमोजिम भयो।

अनि अठाह्र पुराण, अठाह्र उपपुराण विष्णु (वेदव्यास)ले बनाए। जस्तो कि सातशय श्लोकको चण्डीमा अयुताक्षरी अर्थात् दश हजार अक्षरको चण्डिकाको मन्त्र उद्धार भएको छ। फेरि चण्डीको प्रत्येक श्लोकमा, प्रत्येक मन्त्रको पनि उद्धार भएको छ। यसरी सप्तशती चण्डीबाट भएको अयुताक्षरी मन्त्रोद्धार गुरुमुखबाट जानिन्छ। त्यस्तै देवीभागवतबाट भुवनेश्वरीको अयुताक्षरी मन्त्रको उद्धार भएको छ। श्रीमद् भागवतबाट लक्ष्मीनारायणको अयुताक्षरी मन्त्रको उद्धार भएको छ, लिङ्गपुराणबाट शिवजीको किसिम किसिमका योगको विधान दर्शाइएको छ। त्यस्तै शिवजीले वर्णन गर्नुभएको तन्त्रका श्लोकहरूमध्ये यहाँ तीन श्लोकको वर्णन गरिन्छ। जस्तो कि–

१. कुलयुवतीसुयोनौ भुञ्जमानः प्रमत्तः भ्रमति सगणिको वै गेहगेहात् क्रमेण।
विहरति कुलयोगी मातृयोनौ जनो यः स भवति भुवनेस्मिन् साधकेन्द्रो महात्मा॥
(गुरुमुखबाट अवगत)



रहस्यार्थः– यस श्लोकमा उल्लेख गरिएको साधक योगी बाहिरी दृष्टिबाट हेर्दा पथभ्रष्ट र सारै ठूलो व्यभिचारी जस्तो देखिन्छ। तर यहाँ कुलयुवती भनेर कुलकुण्डली र योनि भन्नाले तिनको मूलाधारवर्ती त्रिकोणलाई लिइन्छ।

गणिका शब्दले पनि उही कुण्डलीलाई लिइन्छ, गणिका भनेको कुलटा हो र यहाँ कुण्डली पनि षट्चक्रवर्ती प्रत्येक पुरुषहरूका साथ संपर्क राख्तै हिड्ने हुनाले उसलाई गणिका भनिएको हो। यसरी यहाँ मूलाधारदेखि कुण्डलीलाई उठाएर उसलाई साथै लिई यौगिक प्रक्रियाद्वारा क्रमशः घर घर अर्थात् चक्रै पिच्छे घुम्दै अन्ततोगत्वा मातृयोनिमा अर्थात् सहस्रारवर्ती अकथचक्रमध्येको त्रिकोणमा पुगेर आनन्दमग्न भई विहार गर्दछ अर्थात् समाधिस्थ भई तन्मय बन्दछ भने त्यस्तो योगी अवश्य नै श्रेष्ठ महात्मा हुन्छ। यसको तात्पर्य यही हो।

२. रजस्वलाभगाद् योगी प्रद्रवत् सुरतामृतम्।
नित्यमास्वादयेद् यस्तु स भवेदजरामरः॥

अर्थात् रजस्वलाको योनिबाट चुहिएको सुरतामृत (रतिक्रीडा वा योनिमथनबाट निस्केको रस) जुन योगीले नित्य चाख्तछ अर्थात् पान गर्दछ त्यो योगी अजर र अमर बन्दछ।

रहस्यार्थ– यो श्लोकको पनि बाहिरी अर्थ हेर्दा एकदम अश्लील र घिन लाग्ने जस्तो देखिन्छ तापनि यसको वास्तविक अर्थ अर्कै छ। यसमा खेचरी मुद्राको संकेत गरिएको छ। जुन साधक योगी योगाभ्यासको क्रममा खेचरी मुद्रा गरेर माथिबाट चुहिएको अमृतरस नित्य पान गर्दछ त्यो अवश्य नै अजरामर बन्दछ। त्यसमा जिब्रोलाई माथितिर फर्काएर लिगलिगे निरको रन्धमा लगेर टप्प जोडेर राखिन्छ। यसै प्रक्रियालाई मैथुन जस्तो संकेर यहाँ त्यसलाई "सुरतः" शब्दले व्यवहार गरिएको हो र त्यस अवस्थामा माथिबाट चुहिने रस "लाक्षरसाभ" हुने हुँदा त्यसलाई "रज" मानेर, त्यस्तो रस चुहिएर आउने अकथचक्रवर्ती त्रिकोणलाई माथि कै यहाँ "रजस्वला" को "भग" भनेर बताइएको हो। यसको रहस्यार्थ यही हो।

३. पीत्वा पीत्वा पुनः पीत्वा यावत् पतति भूतले ।
उत्थाय च पुनः पीत्वा भूयो जन्म न विद्यते ।।१००।।

–कुलार्णवतन्त्र सप्तम उल्लास, (पृ. २२२)

अर्थात् पिउदा पिउदा वेसरी पिएर (वेसरी मद्यपान गरेर) एकपल्ट भुइमा लडीकन उठेर फेरि पनि पान गर्नाले फेरि जन्म लिनुपर्दैन।

रहस्यार्थ– यो तेस्रो श्लोकको पनि माथि जस्तै बाहिरी अर्थबाट योगी भएर वेसरी मद्यपान गर्ने भने जस्तो देखिन्छ। तर यसमा पनि माथि बताए कैं अमृतपान गर्दै कुण्डलीलाई उठाएर आरोह अवरोह क्रमले पालैसित षट्चक्रहरूमा लैजांदै मूलाधारमा ल्याउदै गरेर अन्त्यमा फेरि माथि नै पुर्याएर उक्त अमृत रस पान गरेको गर्व गर्न सक्यो भने त्यसको फेरि अर्को जन्म हुँदैन भनेर यसमा लययोगको संकेत गरिएको छ। यसको रहस्यार्थ यही हो। अश्लील मूर्तिहरूको मन्त्रोद्धारको सम्बन्धमा 'मातृकाहृदयतन्त्र' मा यस्तो उक्ति छ–

"ककारादिक्षकारान्ता वर्णास्ते शिवरूपिणः।
समस्तव्यस्तरूपेण षट्त्रिंशत्तत्त्वविग्रहाः ।।
अकारादिविसर्गान्ताः स्वराः षोडश शक्तयः।
नित्या षोडशकात्मानः परस्परममी युताः।।
शिवशक्तिमया वर्णाः शब्दार्थप्रतिपादकाः ।
शिवः स्वरपराधीनो न स्वतन्त्रः कदाप्यसौ।।
स्वराः स्वतन्त्रा जायन्ते न शिवस्तु कदाचन।।"

(आनन्दलहरी वश्लोकको सौभाग्यर्धनीटीकाबाट उद्धृत, पृ. ५)

अर्थात् "क" देखि "क्ष" सम्मका व्यञ्जन वर्णहरू शिवस्वरूप हुन्छन् र ती समष्टि र व्यष्टि रूपबाट छत्तीस तत्त्वात्मक हुन्छन्। "अ" कारदेखि विसर्गसम्मका अर्थात् अ, आ, इ, ई ‥ ‥ इत्यादि १६ स्वरवर्णहरू चाहिं शक्तिस्वरूप हुन्छन् र ती नित्याषोडशिका स्वरूप हुन्छन्। यिनै शिवशक्तिस्वरूप स्वर र व्यञ्जन वर्णहरू परस्पर मिलेर शब्दार्थको प्रतिपादन



गर्दछन्। शिवस्वरूप व्यञ्जन वर्ण आफू स्वतन्त्र हुँदैनन्। यी शक्तिस्वरूप स्वरको अधीनमा हुन्छन् र शक्तिरूप स्वरचाहिं सदा स्वतन्त्र हुन्छन्। अतः शिवबाट व्यञ्जन वर्णको उद्धार र शक्तिबाट स्वर वर्णको उद्धार हुन्छ। त्यसउसले रतासनको चित्रमा पुंरूपबाट व्यञ्जनको र स्त्रीरूपबाट स्वरवर्णको उद्धार भएको हुन्छ।

आम्नायभेदले एउटै बीजको ६ किसिमको अर्थ हुन्छ। त्यस कारणले एउटै बीज रतासनको भेदले भिन्न भिन्न आम्नायात्मक अर्थ दिने हुन्छ। जस्तो कि सपरीत रतिबाट मायाबीजको उद्धार हुन आयो भने त्यो पूर्वाम्नायात्मक अर्थ दिने हुन्छ। फेरि सोही बीज विपरीत रतबाट उद्धार हुन आएमा दक्षिणाम्नायात्मक अर्थ दिने हुन्छ। यस्तै प्रक्रिया अरू अरू रतासन र आम्नायमा पनि बुझ्नुपर्छ।

मन्त्र जति रतासनमा गोप्य गराएर राखिन्छ। देवलहरूमा त्यही रतासनहरू टांगिइन्छन्। रतासनबाट मन्त्रहरूको उद्धार हुन्छ। त्यस कारण देवल देवलमा कुन देवताको स्थापना गरिएको छ, कुन मन्त्रले पूजा गरिन्छ, कस्तो विधिले पूजा गरिन्छ आदि कुरा बुझ्न यिनै टुंडालका रतासन मूर्तिहरूको सहारा लिन सकिन्छ। रतासन र मूर्तिहरूबाट दीक्षित साधकहरूलाई मन्त्र र सम्बद्ध देवताको स्वरूप थाहा हुन्छ। रतासनहरूबाट पीठ जाग्रत हुने कुरा पछि यसै पुस्तकको अध्ययनबाट थाहा हुनेछ। सबै जगत् देवताहरूको अधीनमा भए कैं देवताहरू पनि मन्त्रहरूको अधीनमा हुन्छन् भन्ने कुरा "दैवाधीनं जगत् सर्वं मन्त्राधीनाश्च देवताः" भन्ने उक्तिबाट स्पष्ट हुन्छ। अतः यस्ता रतासनहरू मन्त्रका संकेतस्वरूप हुन् भन्ने बुझ्नुपर्छ।

मन्दिरहरूका टुंडालमा रहेका रतासन मूर्तिहरू वज्रनिवारणको लागि रहेको भन्ने वचन एकदेशीय हो। किनभने वज्रनिवारण मात्र एउटा कारण होइन। यो मात्र एउटा कारण भए एउटा मात्र रतासन मूर्ति राखे पुग्नेमा धेरै किसिमका मूर्तिहरू राख्नुपर्ने आवश्यकता नै पर्दैनथ्यो। फेरि वज्रनिवारणको लागि यसो गरिएको हो भने देवताको मन्दिरमा मात्र रहने, मान्छेको घर भवनहरूमा किन नरहने ?

यस "कामकला रहस्य (प्रथम खण्ड) को प्रथम पटलमा कामकलाको रहस्य र यसको भेद, र तोरणको महिमाको वर्णन, दोस्रो पटलमा पीठ देवताको जार्गातको लागि हुने क्रियाको वर्णन, तृतीय पटलमा पञ्चमी मूर्तिको रहस्यको वर्णन हुनेछ, जुन पञ्चमी मूर्तिलाई रत्यात्मककामकला भनिन्छ। चतुर्थ पटलमा मूर्तिहरुबाट मन्त्रोद्धारको झलक र पञ्चम पटलमा नवसागर (नक्साल) भगवती पीठको र तिनको देवालयमा रहेको रहस्यको वर्णन गरिन्छ। नक्साल भगवती पीठको सर्वप्रथम रहस्योद्‌घाटन यहाँ गरिएको छ।

यस पुस्तकको दोस्रो खण्डको प्रथम पटलमा गुह्येश्वरी पीठको पौराणिक र ऐतिहासिक सहितको उत्पत्ति र त्यस पीठको आगमिक देवताको रहस्य झल्काइएको छ। यस पीठको साथसाथै यस पटलमा नेपालमा उत्पत्ति भएका अष्टमातृकाहरू, जयवागीश्वरी वत्सलादेवी र राजराजेश्वरीको समेत रहस्य झल्काइएको छ। द्वितीय पटलमा पशुपतिनाथबारे लेखिएको छ। तृतीय पटलमा भक्तपुरका भैरवनाथ र 'न्यातपोल'को कुरा परेको छ। चतुर्थ पटलमा गाणपत्य, वैष्णव र शैव मन्दिरहरूमा रहेका तोरणबारे रहस्योद्‌घाटन भएको छ। पञ्चम पटलमा तुलजाको पीठबारेको रहस्योद्‌घाटन गरिएको छ। षष्ठ पटलमा कान्तिपुरका तुलजा मन्दिरको विषयमा लेखिएको छ। उस्तै गरी सप्तम पटलमा भक्तपुर तुलजाको द्वारको रहस्य र त्यस ठाउँका पशुपति वत्सला आदि मन्दिरका टुंडालहरूको रहस्यको झलक पनि देखाइएको छ।

यसै गरी पछि अरू खण्डमा काठमाडौं उपत्यकाका अरू पीठहरूको पनि यथाशक्ति यस्तै किसिमले वर्णन गर्दै लगिनेछ। यस पुस्तकले जिज्ञासुहरूको जिज्ञासा पूरा गर्नेछ भन्ने आशा लिएको छु। श्रीजगदम्बाको जो इच्छा।

—ग्रन्थकार



॥ ॐ ॥

नमः परदेवतायै

# प्रथम पटल

धर्मस्य सूक्ष्मा गतिः भन्ने शास्त्रको उक्ति छ। त्यस उसले यसको रहस्य आफ-आफ्नो परंपरानुसार आफ-आफ्नै गुरुबाट बुझ्नुपर्छ। बाहिरी धर्म त आफ्नो कुलबाटै बुझिन्छ। जस्तो कि हामी हिन्दू हौं। किनभने हामी हिन्दू कुलबाट जन्म्यौं। त्यसउसले हिन्दू धर्म हाम्रो धर्म भयो। त्यसको विरुद्ध गयौं भने हामी अधर्मी हुन्छौं। तर हामीमध्ये धेरै जनालाई "धर्म र पुण्य" भनेको एउटै हो; अनि "अधर्म र पाप" भनेको एउटै हो भन्ने भ्रामिक धारणा छ। वास्तवमा धर्म र पुण्य अनि अधर्म र पापमा आकाश-जमीनको फरक छ। किनभने धर्म नगरे अधर्म हुन्छ। अधर्म नगरे धर्म हुन्छ। तर पुण्य नगरे पाप लाग्दैन, फेरि पाप नगर्दैमा पुण्य हुँदैन। अब हामीहरूमा धेरैको मनमा "कामकला" भन्ने बित्तिकै स्त्री-पुरुषको "रतिलीला" भन्ने र कामकलाविषयको उक्ति भन्ने बित्तिकै कोकशास्त्रको उक्ति भन्ने संकल्छौं। त्यो कुरा वास्तवमा ठीक होइन। कामकला भनेको धेरै प्रकारका हुन्छन्। "अहमाकाराख्यसिद्धकामकलाम्" श्रुतिले यसो भनेको छ। अब यस उक्तिको वर्णन गरिन्छ। "अ" कार भनेको "अनुत्तरस्य परामर्शक" अर्थात् अनुत्तर लिपिलाई बुझाउने र "ह" कार भनेको "अनुत्तरस्यैव अनाहतरूपेण किञ्चित् स्थूलतामापन्नस्य परामर्शक अर्थात् अनाहत रूपले अनि स्थूलरूपमा आएको सोही अनुत्तर लिपिलाई बुझाउने हो। यसको मतलब के हो भने "अ" चाहिं मनोवागगोचर अर्थात् मन र वाणी समेतले नजानिने विना तौलको हल्का नाद थियो। अब त्यो अनाहतरूप भएर केही तौलसहितको गह्रौं भाग भएको

"ह" बन्यो। अनि फेरि "म" कार "अनुत्तरानाहतयोर्विश्रान्तिधामपरामर्शकः" अर्थात् अनुत्तर र अनाहत दुवैको विश्राम हुने ठाउँलाई बुझाउने एउटा चुकुल जस्तो हो। फेरि "अ" लाई वर्णमालाको पहिलो अक्षर हुनाले "अनुत्तरलिपि" र "ह" लाई वर्णमालाको अन्त्यको अक्षर हुनाले "विमर्श" लिपि पनि भन्दछन्। किनभने सबै अक्षरहरू यिनै दुवै अक्षरबाट निस्केका हुनाले यी दुइभित्रै पर्दछन्।

यो "अहं" लाई कामकलाक्षर वा नादमय कामकला भन्दछन्। यसमा "काम" भनेको "काम्यते योगिभिरिति" (योगीहरूले चाहना गरिने) अर्थात् ईश्वर वा ब्रह्म हो। अब कला भनेको कलयति (कामम् इति) अर्थात् सो अव्यक्त कामरूप ईश्वरलाई अभिव्यक्त गर्ने एक किसिमको शक्ति भने हुन्छ। फेरि "क" भनेको आकाशको सूचक र "ल" भनेको पृथ्वीको सूचक हुनाले कला भनेको सर्वव्यापिनी प्रपञ्चेश्वरको द्योतक भन्ने पनि हुन्छ। यसको मुख्य तात्पर्य के हो भने "अ इति ब्रह्म तत्रागतोऽहं" भन्ने श्रुतिवचनबमोजिम "अ" रूप प्रकाशमय ब्रह्मको "ह" रूप विमर्शात्मक ऐनामा प्रतिविम्ब पर्दा अहं अर्थात् "म" भन्ने "अहं" भाव निक्लन गयो। अनि सो अहं रूप ब्रह्ममा "एकोहं नाना स्याम्" भन्ने भाव निक्लन जाँदा सो ब्रह्म नानारूपको बन्यो। यही "अहं" लाई सिद्धकामकला भन्दछन्।

यो अहंरूप कामकला नै एक विन्दुरूप हो। त्यो कस्तो विन्दु हो भने जस्तो सूर्यको किरण एउटा आदर्शरूप ऐनामा पर्दा भित्तामा एक प्रकारको विन्दु अर्थात् टक पर्न जान्छ। त्यस्तै प्रकाशरूप ब्रह्मको किरण विमर्शरूप आदर्शमा पर्दा चित्तरूप भित्तामा "अहं" भावरूप विन्दु उत्पन्न हुन्छ। यस विषयमा श्री १०८ पुण्यानन्दजीको कामकलाविलासमा यस प्रकारले वर्णन गरिएको छ।

> "परशिवरविकरनिकरे प्रतिफलति विमर्शदर्पणे विशदे।
> प्रतिरुचिरुचिरे कुड्ये चित्तमये निविशते महाविन्दुः॥
> चित्तमयोऽहंकारः सुव्यक्ताहार्णसमरसाकारः।
> शिवशक्तिमिथुनपिण्डः कवलीकृतभुवनमण्डलो जयति॥"
>
> —कामकलाविलास श्लो. ४ पृ. १५



अर्थात् परशिवरूप सूर्यको किरणपुञ्जको अर्थात् प्रकाशको विमर्शरूप निर्मल ऐनामा प्रतिविम्ब पर्दा उक्त प्रतिविम्ब वा प्रतिमूर्तिले गर्दा सुन्दर भएको ज्ञानरूप चित्तमय भित्तिमा पूर्णोऽहं अर्थात् म परिपूर्ण परमेश्वर हुं भन्ने रूपको महाविन्दु अन्तर्निविष्ट हुन्छ। "अ" र "ह" रूप दुइ स्पष्ट वर्णको अर्थात् उक्त प्रकाश र विमर्शको समरसाकार रूप जो उक्त चित्तमय "अहंकार" अर्थात् "अहं" भाव उत्पन्न गर्ने ज्ञान हो; त्यो सकल भुवनमण्डललाई अन्तर्गभित गरेर रहेको शिवशक्तिरूप जोडीको एउटा पिण्ड अर्थात् एकाकार रूप हो र त्यही लोकमा सर्वोपरि छ।

अर्थात् भनाइको तात्पर्य यो हो कि चित्तमा स्वयं प्रकाशरूप परब्रह्म परमात्माको प्रतिविम्ब पर्दा महाविन्दुरूपमा एउटा "अहमाकार" वृत्ति उत्पन्न हुन्छ। यसरी उत्पन्न भएको त्यो "अहम्" नै सारा अक्षरसमाम्नाय र शब्दार्थप्रपञ्चको मूल हो, त्यसैबाट यो सारा प्रपञ्च खडा हुन्छ।

अब पूर्वोक्त अहं रूपी विन्दु विकसित भई पहिले चणकाकार बन्यो र अनि त्यही फुटेर दुइ फ्याक भई शुक्ल विन्दु र रक्त विन्दु दुइ विन्दु बने। प्रकाशको भाग शुक्ल विन्दु भयो र विमर्श भाग रक्त विन्दु भयो।

त्यसमा शुक्ल विन्दु चीसो स्वभावको सेतो थियो, तर रक्तविन्दुचाहिं तातो स्वभावको रातो बन्न गयो। अब प्रकाशमा विमर्शको भाग अर्थात् उष्णता वा तातोको भाव नभई राम्रो उज्यालो हुन सक्तैन र फेरि विमर्शमा पनि प्रकाशको भाव अर्थात् उज्यालोको भाव नपरी राम्रो तातो हुँदैन। यस विषयमा शास्त्रमा यस्तो उक्ति पाइन्छ—

> "शक्त्या विना शिवे शुष्के नाम धाम न विद्यते।
> शिवं विना चित्कलानां कलात्वं न क्वचिद् भवेत्॥
>
> —बृहत्पुरश्चर्यार्णव प्रथम खण्ड पृ० २१ बाट उद्धृत

अर्थात् शक्ति विनाको कोरा शिवमा नामरूप केही हुँदैन र शिव विना पनि चित्कला अर्थात् शक्तिमा कहीं पनि कलात्व अर्थात् कलारूप भाव रहँदैन।

यसमा शक्ति भनेर विमर्शशक्ति र शिव भनेर प्रकाशरूपलाई बुझाउछ। तसर्थ विमर्श विना प्रकाशको अंश अभिव्यक्त हुँदैन र प्रकाशको सत्ता विना चित्कला अर्थात् विमर्शको पनि केही भाव (भाउ) रहँदैन।

तसर्थ प्रकाश र विमर्शरूप शुक्लविन्दु र रक्त विन्दुको परस्पर प्रभावकारी बन्नका लागि परस्परानुप्रवेश हुँदा अर्थात् एउटा अर्कोमा घुस्न जाँदा त्यसैबाट न चीसो न तातो स्वभावको सर्वतेजोमय मिश्रविन्दु निक्लन गयो।

अब फेरि अघिको कुरातिर विचार गरौं। अघि अहंरूपी विन्दुको प्रादुर्भाव हुँदा "पूर्णोहं, एकोहं नानास्याम्" भन्ने भावको जुन ज्ञान, इच्छा र क्रिया निस्केका थिए, तिनै ती शक्तिहरू चित्तमा प्रस्फुरित भएर इच्छाशक्तिबाट मन, ज्ञानशक्ति वा बोधशक्तिबाट बुद्धि र क्रियाशक्तिबाट कर्म प्रादुर्भाव भए। अनि फेरि तिनैको हेतुपरहेतु मतले अर्थात् वाचक, वचन र वाच्यार्थको भेदाभेद भए जस्तो भई इच्छाशक्तिबाट माता (ज्ञाता अर्थात् जान्ने), ज्ञानशक्तिबाट मान (ज्ञानसाधनस्वरूप विद्या अर्थात् त्यो जनाउने साधन) र क्रियाशक्तिबाट मेय (ज्ञेय अर्थात् जानिने वस्तु) यति तीन बन्न गए। यिनलाई मत्रयभाव भन्दछन्। यसबारेमा तन्त्रमा यस प्रकारको संकेत वचन प्राप्त हुन्छ–

"अतीतं तु परं तेजः स्वसंविदुदयात्मकम्।
स्वेच्छाविश्वमयोल्लेखखचितं विश्वरूपकम्॥
चैतन्यमात्मनो रूपं निसर्गानन्दसुन्दरम्।
मेयमातृप्रमामानप्रसरैः संकुचत्प्रभम्॥

–चतुःशती (कामकलाविलास श्लोक १३–१४ को टीका चिद्वल्लीमा उद्धृत) पृ. ३३

आफ्नो इच्छाले विश्वमय आकार प्रस्फुरित गरेर विश्वरूपी बनेको, आफ्नै संविद्को अभिव्यक्तिस्वरूप जुन सर्वातीत (नामरूप आदिबाट अतीत अर्थात् अवाङमनसगोचर) पर प्रकाश हो। त्यही आफ्नो नैसर्गिक



आनन्दले सुन्दर, आत्माको चैतन्यमय रूप हो र त्यही माता, मेय र मान (ज्ञाता ज्ञेय र ज्ञान) रूपले संकुचित अर्थात् मत्रय भावमा परिणत रूप हो।

अनि मत्रयको त्रिकोण बन्नलाई पहिले शृङ्गाटक रूप अर्थात् सिंगडाको जस्तो आकार बनेर अनि त्रिकोणरूप बन्न गयो। यसमा शास्त्रको संकेत यस्तो छ–

"अनुत्तरानन्दचितिरिच्छाशक्तौ नियोजिता।
त्रिकोणमिति तत् प्राहुर्विसर्गामोदसुन्दरम्।
मेयमातृप्रमामानप्रसरैः संकुचत्प्रभम्।
शृङ्गाटरूपमापन्नमिच्छाज्ञानक्रियात्मकम्।

–श्रीत्रिंशिका (कामकलाविलास श्लोक २३-२४ को चिद्वल्लीमा उद्धृत) पृ. ४३

अर्थात् "अनुत्तर आनन्दमय पूर्वोक्त विन्दुरूप चिच्छक्तिको इच्छाशक्तिसंग संबन्ध हुँदा माता मेय र मानरूपमा प्रस्फुरित भई संकुचित अर्थात् एकीभूत भएर सिंघडाको आकारमा परिणत भएका तिनै इच्छा, ज्ञान र क्रियालाई नै विसर्गामोदसुन्दर अर्थात् विमर्शांशसंगको आनन्दमय संबन्धले सुन्दर त्रिकोण हो भनेर भन्दछन्।" यो शृंगाटकरूप त्रिकोणलाई संवित् भनिन्छ। यही संवित् उक्त त्रिकोणमय रूपमा योनिस्वरूप बनेर विन्दुलाई आफूमा अन्तर्निहित गर्दछ र गर्भधारण भए जस्तो गरेर त्यसैबाट पूर्वोक्त शुक्ल, रक्त र मिश्रविन्दुरूपमा प्रस्फुटित हुन्छ। अनि त्यो (पूर्वोक्त) मिश्र-विन्दुलाई मुख र अरू दुइ विन्दुलाई दुइटा स्तन बनाएर अर्थात् जगत्‌रूपी बालकलाई हुर्काउन स्तनपान गराउनको लागि यहां दिइएको र रेखाचित्र जस्तो कामकलारूप अर्थात् आदि प्रकृति जगदम्बा जगत्की आमा प्रकट हुन्छिन्। ती तीन विन्दुमध्ये "रक्तविन्दु" तातो हुनाले "अग्निविन्दु" "शुक्ल विन्दु" चीसो हुनाले "चन्द्रविन्दु" र मिश्रविन्दु चीसो तातो मिसिएको हुनाले "सूर्यविन्दु" भन्ने नामले प्रख्यात भए। यस विषयमा यस्तो संकेत छ–

"शिवशक्त्यात्मको विन्दुर्यदा ह्युच्छूनतां गतः
चणकाकारतां यातस्तदा च द्विविधोऽभवत् ॥
ततः शुक्लं च मिश्रं च रक्तं च परमेश्वरि ॥

—"तन्त्रशारत्र" पृ० ३०




नं. १ विन्द्वात्मक कामकला

अर्थात् उक्त प्रकाश विमर्शमय शिवशक्तिस्वरूप विन्दु विकसित अवस्थामा आएर चणकाकार बन्दछ र पहिले द्विदल भएर शुक्ल विन्दु र रक्त विन्दुरूपमा आउँछ र अनि तिनै दुइको संमिश्रित रूपबाट मिश्रविन्दु खडा हुन जान्छ । यसरी शुक्ल रक्त र मिश्र रूपमा तीन विन्दु प्रकट हुन्छन् ।

यसबारेमा तन्त्रहरूमा धेरै प्रकारको वचन पाइन्छ । तर सबको निचोड अभिप्राय एउटै हो । यस विषयमा श्री १०८ शङ्कराचार्यज्यूले बहुतै राम्रोसंग निम्न लेखिएअनुसार वर्णन गर्नु भएको छ ।



मुखं विन्दुं कृत्वा कुचयुगमधस्तस्य तदधो
हकारार्धं ध्यायेद् हरमहिषि ते मन्मथकलाम् ।
स सद्यः संक्षोभं नयति वनिता इत्यतिलघु ।
त्रिलोकीमप्याशु भ्रमयति रवीन्दुस्तनयुगाम् ।

—आनन्दलहरी श्लोक १८ पृष्ठ ३२

अर्थात् मिश्रविन्दुलाई मुख्य मुख मानेर त्यसको मुनि दायां वांया अग्नीषोमात्मक दुइ विन्दुलाई दुइ स्तन कल्पना गर्नू र त्यस मुनि हकारार्ध (आधा ह, हको उत्तरार्ध अर्थात् "ए" कार) रूप कामकलाको ध्यान गर्नू, यसरी ध्यान गर्नेले तत्क्षणमै युवती महिलाहरूलाई मात्र के कुरा तीन त्रिलोकैलाई पनि क्षुब्ध वा विचलित गराउन सक्तछ । वास्तवमा विचार गर्दा यसमा एउटा गूढ रहस्य पनि लुकेको छ । त्यो के हो भने यहां मुख भनेर योनिको मुख अर्थात् योनिविवरलाई लिनू । मिश्रविन्दुलाई लिङ्ग मानेर त्यसलाई मुख्य योनिकुहरमा अन्तर्निहित गर्नू र त्यसमुनि कुचद्वय शब्दले वर्णन गरिएका शुक्ल र रक्त दुइ विन्दुलाई दुइ अण्डकोश कल्पना गरेर अनि त्यसको मुनि भन्नाले उक्त संविद्रूप योनिको मुनितिर हार्धकलाको अर्थात् परशिवको अर्धाङ्गिनी कुण्डलिनी शक्तिस्वरूप कामकलाको ध्यान गर्नू भन्ने वुझिन्छ ।

अनि यसैमा आम्नायभेदले अलि अलि आकार प्रकार फरक भएर कामकला सम्बन्धी भिन्न भिन्न रतासनका रूपहरू बन्न जान्छन्, जसको वर्णन पछि यथास्थानमा गरिनेछ । यसरी पूर्वोक्त श्लोकबाट यो रूपको उद्धार हुन्छ । यसैलाई विन्द्वात्मक कामकला भन्दछन् । यस विषयमा शक्तिसंगमतन्त्रमा यस्तो उक्ति छ —

"एकारोर्धगतो विन्दुर्मुखं भानुरधोगतौ ॥ ८७ ॥
स्तनौ दहनशीतांशू योनिर्हार्धकला भवेत्" ॥
"हकाराख्यपदे देवि ईकारैकारमीरितम्" ॥ ८८ ॥
"मुखं विन्दुर्महेशानि तदधस्तु कुचद्वयम्
हकारार्धकलारूपं योनिचक्रं विन्दुः प्रिये ॥ ८९ ॥
अधोविन्दुर्महेशानि परारूपः प्रकीर्तितः ।
योनिविन्दुर्महेशानि तत्परारूपवान् भवेत् ॥ ९० ॥

ऊर्ध्वविन्दुर्महेशानि तदतीता मुखे भवेत् ।। ९१ ।।
सर्वातीता चन्द्ररूपा बीजादूर्ध्वं व्यवस्थिता
वाचातीतां कलां विद्धि हकारार्धकलां शिवे ।। ९२ ।।
इति कामकलारूपं कीर्तितं तु मया तव
कालीकामकला देवी मुख्या हंसगता भवेत् ।। ९३ ।।
इति संक्षेपतः प्रोक्तं किमन्यत् श्रोतुमिच्छसि ।। ९४ ।।

—कालीखण्ड तृतीय पटल पृ. ३५

"अर्थात् त्रिकोणाकार योनिरूप एकारको सबभन्दा माथितिर रहेका सूर्यविन्दुलाई मुख, त्यसदेखि मुनिका अग्निविन्दु र सोमविन्दु ( चन्द्रविन्दु )-लाई दुइ स्तन मानेर हार्धकला अर्थात् हकारको उत्तरार्धरूप एकारलाई योनि मानिन्छ। हकारमा इकार र एकाररूप दुइ कला दुइ अवयव रूपमा रहेका हुनाले नै यहां हार्धकला भनेर एकार लिइएको हो। यो हार्धकलारूप एकारलाई योनिचक्र भनिन्छ।

अधोविन्दु अर्थात् अधस्तन त्रिकोणवर्ती विन्दुलाई परारूप मानिन्छ र योनि विन्दु त्यही परारूपको हुन्छ अर्थात् व्यक्तरूपमा आएको त्यही पराविन्दुलाई नै योनिविन्दु भनिन्छ। अनि ऊर्ध्वविन्दुचाहिं त्योभन्दा माथिल्लो परातीत अर्थात् अपरारूपको हुन्छ। अनि त्यसैमा दोस्रो चाहिं चित्परारूपको हुन्छ र जुन त्यो परातीत विन्दु हो। त्यो चाहिं मुखमा हुन्छ अर्थात् मुखरूप मानिन्छ। अनि चन्द्ररूप अर्थात् सोमात्मक जुन विन्दु छ त्यो सर्वातीत अर्थात् सर्वोपरि छ र बीजभन्दा माथि रहेको हुन्छ। यसरी यो हार्धकलारूप जो कामकला छ त्यो वाचातीत वा वागगोचर अर्थात् मुखले बताउन नसकिने रूपको छ। यति यो कामकलाको रूप संक्षेपमा बताएं। त्यसमा जुन यी मुख्य कामकलाकाली हुन् तिनी हंसगता हुन्छिन्। यी विन्दुहरूलाई मुख र स्तनको रूपमा वर्णन गरेको संविद्रूप जगज्जननीको आवश्यक अंग–अवयवहरूको पूर्ति गर्न गरिएको केवल रूपक कल्पना मात्र हो। वास्तवमा ज्ञान इच्छा र क्रियात्मक त्रिशक्तिमय त्रिविन्दुका समष्टिस्वरूप त्रिकोण नै योनिरूप हार्धकला अर्थात् "एकार" नै संविद्रूप कामकला हो र रत्यात्मक कामकलाको रूपमा रेखाचित्रमा देखाइएअनुसार मुख्य त्रिकोणाकार योनिसंग विन्दुहरूको संपर्क भएको हो।



नं. २ अन्तर्लीन




नं. ३ अनुग्रह




नं. ४ सृष्टि




नं. ५ स्थिति




नं. ६ संहार




नं. ७ विश्रान्ति



यसमा एक अर्थमा उपर्युक्त रक्त र श्वेत दुइ विन्दुलाई दुइ अण्ड अर्थात् अण्डकोश र मिश्रविन्दुलाई लिङ्ग मानेर त्रिकोणरूप योनिसंग त्यसको संपर्क हुने बुझिन्छ। त्यसै गरी अर्को अर्थमा अग्नीषोमात्मक दुइ विन्दुहरूलाई प्रकृति र पुरुष वा शिवशक्तिको प्रतीक मानेर तिनका रक्तविन्दुस्वरूप रज र शुक्ल विन्दुस्वरूप वीर्यको परस्पर संमिश्रणबाट संविद्रूप त्रिकोणाकार योनिमा अन्तर्निहित सूर्यात्मक मिश्रविन्दुको रूपमा शुक्रशोणितसंपर्कजन्य जीवात्माको सृष्टि हुन्छ। यही नै कामकलाको गूढ रहस्य हो। अर्थात् रातो वर्णको र उष्ण स्वभावको विमर्शांशप्रधान अग्न्यात्मक रक्तविन्दुलाई रज, सेतो वर्णको, शीतल स्वभावको, प्रकाशांशप्रधान सोमात्मक शुक्लविन्दुलाई वीर्य र मिश्रित वर्णको, नचीसो नतातो स्वभावको सूर्यात्मक मिश्रविन्दुलाई शुक्रशोणित दुइको परस्पर संमिश्रणरूप गर्भ वा जीवनको प्रतीकस्वरूप मानिन्छ।

वास्तवमा यी तीन विन्दुहरूबाट त्रिकोणाकार रूप बन्दछ र त्यसैबाट एउटा शरीरको कल्पना हुन्छ। त्यसरी कल्पना भएको शरीरको मुख्य प्रतीक स्वरूप हकारलाई मानिन्छ। यही हकारलाई शिवस्वरूप मानिन्छ र शिव पनि प्रायः अर्धनारीश्वर नै मानिन्छन्।

यहां हकारका दुइ अवयव मानिन्छन् एउटा इकार, अर्को एकार। "इ" कारलाई माथिल्लो अवयव र "ए" कारलाई तल्लो अवयव मानिन्छ। माथिल्लो अवयव कटिदेखि माथिको भाग र तल्लो अवयव कटिदेखि मुनिको भाग हुन्छ।

माथिल्लो अवयवस्वरूप इकार तीन विन्दुको संयोगबाट बनेको छ र ती तीन विन्दुलाई मुख्य तीन अंगको रूपमा कल्पना हुन्छ; एक मुख र दुइ स्तन माथिल्लो विन्दुलाई मुख र मुख मुनिको दांया वांया दुइ तिरका दुइ विन्दुलाई दुइ स्तन। त्यसमा मिश्रविन्दुलाई मुख र शुक्लविन्दु र रक्तविन्दुलाई दुइ स्तन मानिन्छ। यसरी माथिल्लो अवयवको कल्पना हुन्छ र त्यसमा एउटा मुख विन्दु र दुइटा स्तन विन्दुलाई तीन तिरबाट तीन रेखाले जोड्दा एउटा समानान्तर त्रिकोण पनि बन्दछ। यो त्रिकोण माथितिर फर्केको हुन्छ।



त्यसै गरी तल्ला अवयव स्वरूप एकारमा पनि तिनै तीन विन्दुको कल्पना हुन्छ र ती तीन विन्दुलाई परस्पर जोड्दा फेरि त्रिकोणाकार रूप नै बन्दछन् र यही त्रिकोणाकार एकारलाई योनिस्वरूप मानिन्छ। हार्धकलारूप कामकला भनेको यही हो। यो चाहि त्रिकोण तलतिर फर्केको हुन्छ। यसमा माथिका दुइ विन्दुलाई दुइ अण्डस्वरूप र तल्लो मिश्रविन्दुलाई लिङ्ग स्वरूप मानिन्छ। अथवा माथिल्लो दुइ विन्दुलाई रज र वीर्यस्वरूप तल्लो विन्दुलाई शुक्रशोणितको संमिश्रण स्थानस्वरूप योनिमुख मानिन्छ। अनि यिनै दुइ त्रिकोणको परस्पर संयोगबाट एउटा सिंगोरूप बन्दछ।

अब यहां हंसात्मक अर्थात् जीवात्मक कामकलाको अलिकति दिग्दर्शन गराइन्छ। "अहमाकाराख्यसिद्धकामकलाम्" भन्ने श्रुतिवचनअनुसार यसलाई अहं मन्त्रात्मक कामकला अथवा सिद्धकामकला भन्दछन्।

किनभने अहम् भित्रका "अ" र "ह" यी दुइ अक्षरमा सबै अक्षर अन्तर्गभित भएको हुनाले यसलाई महामन्त्र पनि भन्दछन्। पूर्वोक्त विन्दुहरूको रेखाचित्रबमोजिमको अवस्थालाई विन्द्वात्मक कामकला भन्दछन्। अब जीवात्मक कामकला (हंस) जसलाई भावात्मक कामकला पनि भन्दछन्; त्यसको वर्णन हुन्छ। यस विषयमा आगमोक्ति यस्तो छ।

"हंसरूपा कामकला तत्स्वरूपं निगद्यते ।।७७।।
हकारेण वहिर्याति सकारेण विशेत् पुनः ।।
हकारस्य सकारस्य लोपे कामकला भवेत् ।।७८।।
सोहमेतस्य देवेशि प्रणवः परिनिष्ठितः ।।
जीवः पक्षद्वयत्यागात् प्रणवः परिकीर्तितः ।।८०।।
पराप्रासादविद्यायामेवमेव प्रकीर्तितम् ।।

–शक्तिसंगमतन्त्र काली खण्ड तृतीयपटल पृ. ३४

अर्थात् यहां हंसरूप कामकलाको स्वरूप बताइन्छ। "ह" कारले बाहिर निस्कन्छ, "स" कारले भित्र पस्दछ। "सोहं" मा "ह" कार र "स" कारको लोप हुँदा प्रणव कामकला बन्दछ। जीव दुइटा पखेटा झिकिंदा प्रणव हुन्छ। पराप्रासादविद्यामा पनि यस्तै हुन्छ; यसको रहस्यार्थ के हो भने जीवात्माले सास फेर्दा हं आवाज बाहिर निस्किन्छ, स आवाजले भित्र पस्दछ।

"हंस हंसेति मन्त्रोयं जीवो जपति नित्यशः" भन्ने शिवस्वरोदयको उक्तिअनुसार यसैमा उल्टो गरी लिंदा सोहं हुन जान्छ। सोहंमा अगाडि को "स" र पछाडिको "ह" रूपी दुइतिरका दुइ पखेटा झिक्दा ॐ मात्र बांकी रहन्छ।

यसै उसैले "सो ऽ हं" जीवात्मा थियो। त्यसको "स" र "ह" गएपछि ॐ रूपी परमात्मा भयो। त्यसैले यसलाई कामकला भनेको हो। फेरी जब योगीको समाधि हुन्छ, त्यस अवस्थामा यो हंसको एकीकरण भएर "ह्सौं" रूपको श्रीप्रासाद र स्हौं रूपको पराप्रासाद बन्दछ। पहिले "हंसः" सोहं०को विषयमा एउटा कुरा विचार गरौं। ब्रह्मलाई "स" ले सूचित गर्दछ। अहंले आत्मालाई सूचित गर्दछ। अतः "अहं+सः=हंस"। फेरि "सः+अहम्"=सो ऽ हं"। यसै सोहं (स्+ओ+ह्+म्) मा दुइ पक्ष अर्थात् "स" र "ह" झिक्दा 'ओ' र 'म' मात्रै बाँकी हुँदा "ॐ" अर्थात् प्रणवरूप="ना ऽ हं" अर्कोतिर "हंसः को एकीकरण हुँदा "ह्सौं" र उस्तै सो ऽ 'हं' को एकीकरण "स्हौं" बन्दछन्। यस विषयमा तन्त्रमा यस्तो वचन छ–

"हकारं शिव–वीजं स्यात् शक्तिवीजं सकारकम् ।
जीवात्मानं नादरूपं विन्दुं च परमात्मकम् ।।८।।
विसर्गः कर्मसंगः स्यात् हंसवीजं प्रकीर्तितम् ।
विन्दुद्वयं विसर्गः स्यात् सृष्टिः स्थितिमहेश्वरि ।।९।।
एकविन्दुं लयेदेवि द्वि–विन्दुं सृष्टिरूपकम् ।
त्रि–विन्दुं स्थितिरूपं च विन्दुमेकं लये पुनः ।।१०।।
शिवशक्तिमयं देहं जीवात्मा कर्मरूपकम् ।
परमात्मा विन्दुरूपं हंस–वीजेन भावितम् ।।११।।
सृष्टिस्थितिलयं ज्ञेयं हंसवीजं सुलोचने ।
हंस–ज्ञाने भवेत् सृष्टिः सो ऽ हं ज्ञाने स्थितिः प्रिये ।।
नाहं–ज्ञाने लयं देवि भावाभावप्रबोधकम् ।।१२।।

–सर्वोल्लासतन्त्र अष्टपंचाशत्तम उल्लास, पृ. २२३



अर्थात् हकारलाई शिववीज, सकारलाई शक्तिवीज नादलाई जीवात्मास्वरूप, विन्दुलाई परमात्मास्वरूप र विसर्गलाई कर्मस्वरूप अर्थात् क्रियाशक्तिस्वरूप मानिन्छ र यसरी यी सब मिलेर हंसवीज बनेको छ। त्यसमा दुइ विन्दु मिलेर विसर्ग बन्दछ र यसलाई सृष्टिको प्रतीक मानिन्छ। किनभने एक विन्दुलाई लय अर्थात् संहार दुइ विन्दुलाई सृष्टिस्वरूप र तीन विन्दु अर्थात् विसर्ग र विन्दु हुँदै मिलेकोलाई स्थितिस्वरूप मानिएको छ। शरीरलाई शिवशक्तिस्वरूप अर्थात् अर्धनारीश्वरस्वरूप, जीवात्मालाई कर्मस्वरूप कर्मसङ्गबाट उत्पन्न हुने र विन्दुलाई परमात्मास्वरूप भनेर हंसवीजले बताउँछ। त्यस कारण यो हंसवीज सृष्टि स्थिति र संहार तीनै स्वरूपको वा त्रितयात्मक छ। यसमा "हंस" भावमा सृष्टि, सोहं भावमा स्थिति र नाहंभावमा भाव अभाव दुबैको द्योतकस्वरूप लय अर्थात् संहार हुन्छ।

अब प्रासादमन्त्रको विषयमा कुलार्णवतन्त्रमा यस्तो वचन छ—

"अनन्तचन्द्रभुवनमिन्दुविन्दुयुगान्वितः ।
श्रीप्रासादः परो मन्त्रो भुक्तिमुक्तिफलप्रदः ।।४।।
पराप्रासादमन्त्रस्तु सादिरुक्तः कुलेश्वरि ।
प्रकाशानन्दरूपत्वात् प्रत्यक्षफलदानतः ।।५।।
प्रसन्नचित्तवश्यत्वात् प्रसिद्धार्थनिरूपणात् ।
प्राक्तनौघप्रशमनात् प्रपन्नार्तिविनाशनात् ।
प्रसादकरणाच्छीघ्रं प्रासादमनुरीरितः ।।६।।

–चतुर्थ उल्लास, पृ. १७१

अर्थात्– अनन्त (ह) चन्द्र (स) भुवन (औ), इन्दु (नाद) विन्दु (विन्दु) यति मिलेर श्रीप्रासाद मन्त्र बन्दछ। फेरि "स" अगाडि र "ह" पछाडि भयो भने त्यो पराप्रासाद मन्त्र बन्दछ। प्रकाशानन्दरूप हुनाले, प्रत्यक्ष फल दिने हुनाले, प्रसन्न चित्तले वश गरिने हुनाले, प्रसिद्ध अर्थ निरूपण गर्ने हुनाले, अधिको पाप नाश गर्ने हुनाले, भक्तको दुःखनाश गर्ने हुनाले र चाडै नै प्रसाद अर्थात् अनुग्रह गर्ने हुनाले यस मन्त्रको नाम

प्रासाद मन्त्र हुन गयो । यो प्रासादी विद्याको बारेमा श्रीविद्याविषयका धेरै तन्त्रहरूमा उल्लेख पाइन्छ । वास्तवमा वेदको सार प्रणव हो र तन्त्रको सार यो प्रासादी विद्या हो । प्रणवमा अकारको पहिले उच्चारण गर्दा ॐ र उकारको पहिले उच्चारण गर्दा "वम्" भए जस्तो तन्त्रमा पनि "ह्" कारको पहिले उच्चारण हुँदा श्रीप्रासाद र "स" कारको पहिले उच्चारण हुँदा पराप्रासाद बन्न जान्छन् ।

अब प्रणवतिर विचार गरौं । त्यस विषयमा शक्तिसंगमतन्त्रमा यस्तो वचन छ ।

अथातः संप्रवक्ष्यामि निर्णयं प्रणवस्य च
कलापंचकसंयुक्तस्तत्क्रमं श्रृणु पार्वति ॥ ६३ ॥
अकारश्च उकारश्च मकारश्च तृतीयकः ।
नादश्चतुर्थो गदितः पञ्चमो बिन्दुरीरितः ॥ ६४ ॥
ब्रह्मा विष्णुश्च रूद्रश्च ईश्वरश्च सदाशिवः ।
एते पंच महाप्रेताः प्रणवं च समश्रिताः ॥ ६५ ॥

—कालीखण्ड तृतीय पटल पृ. ३२

(शिवजी भन्नुहुन्छ कि) प्रणवको म निर्णय गर्दछु । यो प्रणव पांच कलाले युक्त भएको छ । हे पार्वती ! अकार, उकार, मकार, नाद र विन्दु समेत भएर प्रणवका पांच कला भए । अब यो पांच कलामा ब्रह्मा, विष्णु, रूद्र, ईश्वर र सदाशिव गरेर पांच महाप्रेतहरू रहेका छन् ।

यसको रहस्यार्थ के हो भने अकारोत्थ अर्थात् (अकाररूप ब्रह्मा) सृष्टिकला, पृथ्वीतत्वात्मक, उकारोत्थ विष्णु स्थितिकला, जलतत्वात्मक, मकारोत्थ रूद्र, संहारकला, तेजस्तत्वात्मक, विन्द्वात्मक ईश्वर अन्तर्लीन कला, वायुतत्वात्मक ईश्वर, नादरूप सदाशिव अनुग्रहकला आकाशात्मक, यसभा सदाशिवको पांच मुख हुनाले सर्वावयव भए पनि ऋणात्मक, धनात्मक, न ऋणात्मक, न धनात्मक, परात्मक र परमात्मक । यहां एउटा



विचारणीय कुरा छ । श्लोकमा नादपछि विन्दुको नाम छ । यहां अर्थमा भने विन्द्वात्मक ईश्वर नादात्मक सदाशिव हुन आयो । यसको रहस्य के हो भने प्रणवाक्षरको उद्धारमा नादपछि विन्दु आउँछ । उता पंचमहाभूतमा वायु पछि आकाशको क्रम आउँछ । फेरि महाशक्तिको सिंहासन कल्पित हुंदा पनि ईश्वर सिंहासनको खुट्टामा गनिन्छन् । सदाशिव फलकरूप हुन्छन् । त्यस विषयमा यस्तो उक्ति छ ।

"ब्रह्मा विष्णुश्च रूद्रश्च ईश्वरश्च सदाशिवः ।
सर्वे मञ्चखुराः प्रोक्ताः फलकस्तु सदाशिवः ॥"

—श्रीविद्याक्रमार्चनपद्धति

यस उक्तिले ब्रह्मा, विष्णु रूद्र र ईश्वररूपी चार खुट्टा भएको र सदाशिवरूपी फलेक भएको खटियामा भन्ने बुझिन्छ ।

अब रतासन कामकला विषयमा वर्णन गरिन्छ । यो रतासन कामकला हाम्रा देवमन्दिरहरूका टुंडालमा प्रायः नाना प्रकारका मूर्ति वा संकेतहरूको रूपमा अंकित भएको पाइन्छ ।

अब त्यही रत्यात्मक कामकलाको वर्णन गरिन्छ । ती तोरणका मूर्ति वा संकेतहरूका विषयमा श्रीकुलक्रमचिन्तामणि तन्त्रमा यस्तो उक्ति छ ।

"पूर्वाम्नायः सृष्टिरूपः स्थितिरूपश्च दक्षिणः ।
संहारः पश्चिमो ज्ञेयो हान्तर्लीनस्तथोत्तरे ॥ १ ॥
ऊर्ध्वश्चानुग्रहो ज्ञेयश्चाधो विश्रान्तिको भवेत् ।
सपरीतरतं पूर्वे विपरीतं तु दक्षिणे ॥ २ ॥
पश्चिमे तु महेशानि मृगादिकरतं भवेत् ॥
उत्तरे ताण्डवरतमूर्ध्वे तु चणकाकृतिः ॥ ३ ॥
पाताले कामदं दिव्यं चुम्बनादि रतं भवेत् ॥
एतेषां भेदभावेन भुवनानां चतुर्दशे ॥ ४ ॥
चतुरशीतिशुभाकारा जायन्ते सिद्धिदाः शिवे ।
साक्षादाकाररहितं परब्रह्मसनातनम् ॥ ५ ॥

कामकलाप्रभावेण रूपवद् भवति ध्रुवम् ॥
तस्या ब्रह्माण्डमुत्पन्नं तयैव परिवर्तते ॥ ६ ॥
तस्यां विलीयते तस्मात् जगत्कामकला परं ।
तस्माद्रतासनानाञ्च स्वरूपाणां पृथक् पृथक् ॥ ७ ॥
पीठे पीठे तोरणानि पीठजागर्तिहेतवे ।
स्वाम्नायञ्च परिज्ञाय स्थापितेषु यथाक्रमात् ॥ ८ ॥
कुलामृतरसास्वादमुग्धं पीठं भवेच्छुभम् ।
स्वागमादेव बोद्धव्यमिति संकेतमात्रतः ॥ ८ ॥"

—एकविंश उच्छ्वास । पत्रांक ६५

अर्थात् "पूर्वाम्नाय सृष्टिरूप, दक्षिणाम्नाय स्थितिरूप, पश्चिमाम्नाय संहाररूप, उत्तराम्नाय अन्तर्लीनरूप, ऊर्ध्वाम्नाय अनुग्रहरूप र अधराम्नाय विश्रान्तिरूप हुन् । पूर्वाम्नायमा सपरीतरति, दक्षिणाम्नायमा विपरीतरति, पश्चिमाम्नायमा मृगादिकरति, उत्तराम्नायमा ताण्डवरति, ऊर्ध्वाम्नायमा चणकाकाररति र अधराम्नायमा चुम्बनादिरति हुन्छन् । यी छ प्रकारका रतिहरू चौधै भुवनमा हुन्छन् । यसरी एक भुवनमा छ प्रकारका दरले चौध भुवनमा जम्मा चौराशी ( १४×६=८४ ) प्रकारका शुभाकार रतासन बन्दछन् ।"

आकार अर्थात् स्वरूप नभएका सनातन परब्रह्म कामकलाको प्रभावले रूपवान् बन्दछ । उनै कामकलाबाट ब्रह्माण्ड उत्पन्न भयो, हाल उनैबाट परिवर्तन भइरहेको छ र फेरि पछि उनैमा लय हुनेछ ।

अत एव जगतै कामकलात्मक मानिन्छ । त्यसकारणले पीठहरू जगाउनाको लागि तिनको आम्नाय जानेर फरक फरक क्रमले रतासनका रूपहरूको तोरण बनाएर टांगनाले कुलामृतरसको स्वाद पाएर पीठ शुभ हुन्छ अर्थात् पीठका देवताहरू जागृत भएर शुभफल दिने हुन्छन् । हे महेशानि ! यो संकतको कुरा मात्रै हो । यसको यथार्थ कुरा आ-आफ्नो आगमबाट अर्थात् परम्परानुसार गुरुमुखबाट बुझ्नुपर्छ ।



तन्त्रमा यतिकै संकेत मात्र गरेको छ । यसको रहस्य व हुतै गंभीर छ । अब यहां त्यसको यथाज्ञान वर्णन गर्ने चेष्टा गर्दछु । यसैलाई रत्यात्मक-कामकला भन्दछन् ।

माथिको उक्तिमा "भुवनानां चतुर्दश" भन्ने छ । त्यो भुवन भनेको के हो भन्ने विषयमा अव वर्णन गरिन्छ । पूर्वोक्त छ आम्नायभेदबाट बनेका छ प्रकारका मूर्तिहरू चौध भुवनको भेदले गर्दा (१४×६=८४) चौराशी प्रकारका बन्न गए । अर्थात् सपरीत रतासन एक भुवनमा एक किसिमको आसन भए अर्को भुवनमा अर्कै किसिमको हुन्छ ।

तर यो सपरीत रतासनमा काम माथि र कला तल भएको त हुनै पर्छ । एवं प्रकारले चौध किसिम वा प्रकारका सपरीत रतासनहरू बन्न गए । यसै गरी अरू पांच रतासनमा पनि प्रत्येकमा चौध चौध किसिमका बन्न गए ।

साधारण विचारबाट चौध भुवन भन्नाले सत्यलोकदेखि पातालसम्मको चौध भुवन भन्ने बुझिनाले भुवनैपिच्छे फरक फरक किसिमका रतासनहरू होलान् भन्ने भान पर्न जान्छ । तर यहां यसको वास्तविक रहस्य अर्कै छ । त्यो के हो भने शक्तितत्त्व दुइ प्रकारका हुन्छन् । तिनमध्ये एक संगृहीत र अर्को कर्तृत्वशील हुन् । यिनै शक्तितत्त्वको प्रभावबाट बनेर भएकोलाई "भूयते: प्राप्तौ" "भूसुधुभ्रस्जिभ्यश्छन्दसि" इति क्युन्, अथवा भवन्त्युत्पद्यन्तेऽनेन करणे ल्यूट् भुवनम् अर्थात् प्राप्ति वा उत्पत्ति अर्थमा भू धातु देखि अधिकरणार्थक अथवा करणार्थक प्रत्यय भएर "भुवन" भन्ने संज्ञाशब्द भएको हो । पूर्वोक्त दुइमा प्रत्येकको सात सात विभाग हुँदा चौध विभाग भए । तिनमा संगृहीत शक्तिका विभाग यी हुन् मूलाधार, स्वाधिष्ठान, मणिपुर, अनाहत, विशुद्धि, आज्ञा र ब्रह्मरन्ध्र । फेरि कर्तृत्वशील शक्तिका विभाग यी हुन् गति, ताप, विद्युत्, चुम्बक, प्रकाश, रसायन र लय अनि फेरि यी पूर्वोक्त रतासनका मूर्तिहरूबाट पूर्वोक्तवत् प्रणवकला, भाव, महावाक्य, वैन्दवावस्थ र आम्नायभेद यति पांच कुरा सूचित हुने हुनाले यस मूर्तिलाई पंचमी वा पंचमीमूर्ति पनि भन्दछन् । अतः यस प्रकारले पंचमीको चौराशी भेद बन्न गई राजाधिराज योगको मतले चौराशी रतासन र हठयोगको मतले चौराशी योगासन हुन गए ।

अब–

"पीठे पीठे तोरणानि पीठजागर्तिहेतवे"।

भन्ने उक्तिको बारेमा केही कुरा लेख्दछु। तोरण भनेको के हो भन्नै विषयमा कुलक्रमचिन्तामणितन्त्रमा यस्तो छ–

"तोषणं जगदम्बायाः रमणं शिवशक्तयोः।
नन्दनन्तु गणानाञ्च तोरणमुच्यते बुधैः ॥७॥"

–विंश उच्छ्वास

अन्वय– जगदम्वायाः तोषणं, शिवशक्तयोः रमणं गणानां तु नन्दनं च बुधैः तोरणं (इति) उच्यते। व्याख्यार्थः– जगदम्वायाः (मूलप्रकृतिको) तोषणं (संतुष्टि)। भित्री अर्थमा मूल प्रकृतिको संतुष्टि नै संसारचक्रको नियमित परिवर्तन (शिवशक्तयोः शिव र शक्तिको) यहां व्याकरणको मतले पहिले "शक्ति" अनि "शिव" हुनुपर्ने तर यसको विपरीत देखियो। यस्तै "शिव शक्त्यात्मकं जगत्" भन्ने अर्को आगमोक्ति पनि छ। यसमा "अ इति ब्रह्म तत्रागतो ऽ हं" भन्ने निगमोक्तिलाई पुष्टि गरेर "शिव" भन्ने पदले "आकाररूप" अनुत्तरको परामर्शक, "शक्ति" भन्ने पदले "हकाररूप" अनुत्तरकै अनाहतरूपले केही ठूलो भएको अर्थात् फुलेको त्यसैको परामर्शक भन्ने बुझिन्छ। रमणं (रमाइ) भित्री अर्थमा "अ" र "ह" को रमाइ भन्नाले "मकाररूप" अनुत्तर र अनाहतको विश्रान्ति हुने ठाउँको परामर्शक भन्ने बुझिन्छ। गणानां (गणहरूको) भित्री अर्थमा कामकालको गण भन्नाले विन्दुत्रय अर्थात् तीन विन्दु भन्ने बुझिन्छ। नन्दनं (हर्षको उफ्राइ) भित्री अर्थमा विन्दुहरूको चाल भन्ने बुझिन्छ। यी तीन अर्थात् "तोषण" "रमण" र "नन्दन" भन्ने बुझाउनाको लागि यिनको अगाडिको अक्षरहरू झिकेर "तोरणं" भनेर बुद्धिमानहरूबाट भनियो।

जुन आम्नायमा जुन भुवनको मतानुसार देवता संस्थापित भएको हुन्छ, उसै मतको रतासन मूर्ति र त्यसमाथि ६४ योगिनीमध्येको आवरणमा पर्ने देवताको मूर्ति मन्दिरको मूल द्वारको वायांतिरबाट वामोक्त क्रमले मिलाएर राखिन्छ।



यसमा ६४ नै योगिनीहरूको र ८४ नै रतासनहरूका सबै मूर्तिहरू राख्न पर्दैन। फेरि ध्यानोक्त प्रतिमा नभई अर्कै प्रतिमा वा कुनै पनि चिह्न नभएको कोरा पाषाणादि स्थापित भएको देवालयको मूलद्वारमाथि एउटा सानो सक्कली ध्यानानुसारको प्रतिमा अंकित हुन्छ। यस विषयमा पछि विशेष वर्णन हुनेछ।

आकाश ढाकेर बनेको देवालयको बारेमा यस्तो हुन्छ। तर आकाश खुला भएको देवालयमा भने मूलद्वार नै देवताको संमुख मानिन्छ। कुनैमा दिक् अथवा दिशालाई नै तोरण मानेर विशेष तोरण राखिदैन, राखिहाले पनि देवता मानिएको पदार्थलाई नागरूपको वा बुट्टारूपको तोरणको अनुकल्पले घेरेर (हाम्रो नेपालको टुंडिखेलको लुमडी पीठमा जस्तो गरी) राखिन्छ। यस्तोमा सक्कली मूर्ति अंकित गर्ने आवश्यकता पर्दैन। एक ठाउँबाट अर्को ठाउँमा सारेर स्थापना भएको देवालयमध्ये कुनै कुनैमा भने (हाम्रो फर्पिङको दक्षिणकालीमा जस्तै) तोरणको अभावमा पनि स्थापना हुने हुन्छ।

अब ६४ योगिनीको बारेमा ६४ अक्षरमध्ये प्रत्येकबाट १–१ योगिनी प्रादुर्भाव भएका छन्। ती ६४ योगिनीहरू नै देवताका तन्त्रानुसार नाम रूपको भेद भएर आवरण देवताका रूपमा रहन्छन्।

सबै यन्त्रका आवरण देवताहरू यिनै ६४ योगिनी भित्रका मात्र दोहोरिई तेहोरिई भएर पनि नाम रूप फरक भएर रहन्छन्।

कुनै कुनै आवरण देवतामा त पांच शक्तिसम्मको पनि एकीकरण भएको रूप बनी नामकरण भएको हुन्छ। जस्तो कि– कं, खं, गं, घं, ङं इत्यादि। "अमुकदेवता श्रीपादुका" पूजयामि नमः" वा "अमुकदेवता वज्रपुष्पं प्रतीच्छ स्वाहा" यस्तो हुन्छ। ती ६४ मातृकाक्षर निम्नलिखित बमोजिमका हुन्छन्। ॐ नमः सिद्धं अ आ इ ई उ ऊ ऋ ॠ ऌ ॡ ए ऐ ओ औ अं अः (इति गणेशसमेतस्वराणामेकविंशतिः) २१ ॥

क ख ग घ ङ च छ ज झ ञ ट ठ ड ढ ण त थ द ध न प फ ब भ म (इति स्पर्शानां पंचविंशतिः) २५ ॥

य र ल व श ष स ह (माद्याष्टाः) ८ ॥
य ज्ञ क्ष त्र (चतुर्यमाः) ४ ॥

अनुस्वारः विसर्गः जिह्वामूलीय, उपध्मानीय, प्लुत, स्वरित (इतिषडतु भावेन षडाननः कुमारः) ६ ॥

यिनको रूप र नाम आम्नाय र यन्त्रहरूको भेदले फरक फरक हुने हुनाले त्यो यहां लेखेर साध्य हुँदैन । "स्वागमादेव बोद्धव्यमिति संकेतमात्रतः" भनेको के हो भने जुन जुन आगमको पीठ हुन्छ; त्यही पीठको हिसावले यी तोरणहरू टाँगिएका हुन्छन् । त्यस उसले त्यो देवालय कुन आम्नाय र कादि, हादि, सादि मध्ये कुन मतको हो, त्यो बुझेर मात्र निर्णय गर्नु पर्दछ भनेको हो । अब कादि, हादि क्रमको व्याख्या ज्यादा गहन विषयको हुनाले यहां छोटकरीमा मात्र बताउँछु । दक्षिणाम्नाय काली समेतका देवताहरू र अधराम्नाय र ऊर्ध्वाम्नाय मिश्रित तारा र ऊर्ध्वाम्नाय श्रीविद्या हादि मतका हुन् ।

उत्तराम्नाय काली आदि सबै विद्या, पूर्वाम्नाय भुवनेश्वर्यादि सबै विद्या र पश्चिमाम्नाय कुब्जिकादि सबै विद्या कादि मतका हुन् ।

जै र बुद्ध मार्गमा पूजित अधाराम्नायका तारादि सबै विद्या संवरोधिमतका सादि मतका हुन् । नैर्ऋत्याम्नाय विद्या (क्षुद्रविद्या) संवरोधिमतका हुन् । ईशान, आग्नेय र वायव्याम्नाय विद्या र चामुण्डा कादि मतका हुन् । अरू दुर्गा विद्या उपासकको परंपराभेदले कादि हादि दुवैमा हुन सक्तछ ।

सर्वप्रथम आम्नाय कसरी निस्क्यो भन्ने बारेमा शिवजीको पांच मुखबाट पांच आम्नाय निक्ले भन्ने उक्ति अनेक तन्त्रहरूमा पाइन्छ । अधराम्नायको विषयमा कुनै तन्त्रमा पांच आम्नायबाट अर्को अधराम्नाय निस्केको हो भन्ने र कुनै तन्त्रमा शिवजीको नाभिको मुख कालाग्निरुद्रबाट अधराम्नाय निस्केको हो भन्ने पाइन्छ । उपाम्नायको बारेमा उतराम्नाय र पूर्वाम्नायको मिश्रणबाट ईशानाम्नाय, पूर्वाम्नाय र दक्षिणाम्नायको मिश्रणबाट



आग्नेयाम्नाय, दक्षिणाम्नाय र पश्चिमाम्नायको मिश्रणबाट नैऋत्याम्नाय, अनि पश्चिमाम्नाय र उत्तराम्नायको मिश्रणबाट वायव्याम्नाय निक्लन गए भन्ने पनि कुनै कुनै आगमको वचन पाइन्छ । फेरि कामकलाबाट पनि छ आम्नायको उत्पत्ति भएको बुझिन्छ । त्यो कस्तो भने माथि बताएर रेखाङ्कित गरेको माथि मुख फर्केको त्रिकोण र तल मुख फर्केको त्रिकोण आ-आफ्नो पदमा रहेर खप्टिन जांदा तल लेखिएअनुसार विन्दुसहितको षट्कोण बन्न जान्छ । जसको रेखाङ्कन गर्दा यस प्रकारको रूप हुन्छ ।

नं. ८




यही षट्कोणबाट षण्महावाक्य, षड्रस, षड्तत्त्व, षड्विकार र षडाम्नाय समेत गर्दा पांच थरीका वस्तुहरू निस्कन गए । अब षण्महावाक्य भनेको यस प्रकारका हुन्छन् । पूर्वाम्नायात्मक "ॐ तत्त्वमसि", दक्षिणाम्नायात्मक "ॐ अयमात्माब्रह्म", पश्चिमाम्नायात्मक "ॐ प्रज्ञानं ब्रह्म", उत्तराम्नायात्मक "ॐ

अहं ब्रह्मास्मि", ऊर्ध्वाम्नायात्मक "ॐ परोरजसे सावदोम्" र अधराम्नायात्मक "ॐ तारेतुतारेस्वाहा"। षड्रस भनेको के हुन्; निम्न बमोजिम छन्। तीतो, टर्रो, गुलियो, अमिलो, नूनिलो र पिरो।

षड्तत्वः– पार्थिव तत्व, जलतत्व, तैजसतत्व, वायवीय तत्व, आकाशतत्व र मनस्तत्व (अर्थात् मूलधार, स्वाधिष्ठान, मणिपूर, अनाहत विशुद्धि र आज्ञा)

षड्विकारः– काम, क्रोध, लोभ, मोह, मद र मात्सर्य।

षडाम्नायः– पूर्वाम्नाय, दक्षिणाम्नाय, पश्चिमाम्नाय, उत्तराम्नाय, ऊर्ध्वाम्नाय र अधराम्नाय।

त्यसउसले दुर्गाहरूको पीठ कुन मतबाट स्थापित भएको हो। त्यो तोरणको विचारबाट बुझ्नुपर्छ। किनभने दुर्गाविद्या छ आम्नायमै पूजित छन्। त्यस्तै ब्रह्माणी आदि अष्टमातृकाहरू पनि छ आम्नायमै पूजित हुने हुनाले तिनीहरूको नियम पनि दुर्गाहरूकै जस्तो हुन्छ। अब यहां एउटा विचारको कुरा छ। अष्टमातृकामध्ये प्रत्येकको आवरण पूजामा सबै अष्टमातृकाको पूजा हुन्छ। तर नाम रूप भने कतै कतै फरक देखिन्छ। सो कुरा गुरुमुखबाट बुझ्नुपर्छ।

इति श्रीकामकलारहस्ये कामकलाभेदव्याख्यापूर्वकतोरणरहस्यवर्णनन्नाम प्रथमपटलः।



# द्वितीय पटल

नगरहरूमा कुनै न कुनै प्रकारका देवालयहरू देखिन्छन्। त्यसको मतलब के हो भने सर्वशक्तिमान जुन परब्रह्म वा ईश्वर हुन्, उनी त निराकार निर्लेप र एकरस छन्। मेरो र तेरो भन्ने अनेक प्रपञ्चको उनमा लेश मात्र पनि हुँदैन। अतः उनको लेखा सबै एकनास छन्। उनलाई कोही मनपर्ने कोही मन नपर्ने हुन सक्दैन। "यो मेरो उपासना गर्छ, यसलाई माथि पुऱ्याउनुपर्छ, यो मेरो उपासना गर्दैन, यसलाई तलै थचारी राख्नुपर्छ" भन्ने मानिसको जस्तो भावना उनमा कदापि हुँदैन। उनी त सर्वव्यापी छन्। केवल साक्षीरूप भएर सबैको चालामाला हेरेर सच्चिदानन्दरूप बनी रहन्छन्। यस्ता जतातते व्याप्त भएका ईश्वरको आवाहन र स्थापनाको कारण के हो भने मानिसको विश्वास र भाव सिद्ध गर्नाको लागि ईश्वरको कुनै सगुणरूपको कल्पना भएर आवाहनादि कर्म हुन्छ।"

"विश्वासः फलदायकः" अर्थात् विश्वासले नै फल दिन्छ भनेर शास्त्रले भनेकै छ। सोही विश्वासको लागि कुनै वस्तुमा आवाहनादि गरी त्यसलाई ईश्वर मान्दछन्। फेरि भावको भेदले गर्दा प्रतिमा, यन्त्र, जल र कोरा पाषाणादिमा सो आम्नायका सबै देवताको भावना हुन्छ। अतः हाम्रो नेपालमा धेरै पीठहरूमा केवल कोरा पाषाणरूप मात्रै पनि पाइन्छ। यसको मतलब यो हो कि शैवहरूले कुनै एउटा पीठलाई एउटा देवता मानेको हुन्छ, सोही पीठलाई बौद्धहरूले उनीहरूको मतानुसार अर्कै देवता मानेको हुन्छ र दुवै थरीलाई त्यहाँ पूजा आजा गर्न पहिलेदेखि नै समानाधिकार प्राप्त भएको हुन्छ।

"आफैंलाई बनाउने ईश्वरको मूर्ति आफैंले बनाएर फेरि त्यसैलाई सर्वशक्तिमान् किन संझिएको ?" भन्ने बारेमा के हो भने हामी सर्वशक्तिमान ईश्वर नै हौं ।

अनुमन्ता, शक्ति, भोक्ता र भर्ता आफैं बनेर अनेक प्रकारको चेष्टा गरिरहन्छौं । अनुमन्तारूपले अनुमान गर्छौं, शक्तिरूपले त्यसको फल चाल पाउँछौं । भोक्तारूपले त्यसको भोग गर्छौं । अनि भर्तारूपले त्यस शक्तिलाई पुष्टि गर्छौं । तर अविद्या अर्थात् अज्ञानले गर्दा हामीले आफूलाई चिन्न नसकी अविद्याले ढाकेको मनले अनेक संकल्प विकल्प गरी आफूलाई अदना जीवात्मा संझी अनेकरूपको कल्पना गरी नाना तरहको योनिमा लर्खराउँछौं । अत: "मन एव मनुष्याणां कारणं बन्धमोक्षयो:" अर्थात् "मन नै मानिसको बन्धन वा बांधिने र मोक्ष वा फुस्कने कारण हो" भनेर शास्त्रले बताउँछ ।

ईश्वर जताततै व्याप्त भए पनि उनको आराधना गर्ने एउटा अखडा वा स्थल बनेको हुन्छ । किनभने "यो ईश्वरको आराधना गर्ने चोखो ठाउँ हो, यहाँ ईश्वर प्रत्यक्ष रूपले विद्यमान छन्" भन्ने भाव सबैको मनमा उब्जनाले प्रकृतिबाट नै अर्थात् स्वभावैले मनको भाव केही न केही ईश्वरतिर झुक्न जान्छ । तसर्थ यस्तो अखडालाई आफ्नो मतानुसार देवालय, गुम्बा, गिरजा, मस्जिद इत्यादि नामले पुकार्दछन् । सबै मतले उनै निराकार, निर्लेप र एकरस सर्वशक्तिमान्को ईश्वर "शून्य" "गड" अथवा "खुदा" इत्यादि नामभेदले उपासना हुन्छ । उपासनाको तरिका आ-आफ्नो मतानुसार फरक फरक हुनाले आराधना हुने अखडा पनि आफ-आफ्नो मतानुसारले सुसज्जित भएको हुन्छ । अरू धर्मको बारेमा म केही जान्दिनँ, अब हाम्रो धर्मानुसार देवालयको चर्चा गर्दछु । ईश्वरको सगुणध्यानानुसार कल्पना भएको रूपको प्रतिमा, यन्त्र अथवा कलश जलकुण्ड र कोरा पाषाणादिमध्ये कुनै न कुनै एउटाको स्थापना गरिन्छ । कतै कतै त यन्त्र मूर्ति दुवै चीज पनि स्थापित हुन्छन् । हाम्रो नेपालको ठूलो ठूलो आगममा त "वेर" पनि स्थापित भएको हुन्छ । "वेर" पनि यन्त्र जस्तै पञ्चमहाभूतात्मक देवताको देहसूचक कल्पना गरिएको हुन्छ । यसमा स्वर्णादि अष्ट धातुको प्रतिनिधि सुवर्णादि, नौ आत्माको प्रतिनिधि हीरा आदि नवरत्नहरूले युक्त भएको पञ्चमहाभूतको प्रतिनिधि



पञ्चरङ्गी धागोले बेह्रिएको ठूलो घडा, वालिष्ठ वा बाकसमा के हो भन्ने भान पर्ने किसिमको हुन्छ । यन्त्रलाई सात्त्विक मूर्ति प्रतिमालाई राजस मूर्ति र वेरलाई तामस मूर्ति मानिन्छ । त्यस कारणले साक्षात् ईश्वर नै संझेर प्रतिमादि स्थापित गरिन्छ र त्यसमा आवाहन र प्राणप्रतिष्ठा आदि कर्म हुन्छ ।

आवाहन प्राणप्रतिष्ठा आदि भएपछि, हाम्रो यो कलेवरमा चैतन्यरूप जीव रहँदा मात्रै त्यो कर्मशील अर्थात् काम गर्न र काम दिन सक्ने भए झैं प्रतिमा र यन्त्रादि पनि सचैतन्य भएर उपासकलाई पुरुषार्थचतुष्टय अर्थात् धर्म, अर्थ काम मोक्ष दिने हुन्छन् । जगत् सबै ब्रह्ममय छँदैछ भने प्रतिमादि कलेवरलाई किन जगाउनुपर्‍यो भने, शव अर्थात् मुर्दामा ब्रह्म व्याप्तै भए पनि चैतन्यरूप जीव नहुनाले जड भए झैं प्राण प्रतिष्ठाहरू नभएकोले प्रतिमा आदिलाई जड संझेर प्राणप्रतिष्ठादि गर्ने चलन भएको हो ।

यहाँ तोरणको फाइदा बताउनुभन्दा पहिले एउटा सानो कुरा दर्शाउनु छ । देवताको आराधना गर्ने उपाय दुइ छन् । तीमध्ये एक जप अर्को अर्चन । जप प्रधान भएको यागको नाम पुरश्चरण र अर्चन (पूजा) प्रधान भएको यागको नाम अनुष्ठान हो । तर यी दुवैमा जप र अर्चन दुवैका आवश्यकता हुन्छ । पुनश्चरणमा सामान्य किसिमले पूजा हुन्छ र विशेषरूपले जप गरी जपको गन्ती राखी संकल्पित संख्याको जप हुन्छ र त्यसको दशांश हवन, त्यसको दशांश तर्पण र त्यसको दशांश मार्जन र यसको दशांश ब्राह्मणभोजन हुन्छ ।

यसमा हवनादिको साटो दशांशको डबल जप मात्रै पनि हुन्छ । यस्तो भएमा यागरूप पुरश्चरण हुन्छ । फेरि अनुष्ठानमा चाहिं विशेष पूजा र १०,२७,५४ वा १०८ सम्म मात्रै मन्त्र जप हुन्छ र वीरभोजन हुन्छ ।

यसमा यतिकै मात्र गरे यागरूप अनुष्ठान र पशुवलि जपान्तमा गरी पशुको स्कंधमांस अर्थात् गर्धनको मासुले षोडशाहुति अर्थात् १६ टुक्राले अग्निकुण्डमा हवन गरी कुलपुष्प र कुलामृतले देवतालाई तर्पण गरी वीरभोजन गरे यज्ञरूप अनुष्ठान हुन्छ । यो कर्म पाशवकल्पबाट हुँदैन । फेरि

यसको क्रम पनि दुइ प्रकारको हुन्छ। एक सोमादि क्रम र अर्को अचिरादि क्रम। जल र प्रतिमादिमा देवताको आवाहन भएर हुने सोमादि यज्ञ र अग्निमा देवताको आवाहन भएर हुने अचिरादि यज्ञ मानिन्छ । अतः तर्पण सोमादि क्रम र हवन अचिरादि क्रम हो। अहिले तोरणको बारेमा चर्चा गर्नुपर्ने भएको हुनाले यसको वैज्ञानिक रहस्यको बारेमा चर्चा गर्नु उपयुक्त ठहर्दैन। प्रत्येक यागमा जप अर्चन र हवन तीनैमा पञ्चमकारको प्रयोग अत्यावश्यक हुन्छ । "म" कार भनेको के हो भने प्रकाश र विमर्शको अथवा आकर्षण र विकर्षणको विश्रान्तिधाम हो। जस्तै अहं मा "अ" काररूप प्रकाश र "ह्" काररूप विमर्शको विश्रान्तिधाम "म" कारको संयोग हुँदा "अह" भन्ने निरर्थक शब्दको "अहं" भन्ने सार्थक शब्द बनेर काम दिने भयो। त्यस्तै प्रकाशरूप "अ" र विमर्शरूप "उ" को विश्रान्तिधाम "म" कार हुनाले "ॐ" कार रूप प्रणव बन्न गयो । त्यस्तै याग वा यज्ञमा विश्रान्तिधामरूप पञ्चमकारको प्रयोग हुन्छ। जप, अर्चन र हवन यति तीनै थरीमा तीनै प्रकारको पञ्चमकारको प्रयोग हुन्छ । जपमा मौन, मन्त्र, मनन, मन (योनि) र मुद्रा।

अर्चनमा मद्य, मांस, मत्स्य, मुद्रा (रोटी) र मैथुन (रज र विन्दु मिश्रित पदार्थ) यो आ–आफ्नो परंपरानुसारको हुन्छ ।

कसैको मतमा पक्षीको अण्डमा रजविन्दु हुनाले सोही र कसैको मतमा हयारिपुष्प अर्थात् करवीरको फुल शिवको लिङ्ग मानेर त्यसमा विन्दुरूप श्रीखण्ड चंदन र योनिपुष्प अर्थात् अपराजितापुष्पलाई कालीको योनि मानेर त्यसमा रक्तचंदन घसेर रज बनाई ती दुइको संयोग गराई विधि विधानले भर्गलिंगामृतरूप बनाइन्छ । भर्गलिंगामृत नै सृष्टिको कारण हो। जगतै भर्गलिंगामृतको रूपान्तर हो भन्ने प्रत्यक्ष देखिएकै छ। हवनमा मैथुन, मौन, मन्त्र (मृगी वा हंसी) मुद्रा र मेधा (पूर्णाहुति) हुन्छ।

यो अपराजिता र करवीर पुष्पको बारेमा बृहद्योनितन्त्रमा यस्तो उक्ति छ।



शिखिपुच्छान्तरे योनिं संस्थाप्य प्रकृतिर्यदा।
कृष्णोभूत परेशानि तदा जाता ऽ पराजिता ।। २६ ।।
शिखिपुच्छाद् विनिः सृत्य योनिर्जाता महीतले ।।
योनिचिह्नं स्थितं तत्र देवि कामकलात्मकम् ।। २७ ।।
विष्णुक्रान्तां समासाद्य लालरूपो ऽ भवद्धरः ।
योनिस्वरूपं तत्पुष्पं देव्याः प्रीतिकरं परम् ।। २८ ।।
तत् पुष्पं परमेशानि रक्तचन्दनचर्चितम् ।।
पूजयेद्वीरभावी च योनिपूजाफलं लभेत् ।। २९ ।।
हयारिपुष्पगर्भस्थशिवलिंगेन पार्वति ।
मैथुनं जायते तेन शक्त्यभावेऽपि सुन्दरि ।। ३० ।।
परपुष्पे क्षिपेद् गन्धं तत्र पुष्पे क्षिपेत्परम् ।
तस्मादुद्धृत्य तत्त्वञ्च तर्पयेत् परदेवताम् ।। ३१ ।।

–सर्वोल्लासतन्त्र षोडश उल्लास (पृ· ५७) मा उद्धृत

भावार्थः– कालीले आफ्नो योनि शिखिपुच्छ अर्थात् मयूरको एक प्वांखको बीचमा राखेर उनी श्रीकृष्ण भइन्, अनि त्यही योन्याकारको अपराजिता पुष्प बन्यो। विष्णुकान्ता अर्थात् अपराजिता साथमा लिएर शिवलतारूप बने। त्यस पुष्पलाई रक्तचन्दनले लेपेर वीरभावले पूजा गर्दा योनिपूजाको फल मिल्दछ। हयारिपुष्प अर्थात् करवीर पुष्पको भित्र रहेको शिवलिंगसित (गुरुले बताए बमोजिम तन्त्रोक्त मन्त्रोच्चारण गर्दै हस्तक्रिया गरेर) यो योनिपुष्पको मैथुन गराएर त्यसको रस झिकेर अर्थात् पूर्वोक्तवत् श्रीखण्ड र रक्तचन्दन मिश्रित गराएर परदेवतालाई तर्पण गर्नू। हयारिपुष्पमा लिङ्ग भएको बारेमा कुलचूडामणितन्त्रमा यस्तो छ –

"स्वलिंगं करवीरेषु संस्थाप्य पुरुषोतमः ।
राधिका ऽ भून्महादेवः श्रृङ्गारानन्दहेतवे ।। ३३ ।।
प्रकृतेर्लक्षणं यद् यत् शिखिपुच्छे महेश्वरि ।
आत्मयोनिमिमां ज्ञात्वा स्वमूर्ध्नाधारयद्हरिः ।। ३४ ।।

–सर्वोल्लासतन्त्र षोडश उल्लास (पृ· ५८) मा उद्धृत

भावार्थ- महादेवले (यहां विष्णु र शिवलाई एक संझेर पुरुषोत्तम भन्ने विशेषण भएको हो) आफ्नो लिङ्ग करवीरपुष्पमा राखेर श्रृंगारानन्दको लागि राधिका भए। शिखिपुच्छ अर्थात् मुजुरको प्वांखमा योन्याकारादि प्रकृतिको लक्षण हुनाले आफ्नो योनि संझेर श्रीकृष्णले आफ्नो शिरमा पहिरेका हुन्।

फेरि अर्को कुरा के हो भने हाम्रो आर्यमतमा सबै देवताको उपासना गर्दा वीरभावमा पुगेपछि अर्थात् सोऽहं भावले उपासना गर्ने गरेपछि मात्र परम ज्ञान प्राप्त गरी मुक्ति मार्गमा पुगिन्छ। त्यस उसले वीरभवाबाट उपासना गर्दा पञ्च "म" कारको प्रयोग गर्नेपर्छ। सो पञ्च मकारको बारेको माथि केही चर्चा भएकै छ। अब यहां त्यसको विशेष केही रहस्य दर्शाउँछु। हुनत अहिले यहां तोरण विषयको वर्णन गर्नुपर्ने हो। तर सो वर्णन गर्दा त्यसको अभिप्राय यथार्थ नझल्काए त्यो वर्णन अधुरो हुन जाने हुनाले यहां लंबे चौडे अरू अरू कुरा पनि घुसाएर वर्णन गर्नु आवश्यक पर्न आयो।

अब वीराचारको बारेमा चर्चा गरौं। सर्वोल्लास तन्त्रमा यस्तो उक्ति छ–

"मद्यं मांसञ्च मत्स्यञ्च मुद्रामैथुनमेव च।
वीराचारमिदं प्रोक्तं साधकस्यापि बीजकम् ॥ १६ ॥"
–षोडश उल्लास (पृ. ५६)

अर्थात् मद्य, मांस, मत्स्य, मुद्रा र मैथुन वीराचारमा साधकको लागि बीउ नै हो। यहां "यस्तो लोकनिन्दित पदार्थद्वारा देवताको पूजा किन हुन्छ" भन्ने प्रश्न उठ्न सक्तछ। यसको समाधान यस प्रकारको हुन्छ। भर संसारमा जताततै मैथुन, मत्स्य, मांस र मद्य यति चार मकारको प्राय निन्दा नै सुनिन्छ। अझ धार्मिक प्रवृतिका सबै धर्मका समाजले त झन विरोध गरे फैं देखिन्छ। तर विद्वत्समाजले केही गौर गरेर धर्मशास्त्रको अध्ययन र मानवको सधैंको सामाजिक जीवनको मनोवैज्ञानिक विश्लेषण गर्ने गरे यी पांचै मकार मानिसको भौतिक तथा आध्यात्मिक उन्नतिको लागि अत्यावश्यक साबित हुन आउँछ। फेरि सबै धर्मले प्रत्यक्ष वा अप्रत्यक्ष रूपले भए पनि यसको



प्रतिपादन गरेका छन्। किनभने सबै धर्ममा विवाह कर्म धूमधामको विधानले मनाइन्छ। अझ हाम्रो वैदिक धर्ममा त झन गर्भाधान कर्मको समेत उल्लेख पाइन्छ। यो कर्म मैथुनकै लागि हो। फेरि यो विना संसारको अस्तित्व नै रहन सक्तैन। यसरी प्रत्यक्ष देख्ता देख्तै पनि मैथुनलाई लोकनिन्दित कर्म हो भन्नु कसरी? हाम्रो आर्यधर्मको बारेमा यसको प्रयोग कस्तो कस्तो ठाउँमा हुन्छ भन्ने कुराको चर्चा गर्दछु।

मैथुन वीराचारको लागि आवश्यक छ, तर आफ्नै शक्तिसित मात्रै। उस्तै मद्य मांसको पनि सेवन गर्नुपर्छ, तर आफ्नो जिह्वातृप्तिको लागि नभई केवल देवपितृतृप्तिको लागि शास्त्रोक्त मात्रामा मात्रै। यसै हेतुले विवाह, सोमयाग, सौत्रामणियज्ञ र भैरवीचक्रादि महायज्ञ योगादिको विधान शास्त्रले बताएको हो। आजकल हाम्रो समाजमा श्रोत, स्मार्त, आर्ष, अग्निहोत्रीहरूको प्रचलित कर्मकाण्डमा पनि यज्ञ गर्दा आफ्नो इष्टदेवतालाई कामोन्मत्त र उनको शक्तिलाई ऋतुमती भएको कल्पना हुन्छ र यज्ञको वेदी वा कुण्डलाई देवीको योनि र अग्निलाई देवको वीर्य संझिएर अग्निस्थापन हुन्छ। यसैलाई गर्भाधान संस्कार भन्दछन्। नारद पञ्चरात्रको होम गर्ने विधानमा यस्तो लेखिएको छ।

"ऋतुस्नातां महालक्ष्मीमानयेत् कुशविष्टरे।
संपूज्य लक्ष्मीमनुना पद्माक्षीं पद्मसंभवाम्
क्षीरवारिधिसंभूतां श्रीविष्णो रुपगामिनीम्।
मातरं सर्वजगतो रिरंसुं विष्णुमानयेत् ॥
संस्थितम् ऋतुदानाय कर्तारमखिलेश्वरम्।
रेतोरूपं समानीय वह्निं चारणीसम्भवम् ॥
आत्मनोभिमुखं वह्निं जानुभ्यामवनींगतः।
विष्णुवीर्यधिया देव्या योनावेनां विनिक्षिपेत् ॥

भावार्थ– लक्ष्मीलाई ऋतुमती कल्पना गरी विष्णुलाई संभोगोद्यत संझिएर अरणिजन्य अग्निलाई विष्णुवीर्य अनि यज्ञकुण्डलाई लक्ष्मीको योनि मानेर जमीनमा घुँडा टेकेर अग्निकुण्डमा हाल्नू।

वैदिककालमा पनि मद्यमांसको प्रयोग गरेर आर्यहरू वीरभावले उपासना गर्दथे। मैथुनको बारेमा विवाहकर्मको र गर्भाधान कर्मको विधान त वेदले बताएको सर्वविदितै छ।

मद्य मांसहरू पनि उसकालका आर्यहरूको सधैंको खाना थियो भन्नुमा कुनै अत्युक्ति हुने छैन। किनकि मद्य मांसको प्रशंसा र यसको प्रयोगविधि वैदिक साहित्यमा प्रायः भरिभराउ देखिन्छ। वैदिक आर्यहरू सोमयाग र अश्वमेधादि यज्ञहरू गर्दथे। यी यज्ञहरूमध्ये सौत्रामणि नामक यज्ञ खास गरेर मद्यपानकै लागि गरिने हुन्थ्यो।

अब शक्ति अर्थात् स्त्रीको बारेमा विचार गरौं। शक्ति अर्थात् स्त्रीको उपयोग उपासनामा राखिएको कारण के हो भने सबैभन्दा बढी मनलाई बराल्ने स्त्रीको लागि पुरुष र पुरुषको लागि स्त्री हुनाले यी उपासनाको लागि परम्परामा बाधक र विघ्न कै देखिन्छन्। तर सोही विघ्न हटाउनलाई "विषस्य विषमौषधम्" भन्ने भणितिबमोजिम गरी स्त्री पुरुषको हेलमेल गर्ने प्रथा साधनमा राखी व्यभिचार निवारणको लागि शास्त्रले कडा नियम पनि राखेको हो।

"युवतिं पूजयेद्वीरो मनःक्षोभं न कारयेत्।
मनः क्षोभे कृते देवि रौरवं नरकं व्रजेत्॥"

—कुलक्रमचिन्तामणि

अर्थात् वीरले युवतीको पूजा गर्नुपर्छ, तर मनक्षोभ गराउनु हुँदैन, मनक्षोभ गरायो भने रौरव नरकमा पर्ने हुन्छ।

यस्ता धेरै प्रकारका प्रणहरू आगम शास्त्रले राखेको छ। तीमध्ये यहाँ यो एउटा श्री "कुलक्रमचिन्तामणि" को उक्ति मात्रै दर्शाएको हुँ।

यस्तो बराबर हेलमेल गर्ने बानी बसेपछि स्त्री पुरुषमा दाइ भाइ दिदी बहिनीको भाव उत्पन्न भई साथी साथी जस्तो भएर मनको खराब विकार हट्ने हुन्छ।



अब पूजामा मैथुन प्रयोग गर्ने विषयमा केही चर्चा गरौं। यस्ता याग तीन थरीका हुन्छन्। पञ्चमयाग, दूतियाग र दूतीक्रम (यसलाई लतासाधन पनि भन्दछन्)।

यिनमध्ये पञ्चमयाग आफ्नै स्वास्नीसितबाट हुन्छ। दूतीयाग र दूतीक्रम परकीया अर्थात् अर्काकी स्वास्नीबाट हुन्छ। यस विषयमा पहिले बृहद्योनि तन्त्रको एउटा उक्ति दर्शाएर अरू कुरा बताउँछु। बृहद्योनितन्त्रमा यस्तो उक्ति छ–

"सुन्दरीं प्रमदां कान्तां सुशीलां चारुहासिनीम्।
गुरुभक्तिरतां देवि कुलसाधनतत्पराम्॥४॥
दीक्षितां परकान्तां वा स्वकीयां वा महेश्वरि।
आनीय बहुयत्नेन जातिभेदं नं चाचरेत्॥५॥
विवर्जितघृणालज्जां सर्वदानन्दसंयुताम्।
अथवा पानसंहृष्टां चक्रमध्ये समानयेत्॥६॥
पूजयेच्च रमेच्छक्ति स्वकीयामतिहर्षतः।

—सर्वोल्लासतन्त्र अष्टाविंश उल्लास (पृ. १०७) मा उद्धृत

पूजयेत् परकान्तां च रमणं नैव कारयेत्॥
श्रीचक्रे स्थापयेद् भक्त्या स्वकीयां परमेश्वरि।
तदभावे महेशानि परशक्तिं प्रपूजयेत्॥
यदि दैववशाद् देवि स्वस्त्री वन्ध्याभिचारिणी।
तथापि तस्याः संतोषं कारयेत् यत्नतो बुधः॥"

भावार्थ– सुन्दरी, सुशीला, हँसिली, गुरुभक्तिमा रत भएकी, कुलसाधनमा तत्पर भएकी (पूजाकालमा) घृणा र लज्जाले वर्जित भएकी अनि सदानन्दी अथवा पानोन्मत्ता आफ्नी अथवा अर्काकी स्वास्नीलाई बहुतै यत्नपूर्वक ल्याई जातिभेद नगरी चक्रपूजामा राख्नुपर्दछ। आफ्नी कान्तालाई अतिहर्षले पूजा गरी रमण गर्नुपर्छ। उता परकान्तालाई भने पूजा गर्नु हुन्छ, तर रमण गर्नु हुँदैन। चक्रपूजामा पाएसम्म आफ्नै स्वास्नीलाई (शक्ति बनाएर) राख्नुपर्छ, सो गर्न अनुकूल नभए मात्रै परस्त्रीलाई (शक्ति बनाएर)

राख्नु । केही गरी अभागले गर्दा आफ्नी स्वास्नी बन्ध्या र व्यभिचारिणी हुन गए पनि साधकले हरजुक्ति गरेर उसैलाई खुशी राजी गराउनुपर्दछ ।

यो उक्ति पञ्चमयागको लागि हो । पञ्चमयागमा एउटै शक्तिबाट (पाएसम्म स्वकीयाबाट) मात्र काम हुन्छ । फेरि बृहद्बडवानल तन्त्रमा यस्तो उक्ति छ ।

"स्वकीयामैथुनं कार्यं परकीयां विवर्जयेत् ॥
पूजयेद्रमयेत्कान्तां स्वकीयां कौलिकोत्तमः ।
पूजयेत् परकान्तां च रमणं नैव कारयेत् ॥
निजकान्ता प्रसूतापि रम्यते कौलिकागमे ।
परकान्ता प्रमत्तापि गजतुण्डाख्यमुद्रया ॥
मन्थयित्वा च सन्तोषं तस्याः कार्यं प्रयत्नतः ॥

भावार्थ– मैथुन आफ्नै स्वास्नीको साथमा हुन्छ, अरू स्त्रीको साथमा हुँदैन । आफ्नी शक्तिको पूजा गरी रमण पनि गर्नु पर्दछ । तर परशक्तिको पूजा गर्नुपर्छ, रमण भने गर्नुहुँदैन । आफ्नी कान्ता प्रसूता भए पनि कौलिकागममा रमणको योग्य हुन्छे, परकान्ता भने प्रमत्ता भए पनि यत्नपूर्वक गजतुण्ड मुद्राद्वारा मन्थन भएर मात्रै संतोष पाउने हुन्छ ।

दूतीयागमा पनि एउटा शक्तिको मात्र उपयोग हुन्छ । द्रतीक्रममा भने आठ देखि लिएर १०८ सम्म पनि शक्तिको प्रयोग हुन्छ । तर ती सबै परकीया नै चाहिन्छन् । देवीयामलमा यस्तो वचन छ–

"पुक्कश्या अन्त्यजा श्रेष्ठा ततोऽतिसुन्दरी स्मृता
सुन्दरीपरतः प्रोक्ता प्रीतिमत्यनुरागिणी ।
तत्परा परमेशानि उन्मत्ता शुभलक्षणा ॥
समयाचारसंपन्ना मन्त्रज्ञा भयवर्जिता ।
विदग्धा त्वप्रसूता च धैर्यस्वातन्त्र्यसंयुता ॥
एवं गुणसमायुक्ताः पूजयेत् सर्वयोषितः ॥"

–बृहत्पुरश्चर्यार्णव द्वितीय खण्ड पृ. ३१८



अर्थात् "पुक्कशी (निषादबाट शूद्रमा जन्मेकी) भन्दा अन्त्यज श्रेष्ठ हुन्छे, त्यसभन्दा अतिसुन्दरी श्रेष्ठ हुन्छे । सुन्दरीभन्दा पनि प्रीति भएकी अनुरागिणी असल हुन्छे । त्योभन्दा अरु शुभलक्षण भएकी उन्मत्ता असल हुन्छे । त्यसमा उपर्युक्त यी सबै स्त्री समयअनुसारको आचारले युक्त भएकी मन्त्र जान्ने निडर, विदग्धा (चलाक), छोराछोरी नभएका धैर्य र स्वातन्त्र्य भएका यस्ता गुण युक्त हुनुपर्छ र त्यस्तालाई नै पूजा गर्नुपर्छ ।"

तन्त्रान्तरमा अर्को उक्ति छ—

"ब्राह्मणी रजकी वेश्या चाण्डाली नापिताङ्गना ।
चर्मकारी गोपकन्या मातङ्गी चाष्टका स्मृता" ॥

अर्थात् ब्राह्मणी, रजकी (धोबिनी), वेश्या, चाण्डाली (पोडिनी), नाउिनी, सार्किनी, गोपिनी, मातङ्गी यिनमध्येमा कुनै दूतीयागलाई र अनि दूतीक्रमलाई प्रशस्त हुन्छन् ।

यही विधानले अघि द्वापरयुगमा श्रीकृष्णले गोपिनीहरूसित गोकुलमा दूतीक्रम (लतासाधन) गर्नुभएको थियो । यसैलाई रासलीला भन्दछन् ।

तन्त्रान्तरमा यस्तो वचन पनि छ–

★"मद्यद्रोणसहस्रैश्च मांसभारशतैरपि ॥
न तुष्यति महादेवी कुण्डगोलादिकं विना ॥ ३५ ॥"

–कौलावलीनिर्णय पञ्चम उल्लास पृ. २४

"हजार द्रोण मद्य र शय भार मांस चढाए पनि कुण्डगोलादि नभए महादेवी खुशी हुन्नन् । अब यी यागहरूको विषयमा धेरै कुराहरू छन् तापनि मैले यहां प्रमाणको लागि एक झलक मात्र झल्काएको हुं ।

★ १ द्रोण = १०९ औंस । १ भार = ८००० तोला ।
कुण्डगोलको अर्थ गुरुमुखबाट अवगत गर्नुपर्छ ।

"पीठजार्गातिहेतवे" भन्ने उक्तिको अर्थ झल्काउनको लागि पूर्वोक्त प्रमाणहरू दिएको हुं। यसको मतलव के हो भने पीठहरूको पूजामा पञ्चमयाग आदि गरेर कुण्डगोलादिले युक्त गराएर प्रकटरूपमा पूजा गर्न कसैले पनि हुँदैन। त्यस कारणले त्यसको प्रतिनिधिको लागि "पीठे पीठे तोरणानि" भनेर शास्त्रले पूर्वोक्तिमा बताएको हो। "कुलामृतरसास्वादं मुग्धं पीठं भवेत् शुभं" भनेको अर्थ के हो भने कुण्डगोलादिको आस्वादले मुग्ध भएको पीठ शुभ हुन्छ। अर्थात् तोरणमा त्यो मूर्ति अंकित गर्नाले पञ्चमयागादिको फल मिल्छ। "स्वाम्नायश्च परिज्ञाय स्थापितेषु यथाक्रमात्। पीठे पीठे तोरणानि पीठ जार्गातिहेतवे" भनेको मतलव के हो भने पीठलाई जाग्रत गराउनको निमित्त क्रमैसित रतासन मूर्तिहरूको तोरण टांग्नुपर्छ।

अतः देवालय आदिमा स्थापित देवताहरूको पनि विश्रान्तिधामको मकाररूप गराएर रतासनको मूर्तिहरूको निर्माण गराएर तोरण बनाई राखिन्छन्। तोरणको विषयमा यो वर्णन भयो।

अब मन्दिरको विषयमा केही कुरा भन्नु छ। एकतले मन्दिर छ भने सो मन्दिरको टुँडाल सर्वतत्त्वात्मक हुन्छ। तीनतले मन्दिर छ भने सबभन्दा तलको टुंडालहरू आत्मतत्त्वात्मक, दोस्रो तलाका टुंडालहरू विद्यातत्वात्मक र तेस्रो तलाका टुंडालहरू शिवतत्वात्मक भई सबभन्दा माथि गजुर रहेको हुन्छ। पांचतले मन्दिर भए तलको टुंडाल सर्वतत्वात्मक, त्यसमाथि आत्मतत्वात्मक, त्यसमाथि विद्यातत्वात्मक, त्यसमाथि शिवतत्वात्मक र त्यसमाथि महाबिन्दवात्मक भई त्यसमाथि गजुर रहेको हुन्छ। अक्सर गरेर जतिवटा तत्वात्मक छाना हुन्छ, उतिवटा तत्वात्मक वेदी पनि हुन्छ। अर्थात् तल एउटा ठूलो वेदी भयो, त्यसमाथि त्योभन्दा केही सानो वेदी हुन्छ र यस्तै प्रकारले माथि माथि सानो हुँदै रहेको हुन्छ। गजुर पनि फरक फरक आकारको हुन्छ। त्यस विषयमा पछि मन्दिरहरूको व्याख्या गर्दा वर्णन हुनेछ। अब यी तत्त्वहरू के हुन् भन्ने बारेमा विचार गरौं।



## आत्मतत्त्व

| | | |
|---|---|---|
| १. | सत्व रज, तम त्रिगुणात्मक प्रकृति | |
| २. | मन | अन्तस्करण |
| ३. | बुद्धि | |
| ४. | अहंकार | |
| ५. | आंखा | ज्ञानेन्द्रिय |
| ६. | कान | |
| ७. | नाक | |
| ८. | जिभ्रो | |
| ९. | छाला | |
| १०. | हात | कर्मेन्द्रिय |
| ११. | खुट्टा | |
| १२. | पायु | |
| १३. | उपस्थ | |
| १४. | वाक् | |
| १५. | शब्द | तन्मात्रा |
| १६. | स्पर्श | |
| १७. | रूप | |
| १८. | रस | |
| १९. | गन्ध | |
| २०. | पृथ्वी | महाभूत |
| २१. | जल | |
| २२. | वायु | |
| २३. | तेज | |
| २४. | आकाश | |

## विद्यातत्त्व

१. पुरुष
२. नियति
३. काल
४. राग
५. अविद्या
६. कला
७. माया

## शिवतत्त्व

१. शिव
२. शक्ति
३. सदाशिव
४. ईश्वर
५. शुद्धविद्या

२४ आत्मतत्त्व + ७ विद्यातत्त्व + ५ शिवतत्त्व = ३६ तत्त्व

## महावैन्दवात्मक तत्त्व

'महाचैतन्यधन' यो समेत गर्दा जम्मा ३७ तत्त्व पनि हुन सक्छ।

अब मन्दिरका टुंडालमा देवताकोमूर्ति र त्यस मूर्ति मुनि रतासनको मूर्ति अंकित भएको हुन्छ। हरेक टुंडालमा यस्तै किसिमसंग माथि मूर्ति र तल रतासनको वा रतासन नगरेको नग्न भाले पोथीको तसवीर पनि देखिन्छ। त्यसको मतलव के हो भने माथिको मूर्ति आवरण देवताको रूप र तलको मूर्तिबाट मन्त्राद्धारको संकेत मिल्दछ। रतासन मूर्तिबाट उद्धार भएका अक्षर वा बीजबाट निस्केका योगिनी वा भैरवहरूको समष्टिरूपको मूर्ति त्यस माथिका हुन्छन्। तिनबाट मन्त्रोद्धार र अक्षरको उद्धार हुन्छ। जसले गर्दा यी मूर्तिबाट उद्धार भएका अक्षर वा बीजबाट निस्केका योगिनी वा भैरवहरूको समष्टिको मूर्ति त्यस माथिका हुन्छन्।



रतासन नभएको मूर्तिबाट केवल अक्षरको उद्धार हुन्छ। अब यो मन्त्रोद्धार वा अक्षरोद्धार कसरी हुन्छ भन्ने विषयलाई धेरै कुराको विचारबाट निकालिन्छ। माथिको आवरण देवता कुन अक्षरबाट निस्केको योगिनीको रूपान्तर हो, कुन भुवनको, कुन आम्नाय र कुन प्रकारको रतासनमूर्ति हो। फेरि देवलको कुनचाँहि तलामा अर्थात् कुन तत्त्वात्मक तलामा रहेको टुँडाल हो। यति कुराको विचार गरी मूलद्वारमाथि कुन देवताको मूर्ति छ ती देवताको मन्त्रहरूसमेत विचार गरी त्यसबाट उद्धार गर्नुपर्छ। अब पूर्वोक्त चौध भुवनको बीजाक्षरहरूको बारेमा विचार गरौं।

## (क) संगृहोत शक्ति

१. मूलाधार यसको अक्षर.........लं
२. स्वाधिष्ठान .........वं
३. मणिपूरकचक्र यसको अक्षर.........रं
४. अनाहतचक्र......... रं
५. विशुद्धिचक्र ......... हं
६. आज्ञाचक्र.........प्रणव
७. सहस्रारचक्र.........वाग्वीज।

## (ख) कर्तृत्व शक्ति

१. ताप यसको अक्षर.........मं
२. चुम्बक.........टं
३. रसायन.........सं
४. गति ......... चं
५. विद्युत्.........ठं
६. प्रकाश.........त्रं
७. लय ......... क्षं

आम्नायको उत्पत्तिको विषयमा माथि वर्णन भई सकेको छ। अब कुन कुन आम्नायमा कति कति भेद हुन्छन् भन्ने बारेमा कुलार्णव तन्त्रमा यस्तो वचन छ।

"पूर्वाम्नायस्य सङ्केताश्चतुर्विंशतिरीरिताः ।
दक्षिण्णाम्नायसङ्केताः पञ्चविंशतिरीरिताः ।।४३।।
पश्चिमाम्नायसङ्केता द्वात्रिंशत् समुदाहृताः ।
विदुः षट्त्रिंशदाम्नाये सङ्केताः श्रीमदुत्तरे ।।४४।।
ऊर्ध्वाम्नायस्य चैतानि न सन्ति कुलनायिके"

—तृतीय उल्लास (पृ. १६३)

अर्थात् पूर्वाम्नायमा चौवीस, दक्षिणाम्नायमा पच्चीस, पश्चिमाम्नायमा बत्तीस, उत्तराम्नायमा छबीस र ऊर्ध्वाम्नायमा एउटै मात्र संकेतहरू हुन्छन् ।

अधराम्नायको विषयमा भने यस उक्तिमा केही पनि देखिएन, तर "तन्त्रान्तरमा शिवजीको नाभिको मुख कालाग्निरुद्रबाट अधराम्नाय निस्क्यो" भन्ने र फेरि अर्को तन्त्रमा यी पांचै आम्नायको सहयोगबाट षष्ठ आम्नाय निस्केको भन्ने पनि देखिन्छ । तर यी दुवै थरी तन्त्रका मतमा अधराम्नायमा बौद्धमार्गीय मतका वीस संकेत हुन्छन् भन्ने छ । अब मन्त्रोद्धारको विषयमा अर्को पटलमा वर्णन हुनेछ ।

अब देवालयहरूका टुंडालमा आत्मतत्त्व, विद्यातत्त्व, शिवतत्त्व आदिको विचार गरी हरेक तत्त्वबाट कूट र बीजहरूको उद्धार हुने हुन्छ । सो गर्न निम्न लेखिएअनुसार विचार गरौं ।

## आत्मतत्त्वमा

प्रकृतिबाट — त्रपाबीज
मनबाट — नादांतक कूट
बुद्धिबाट — वाग्भवकूट
अहंकारबाट — कामकूट
आंखाबाट — इ, ई
कानबाट — उ, ऊ
नाकबाट — ऋ, ॠ



जिब्रोबाट — रसनाबीज
छालाबाट — ऐ
हातबाट — घ, ङ, च, छ
खुट्टाबाट — ढ, ण, ध, न
पायुबाट — स, श, ष
उपस्थबाट — ज्ञ
वाक्‌बाट — वाक्‌कूट
शब्दबाट — डामरकूट
स्पर्शबाट — स्पर्शकूट
रूपबाट — देहकूट
रसबाट — अमृतकूट
गन्धबाट — धूम्रकूट
पृथ्वीबाट — पार्थिवकूट
जलबाट — नीरकूट
वायुबाट — वायवीयकूट
तेजबाट — तैजसकूट
आकाशबाट— खादिकूट

## विद्यातत्त्वमा

पुरुषबाट — निर्वाणकूट
नियतिबाट — सादि निर्वाणकूट
कालबाट — शिवप्रासादकूट
रागबाट — कृत्याकूट
अविद्याबाट— आसुरीकूट
कलाबाट — हारकूट
मायाबाट — मायाकूट

## शिवतत्त्वमा

शक्तिबाट — शक्तिकूट
सदाशिवबाट — शिवप्रासादबीज

ईश्वरबाट — निर्वाणकूट
शुद्धविद्याबाट — परानिर्वाणकूट

## महावैन्दवात्मक तत्त्वमा

महावैन्दवात्मक तत्त्वबाट — खं, ब्रम्ह
फेरि संप्रदाय तीन हुन्छन् ।

त्यसउसले कुनै देवालयमा ती तीनमध्ये एक संप्रदायबाट मात्रै पूजित, कुनैमा सबै संप्रदायबाट पूजित देवता हुन्छ । त्यसको पनि टुंडालकै मूर्ति-कलाबाट विचार हुन्छ । हाम्रो नेपालमा विशेष गरी गौड संप्रदायबाट पूजित हुने देवालय छन् । कतै तीनवटै संप्रदायबाट पूजित हुने पनि छन् । तर हाम्रो मुख्य पीठ श्रीपशुपतिनाथमा भने केरलसंप्रदायी श्री १०८ परिव्राजकाचार्य आदिशङ्कराचार्यबाट पूजा विधिको प्रबन्ध भएकोले केवल केरलसंप्रदायबाट मात्र पूजा हुन्छ ।

हामी नेपालीहरू गौडसंप्रदायी भएका हुनाले, दक्षिण प्रदेशबाट केरलसंप्रदायी भट्टहरूलाई ल्याएर यहाँ पूजाहारी बनाउने प्रथा अहिलेसम्म छँदैछ ।

अब कुन कुन देश कुन कुन संप्रदायका भन्ने विषयमा शक्तिसंगमतन्त्रमा यस प्रकारको उक्ति छ–

"केरलश्चैव काश्मीरो गौडमार्गस्तृतीयकः ।
षट्पञ्चाशद्देशभेदात् सर्वत्र व्याप्य तिष्ठति ॥ ३ ॥
अष्टादशषु देशेषु गौडमार्गः प्रकीर्तितः ।
नेपालदेशमारभ्य कलिंगान्तं महेश्वरि ॥ ४ ॥
केरलाख्यः क्रमः प्रोक्तस्तूनविंशतिदेशके ।
आर्यावर्तंसमारभ्य समुद्रान्तं महेश्वरि ॥ ५ ॥
तदन्यदेशे देवेशि काश्मीराख्यः क्रमः शुभः ॥"

–कालीखण्ड चतुर्थ पटल (पृष्ठ ४१)



अर्थात् नेपालदेखि लिएर कलिंगसम्मका अठार देशमा गौड संप्रदाय, आर्यावर्तदेखि समुद्रसम्म उन्नाईस देशमा केरलसंप्रदाय, अनि योदेखि बाहेकका अरू देशमा काश्मीरसंप्रदाय हुन्छ ।

हाम्रो गुहेश्वरी पीठमा भने राजा शंकरदेवको पालामा तांत्रिक नृसिंह ठाकुरले यो पीठ पत्ता लगाई काश्मीर संप्रदायबाट चलाउने प्रथा गरेका थिए । पछि प्रताप मल्लको पालामा नेपाली संवत् ७७४ (ई. सं. १६५४) वैशाख शुक्ल एकादशी बृहस्पतिवारका दिन जीर्णोद्धार गरी उनका गुरु लम्बकर्ण भट्टद्वारा तुलजामा समष्टि गराई सबै संप्रदायबाट पूजा हुने परंपरा चलाएका हुन् । अरु यस पीठमा बौद्धमार्गीहरूले पनि नैरात्म्ययोगिनी भनेर बौद्धमार्गबाट पनि पूजा चलाउँछन् । यस्ता एउटै पीठमा शिवमार्ग र बौद्धमार्गबाट पूजा हुने पीठहरूमा सबै संप्रदायबाट पूजा हुन सक्छ ।

इति श्रीपीठदेवताजागर्तिहेतुकर्तव्यविषयवर्णनं नाम द्वितीयः पटलः

# तृतीय पटल

शंकरजीले मन्त्रको रहस्य रत्यासनादि मूर्तिहरूमा निहित गरेर मूर्ति देखाई दिनुभएको छ।

अब यसमा मन्त्रोद्धार गर्ने विषयको केही झलक देखाउने चेष्टा गर्दछु। हरेक मूर्तिबाट अर्थात् टुंडालमा रहेको देवताको मूर्ति मुनि जुन स्त्री-पुरुष संबन्धमा जति सामूहिक मूर्तिहरू देखिन्छन्, ती मूर्तिहरूबाट त्यस पीठमा स्थापित भएका देवताका विविध प्रकारका मन्त्रहरू र तिनका आवरण देवताका मन्त्रहरूको उद्धार हुन्छ। यो बहुतै रहस्यको कुरा हो। विना गुरुमुखबाट यथार्थ जान्न सकिंदैन तापनि छ आम्नायका रतासनसम्मको पाए सम्मको झल्को यसै पटलमा देखाउनेछु। अरूको पनि यथाज्ञान अलि अलि अर्को पटलमा झल्का देखाउने चेष्टा गर्दछु। हाम्रा तान्त्रिक मन्त्रहरूमा "प्रकाशात् सिद्धिहानिः स्यात्" भन्ने उक्ति हुनाले र धेरै मन्त्रहरू मुद्रित भएर ठाउँ ठाउँमा प्रकाशित भएकाले ती मन्त्रहरूबाट उपासकहरूमा प्रायशः सिद्धि देखिएको छैन। सो कुरा स्वतः सिद्ध नै छ। तसर्थ यहाँ स्पष्ट रूपमा मन्त्र प्रकाश गर्न असमर्थ भएकोमा पाठकवर्गसंग क्षमाप्रार्थी छु।

टुँडालमा रहेका चित्रहरूबाट मन्त्रोद्धारसमेत हुने प्रबन्ध मिलेको हुन्छ। त्यस विषयमा संक्षिप्त विवरण दिने चेष्टा गर्दछु। स्त्रीरूपका जति मूर्ति देखिन्छन्, ती सबैबाट अ, आ इत्यादि स्वरवर्ण बुझिन्छन्। ती स्वरवर्ण मध्ये पनि मुख्यचाहिं तीन मात्र हुन्। ती के के हुन् भने प्रकाशरूप "अ"



विमर्शरूप "उ" र कामकलारूप "ई"। यही तीनबाट अरू स्वर बनेका हुन्।, जस्तो कि "अ+आ=आ", "अ+उ=ओ वा औ" "अ+ई=ए वा ऐ" "उ+उ=ऊ" "इ+ई=ई" "अ+ऊ=ओ वा औ" "अ+ई=ए वा ऐ" एवं प्रकारले स्वरहरू बनेका हुन्। यस्तोमा दुइटा शक्ति मात्र भएको मूर्ति देखियो भने मिलेको स्वरको उद्धार हुन्छ। एउटा मात्र शक्ति भए यी तीन मध्ये एउटाको उद्धार हुन्छ। पुरुषसित मिलेको अवस्थामा भने मिलेका शक्तिहरू पनि एउटै भएर उद्धार हुन्छ।

ऋ, ॠ, ऌ, ॡ, लाई क्लीव भन्दछन्। ऌ, ॡ को भने एक पुरुष एक स्त्री वा नपुंसक रूपले उद्धार हुन्छ। त्यस्तै क, ख इत्यादि व्यंजनवर्णबाट पुरुष बुझिन्छ। तर त्यसमा "स" अथवा "न" मा विकल्पले कतै कतै स्त्रीरूप पनि हुन सक्छ।

तन्त्रमा मूर्धन्य "ल" पनि हुन्छ। सो "ल" विकल्पले स्त्रीरूप पनि हुनसक्छ। सो स्त्रीरूप भएर पनि वर्गको आदि अक्षर अर्थात् अ, क, च, ट, त, प, य, श यतिमा मिल्न आउँदा दन्त्य "ल" बन्दछ। "रलयोरैक्यं" भन्ने उक्तिअनुसार "र" वा "ल" सोही अक्षरसित मिलेर एउटै पुरुष हुन आउँछ। तर कूटमा भने यही दुवै फरक फरक अक्षरमै गनिएर फरक फरक पुरुषकै बन्दछन्। जस्तो मायावीजमा "ह+र+ई+नाद+विन्दु। त्यसमा "ह" र "र" मिलेकोमा एउटै पुरुष हुन्छ, दुइ रूप हुँदैन। "ई" को रूप शक्ति हुन्छ। त्यहाँ नाद विन्दुबाट स्त्रीपुरुषको गुप्तेन्द्रिय सूचित हुने हुनाले यस वीजको उद्धार हुने मूर्तिमा रतासन हुन्छ।

विन्दुबाट पुरुषको गुप्तेन्द्रिय र नादबाट स्त्रीको गुप्तेन्द्रिय सूचित भएको हुन्छ। कतै कतै स्त्रीको गुप्तेन्द्रियबाट पनि बिन्दु नै सूचित भएर स्त्री-पुरुषको गुप्तेन्द्रियबाट विसर्ग सूचित हुने पनि हुन आउँछ। त्यसउसले जुनसुकै वीजाक्षरी मन्त्रबाट पनि रतासन भएकै मूर्ति सूचित हुन्छ। कामवीजमा पनि "क+ल+ई+नाद+विन्दु" भएको हुन्छ। यसमा पनि माथि वर्णन भएको मायावीजमा जस्तै "क+ल" मिलेको भए पनि एउटै पुरुष सूचित हुन्छ। यस्तै किसिमले कालीवीज, अंकुशवीज, स्थिरामायावीज,

लोकरत्नवीजहरू वा राव वीज इत्यादि सवैमा यस्तै हुन्छ । अरूमा चाहिं फरक फरक भयो । दुइटा व्यंजन र एउटा स्वर मात्र मिलेको छ भने दुइटा पुरुष र एउटा शक्ति हुन आउँछ । जस्तो कि शिवको षडक्षरी मन्त्र लिउँ । यसमा प्रणवमा चाहिं अ+उ+म तीनवटा अक्षर मिल्न आएकोले दुइटा शक्ति र एउटा पुरुष मिलेको देखिन आयो र नादविन्दु भएको हुनाले पुरुष र स्त्रीको गुप्तेन्द्रिय पनि सूचित भयो । "अ" "उ" "म" मा मरूपी पुरुषले "अ" वा "उ" कुनचाहिं स्त्रीसंग संभोग गरेको हुन्छ, त्यो चाहिं अर्थबाट बुझ्नुपर्छ । अव यहाँ यो मन्त्र शिवरूप पुरुषको मन्त्र हुनाले "अ" प्रकाशात्मक स्वरवर्ण र "उ" विमर्शात्मक स्वरवर्ण हुनाले "अ" सूचक स्त्रीसितै संभोग भएको हुनुपर्छ । फेरि नमः तिर विचार गरौं । नम, फट् वषट्, वौषट, स्वाहा, स्वधा, विच्चे यति चाहिं दुइ दुइ अक्षरको एकै वीज कहिन्छन् । त्यसमा स्त्री र पुरुष दुवै संभोग भएको हुनुपर्छ । हंसवीजमा भने "ह" चाहिं पुरुष, "स" चाहिं स्त्री त्यस्तो गरी देखाएको हुन्छ ।

नमः स्वाहा, वषट्, वौषट्, इत्यादिलाई पुच्छवीज भन्दछन् । किनकि न्यासहरूमा यिनीहरूलाई पुच्छमा (पछाडि) रहने भएकोले पुच्छ भएको देखाएको हुन्छ ।

दुइभन्दा वढी अर्थात् तीन, चार, पांच अक्षरले वनेको वीजलाई कूटवीज भनिन्छ । कूटमा नादविन्दु छ भने त्यसको निंति संभोग भएको देखाइन्छ । मूर्तिमा धेरै लोग्नेमानिस स्वास्नी मानिस भए एउटा संभोग भएको देखाइन्छ । लोग्ने स्वास्नीमा संभोग भएको कूट उद्धारका निंतिमा देखाइन्छ । संभोग भएको देखाइएमा त्यसबाट कूटवीज वन्दछ, त्यसमा नाद र विन्दु हुन्छ । संभोग भएको देखाइएको छैन भने त्यहाँ खाली कूटाक्षर मात्र हुन्छ । त्यस्तो कूटाक्षर पनि मन्त्ररूप हुन्छ । त्यस्तामा नाद नमिसिएको आयो भने कूटाक्षर भनिन्छ । फेरि एउटै वीजमा त्यस्तो भएको कूट हो । अघि भने ॐ शिवको षडक्षरी मन्त्रमा प्रणवको अर्थ देखाइसकियो । त्यस्तै नमः मा पनि दुइटा अक्षरको एउटै वीज मानेर त्यसको लागि एउटै मूर्ति दिइएको हुन्छ ।



त्यसै गरी "श" को पुरुषरूप र "ई" को शक्तिरूप फेरि "व" को पुरुषरूप र "आ" को शक्तिरूप अनि फेरि त्यसै गरी "य" को पुरुषरूप र "अ" को शक्तिरूप यी तीनका तीनवटा मूर्ति हुन्छन् । यसमा तिनीहरू संगसंगै त हुन्छन् । तर नाद विन्दु नभएको हुनाले युगलमूर्ति भए पनि संभोग भएको देखाइएको हुँदैन । अब अर्को शक्तिवीजतिर विचार गरौं ।

यसमा पुरुषरूप "श" शक्तिरूप "औ" र तिनीहरूको गुप्तेन्द्रियबाट विसर्गको उद्धार हुन्छ । कतै कतै विकल्पले "ह" को विमर्श अर्थ हुन गयो भने स्त्रीरूप हुन्छ । उस्तै "अ" को प्रकाश अर्थ भयो भने पुरूषरूप हुन्छ । यसको रहस्य गुरुमुखबाट बुझ्नुपर्दछ । अब धेरै अक्षर भएर नादविन्दु समेत भए कूटवीज, नादविन्दु नभए (मोरेका, चिरेका र मात्रा लागेका अक्षरहरू) कूटाक्षर मात्र हुन्छन् । यस्तोमा एउटै मूर्ति वा चित्रमा धेरै व्यक्ति हुन्छन् । कूटवीजमा नादविन्दु भएको हुनाले अक्षरहरूका सूचक व्यक्तिहरूमध्ये कुनै न कुनैसित संभोग भएको हुनुपर्छ ।

पशुहरूसित पनि संभोग भएको ठाउँ ठाउँमा देखिन्छ । त्यसमा मृगले मन बुझाउँछ र मनस्तत्त्वको अर्थ लाग्ने त्यसबाट देखाइन्छ । संभोगको कुरा उही हो, तर अर्थमा त्यहाँ फरक छ । सिंहसित संभोग भएको देखियो भने (सिंह ज्ञानरूप) ज्ञानसित संभोग भएको देखायो । यहाँ पशुसित संभोग हुँदैमा "मृगादिक रतासन" भन्ने संज्ञी पश्चिमाम्नाय अन्तर्गतको भन्न हुँदैन । त्यहाँ रतासनको आकारको पनि विचार गर्नुपर्दछ ।

प्रत्येक बीजको आम्नाय भेदले प्रधान अर्थ छ–छ वटा हुन्छ, तर गौण अर्थ भने कसैका धेरै कसैका थोरै कादि र हादि मतको भेदले गर्दा यति नै हुन्छ भन्ने निश्चय हुन सक्तैन । त्यो विचारबाट कुन आकारमा लोग्ने स्वास्नीको संभोग भएको छ, त्यो देखिन आउँछ । त्योचाहिं चित्र हेरेर विचार गर्नुपर्छ ।

अब यहाँ मायावीजकै विषयमा विचार गरौं । सो मायावीज अरू आम्नायमा प्रयोग हुँदा माथि बताए ॐ "ह्" को पुरुष आकार र "ई" को स्त्री आकार

अनि नादविन्दुको गुप्तेन्द्रिय आकार भएको हुनाले दुइको रतासन मूर्ति बुझिन्छ। तर सोही मायावीज कादि वा हादि दुवै मतबाट ऊर्ध्वाम्नायमा प्रयोग हुँदा यस बीजको देवीप्रणव भन्ने अर्थ बुझिन गई "ह" कारको विमर्शात्मक स्त्रीरूप, "र" कारको प्रकाशात्मक पुरुष तथा "ई" कारको स्त्रीरूप नै भए। अनि नाद र विन्दु पुरुष र स्त्रीको गुप्तेन्द्रिय ठहरिन जाँदा प्रणवकै जस्तो दुइ स्त्री र एक पुरुषमा रति भएको देखिन आउँछ। यो मायावीजको ऊर्ध्वाम्नायमा प्रयोग हुँदा मात्रै "ह" कार विमर्शको सूचक भई स्त्रीरूप हुन्छ। यसमा "र" प्रकाशको सूचक भई पुरुष हुन्छ र "ई" कार कामकलासूचक भई स्त्रीरूप हुन्छ। त्यसमा पुरुष देवताको मन्दिरमा भए "ह" कार रूपी स्त्रीसित र स्त्री देवताको देवालयमा भए "ई" कार रूप स्त्रीसित "र" रूप पुरुषको संभोग भएको मूर्ति बन्न आउँछ। अहिले यहाँ त एउटा नियम जस्तो मात्र बताइयो। चित्रबाट यथाज्ञान विचार हुनेछ।

अब चित्रगत मूर्तिको विषयमा केही कुरा लेखौं। कामवीज र कामकूट उद्धार हुनेमा प्रायः आदि मूर्ति हुन्छन्।

त्यस मूर्तिमा रतासन गरेको हुँदैन। धनुमा वाण जोडिएबाट "ई" कार र नाद विन्दुको उद्धार हुन्छ। यी मूर्ति के हुन् भने पहिलो चित्रमा मृगको ढाडबाट एउटा पुरुष निस्केर धनुकाण हान्न लागेको हुन्छ। हाम्रो पनि ठाउँ ठाउँमा धनुराशिको तस्वीरमा त्यस्तो देखाइन्छ। यसमा कामदेवको सूचक पुरुष र मनको सूचक मृग हो। त्यसउसले कामदेवबाट "क" मनबाट "ल" र धनुर्वाण हान्न लागेवाट "ई" र नाद विन्दुको उद्धार भएबाट कामवीजको उद्धार भयो।

अब अर्को कामकूटको उद्धार भने कामदेवसूचक पुरुष र रतिसूचक स्त्रीको दुइटा माछामाथि चणकाकार रतासन भएको हुन्छ र कामदेवको हातले धनुबाट वाण छोड्न लागेको हुन्छ। यसलाई आदि पञ्चमी मूर्ति भन्दछन्। यसमा दुइ माछाबाट दुइ "ह" कार, कामदेवबाट "क" कार, रतिबाट "स" कार धनुर्वाणबाट "ई" कार र स्त्रीपुरुषको गुप्तेन्द्रियबाट नाद र विन्दुको उद्धार हुन्छ।



## ६४ योगिनी – ६४ अक्षरको "रव" (शब्द)

अक्षरका ६४ भागबाट ६४ योगिनी अर्थात् भैरवीहरू हुन्छन्। "भीषणो रवो यस्य स भैरवः" जसको भीषण "रव" (शब्द) छ। भीषणो रवो यस्याःसा भैरवी ६४ अक्षरका "रव" बाट अर्थात् शब्दबाट निस्केका ६४ योगिनी हुन्। अब ती ६४ योगिनी नै सबै देवताको आवरण पूजामा पर्दछन्। तर कतैता भने ती योगिनीहरूको नाम र रूपमा फरक हुन्छन्, हुनलाई त्यही ६४ भित्रकै हुन्। नामरूप फरक भएर तिनीहरू आवरण पूजामा रहन्छन्।

कसैको आवरणमा तिनीहरू ६४ भन्दा बढ्ता हुन्छन्, कसैको आवरणमा कम हुन्छन्। तर के भने ती ६४ योगीनीहरू नै नामरूप फरक भएर दोहोरिएर, तेहोरिएर पनि (तिनीहरू नै) आवरण पूजामा पर्दछन्। तर तिनीहरूमा मुख्य अष्टमातृकाचाहि रूप फरक भएर पनि हरेक देवताको आवरण पूजामा अवस्थित हुन्छन्। मातृकाक्षरको वर्गाद्यक्षर (अ, क, च, ट, त, प, य, श) यी आठ हुन्।

अब अहिले मन्त्रविषयको संकेत भयो। अब अर्को पटलमा कुनै कुनै मूर्तिहरूको यथाज्ञान (चित्रहरू समेत देखाई) अर्थको संकेत देखाउने चेष्टा गर्दछु।

अब यस पटलमा चित्रहरू समेत राखी वर्णन हुन्छ। प्रत्येक आम्नायमा कामकलाको अवस्था अर्थात् विन्द्वात्मक कामकलाको रूप, प्रणवको अंगको प्रवल भाग अर्थात् कला, महावाक्य, भाव अनि आम्नाय यति पाँचै कुराको सूचक मन्त्रोद्धाररूप हुने गरी रतासनको मूर्ति कल्पना गरेर तोरणरूप बनेको हुन्छ। यी मूर्तिहरू विन्द्वात्मक कामकलाका सगुण रूप हुन्।

## पूर्वाम्नाय

पूर्वाम्नायमा विन्द्वात्मक कामकलाको अवस्था रेखाङ्कित चित्र नं. ४ बमोजिमको हुन्छ। अनि रतासनको मूर्तिमा सपरीत रतासन अर्थात् कामरूप पुरुष माथि र कलारूप स्त्री तल रहेको कल्पना हुन्छ। अब यस विषयमा

व्याख्या गर्दछु। पूर्वाम्नायमा पश्वाचार हुन्छ र पश्वाचारमा "दासोऽहं" भावले उपासना हुन्छ। "दासोऽहं" भावमा आफूलाई जीवरूप हंस र इष्टदेवतालाई ब्रह्मरूप "परमहंसः" सम्झिएर उपासना हुने हुँदा पूर्वाम्नायको भावको रूप "हंस" हुन गयो। फेरि पूर्वाम्नाय सामवेदरूपको हुनाले "यसको महावाक्य तत्त्वमसि" हुन गयो। अनि दुइ विन्दुबाट सृष्टि हुने हुँदा संवित्‌रूप त्रिकोणमाथि कोणबाहिर स्पष्टतया दुइ विन्दु रही एक मिश्रविन्दुको भाव मात्रै संवित्‌को (योनिको) अन्तर्गभित भएर रहन्छ र चित्र नं. ४ बमोजिमको रूप बन्दछ। फेरि पूर्वाम्नाय सृष्टिकला र प्रणवको सृष्टिकला ब्रह्माजीको सत्ता "अ" कार हुँदा यस कामकलाको कला "अ" हुन गयो। अतः अ+हंस+तत्त्वमसि+विन्द्वात्मक कामकलाको पूर्वोक्त रूप अर्थात् अवस्था+पूर्वाम्नाय यति पांच मिलेकोबाट सगुण सपरित रतासन बन्दछ। अर्थात् रतासनको त्यो एउटा मूर्तिबाट मन्त्रोद्धारको अतिरिक्त पूर्वोक्त पांचै कुरा सूचित हुन जान्छ।

रतासन भनेको के हो भने कामरूप प्रकाश र कलारूप विमर्शको विलासको अवस्थाको कल्पित मूर्ति हो। यसमा "अ" कार अर्थात् प्रकाशरूप "काम" लाई काममा र "ह" कार अर्थात् विमर्शरूप कलालाई कलामा घटाएको हुन्छ। फेरि कामको दुइ अण्ड शुक्लारुण दुइ विन्दुको सूचक र लिंग मिश्रविन्दु सूचक अनि रतिको योनि संवित्‌सूचक मानिएको हुन्छ। सपरीत रतासनमा काम माथितिर र कला तलतिर रहेको मूर्ति हुनाले र "अ" कार कामको प्रधानरूप अर्थात् स्पष्टतया देखिने सकलरूप हुनाले त्यो "अ" कलाको सूचक हुन गयो ॥ १ ॥

पाशवकल्पको नियमित रतासन सपरीत नै हुनाले त्यो हंसः भावको सूचक हुन गयो ॥ २ ॥

"अ" कार सृष्टिकला हुँदा त्यो पूर्वाम्नायको सूचक भयो ॥ ३ ॥

पूर्वाम्नाय सामवेदात्मक हुनाले त्यसको महावाक्यअनुसार कामबाटै "तत्" भन्ने, कलाबाट "त्वं" भन्ने र दुवै जनाको गुप्तेन्द्रियको मेलबाट "असि" भन्ने बुझिनाले त्यो "तत्त्वमसि" महावाक्यको सूचक भयो ॥ ४ ॥



अनि फेरि यस आसनमा दुइ विन्दुका सूचक दुइ अण्डा संवित्‌सूचक योनिको बाहिर र मिश्रविन्दु सूचक लिंग योनिभित्र दवेर रहेबाट पूर्वोक्तवत् वैन्दवावस्था अर्थात् त्रिकोणको माथितिर दुइ विन्दु र बीचमा अर्थात् भित्रपट्टि मिश्रविन्दु केवल आकाररूप मात्रै भएको सूचित भयो ॥ ५ ॥

यो सपरीत रतासनमा चौध भुवनका चौध भेदले गर्दा चौध प्रकारका आसन हुन्छन्। यी चौधै भेदमा काम अर्थात् पुरुष माथि र कला अर्थात् स्त्री तल हुन्छ। संगृहीत अवस्थामा मन चन्द्रमा हुनाले र यो मानसिक अवस्था हुनाले यसको वैन्दवावस्थामा दाहिनेतिर रक्तविन्दु (अग्निको) र वायांतिर शक्तिरूप हुनाले वायांतिर शुक्लविन्दु (मनरूपी चन्द्रमा) रहन्छ।

यिनको सात भेदका रूपबाट किसिम किसिमको मन्त्रको उद्धार हुन जान्छ। यी सवै कुराको पछि यसै पटलमा वर्णन हुनेछ। यहां खालि वैन्दवावस्थाको रूप मात्रै झल्काएको हुं। अर्को कर्तृत्वशीलमा कर्म हुने हुनाले र अग्निबाट नै यन्त्रहरू चल्ने हुनाले दायांतिर शुक्लविन्दु (चन्द्र) र वायांतिर रक्त विन्दु अर्थात् कर्मशील अग्नि रहन्छ। वायां भाग शक्तिको अङ्ग हुनाले अग्नि प्रधान भएकोमा वायांतिर अग्नि र सोम प्रधान भएकोमा वायांतिर सोम हुन्छ।

चन्द्रविन्दु र अग्निविन्दुको सट्टा पट्टा प्रत्येक आम्नायको रतासनमा यस्तै किसिमले हुन्छ। अर्थात् संगृहीतमा वायां चन्द्र दायां अग्नि र कर्तृत्वशीलमा वायां अग्नि र दायां चन्द्र हुन्छ। त्यसबाट पाठकवर्गले स्वयं अनुमान गर्नु हुनेछ। यस रतासनको भुवन भेदबाट हुने यहाँ यी तीन प्रकारका रतासनका चित्र यसमा दिइन्छन्।

अब यस उक्तिको विचारबाट रतासन मूर्तिको मन्त्रोद्धार गर्नेतिर विचार गरौं। पूर्वाम्नायमा सपरीत रतासन हुनाले यस रतासनका अरू पांच भावको त माथि बयान भएकै छ। यसका बीजहरूचाहिं मायाबीज आदि पूर्वाम्नायमा प्रयोग हुने बीजहरूको भेद यही सपरीत रतासनको विविध प्रकारको आकारबाट उद्धार हुन सक्तछ। तिनमध्ये यहाँ तीनवटा चित्रहरू दिइ उद्धार गर्ने प्रयास गर्दछु।

चित्र नं. १

१ सपरीत रतासन (क) जगन्नाथ मन्दिर, हनुमान्ढोका, काठमाडौँ

यो चित्र जगन्नाथ मन्दिरको मूर्तिको हो । त्यस उसले यो वैष्णवपीठको ठहरियो। यसमा स्वाभाविक प्रकारको रतासन हुनाले यो स्वाधिष्ठान र तैजसात्मक भुवनको देखिन आयो। फेरि यो वैष्णवपीठ हुनाले कामलाई हकार मानेर सोही "ह्" काररूप काममा अग्नितत्त्व मिल्न जांदा कामबाट "ह्र" को सूचना हुन्छ। फेरि शक्तिबाट "ई" को सूचना भई गुप्तेन्द्रियबाट नाद विन्दुको सूचना हुँदा त्यसबाट पूर्वाम्नायको अर्थ दिने मायाबीजको उद्धार भयो।

चित्र नं २

२ सपरीत रतासन (ख) जगन्नाथ मन्दिर, हनुमान्ढोका, काठमाडौं

यो पनि वैष्णवपीठको ठहरियो। यसमा कलाको दुइ खुट्टा कामको कांधमा राखेबाट चुम्बक भुवनको ठहरिंदा "ट" हुनुपर्ने हो तापनि यो वैष्णवपीठको हुनाले कामबाट "क्र" को उद्धार हुन्छ। शक्तिले आफ्नो शिरमाथि हात राखेको हुनाले "ओ" को उद्धार भई गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई पूर्वाम्नायको अर्थ दिने अंकुश बीजको उद्धार हुन्छ।

चित्र नं. ३

३ सपरीत रतासन (ग) नारायण मन्दिर, पतको ममरू, ललितपुर

यो नारायण मन्दिरको हुनाले वैष्णवपीठको तोरण भयो। यसमा सिंहरूप कलाको संयोग भएको र बाहिरपट्टि कामको कलाको खुट्टा देखिएबाट



रसायन "स" बीज रसायनात्मक भुवनको देखिन आयो। तसर्थ यसमा सिंह ज्ञानरूपको बोधक हुनाले प्रकाशरूप सिंहबाट "ह" र विमर्शरूप सिंहिनीबाट "ऊ" र दुवैको गुप्तेन्द्रियबाट नादविन्दु सूचित भई यसबाट पूर्वाम्नायात्मक भई प्रयोग हुने स्मृतिरूप ज्ञानको द्योतक कूर्च बीजको उद्धार हुन्छ।

## दक्षिण आम्नाय

दक्षिणाम्नायमा विन्द्वात्मक कामकलाको अवस्था माथि प्रथम पटलमा देखाएको रेखा चित्र नं. ५ बमोजिमको हुन्छ। यसमा विपरीत रतासनको अर्थात् कला माथितिर र काम तलतिर रहेर सुरत गरिरहेको मूर्तिको कल्पना हुन्छ।

यस रतासनमा विमर्शसूचक कला माथि रहेर सुरत भएबाट प्रणवको "उ" कलाको प्रधान रूप देखिनाले त्यो "उ" को सूचक हुन गयो ॥१॥ यस आम्नायमा पश्वाचारले पूर्वोक्तवत् "हंसः" भाव र वीराचारमा आत्माभिमानले इष्टदेवता र आफूलाई एउटै संझिएर उपासना हुने हुँदा "सोऽहं" भाव हुने हुनाले यो मूर्ति "हंसः सो अहं" भावको सूचक भयो ॥२॥ प्रणवको "उ" कार स्थितिकला विष्णुको सत्ता हुनाले यो मूर्ति "दक्षिणाम्नाय" स्थिति-कलाको सूचक भयो ॥३॥ दक्षिणाम्नाय अथर्ववेदात्मक हुनाले त्यसको महावाक्यानुसार कलाबाट "अयं" गुप्तेन्द्रियबाट "आत्मा" र कामबाट "ब्रह्म" भन्ने बुझिंदा यो मूर्ति "अयमात्मा ब्रह्म" को सूचक भयो ॥४॥ यो आसनमा संवित्सूचक योनिको दुइतिर विन्दुद्वय सूचक दुइ अण्डा रही मिश्रविन्दु सूचक लिङ्ग सोही पंक्तिमा रही योनिमा भित्र घुसेर केही भाग बाहिरै रहन जांदा तीनोटै विन्दु स्पष्टरूपका भई तीन विन्दुबाट स्थिति हुने सिद्ध गराई मिश्रविन्दु त्रिकोणबाट आधा बाहिर निस्की "पूर्ववत् वैन्दवावस्था" बन्दछ ॥५॥

यस रतासनको भुवनभेदबाट हुने तीन प्रकारका चित्र यहाँ दिइन्छन्। दक्षिणाम्नायमा विपरीत रतासनका कुन्तीबीज आदि दक्षिणाम्नायमा प्रयोग हुने बीजहरूको भेदको यही विपरीत रतासनको विविध प्रकारको आकारबाट उद्धार हुन सक्छ।

चित्र नं. ४

४ विपरीत रतासन (क) जगन्नाथ मन्दिर, हनुमानढोका, काठमाडौं

यसमा स्वाभाविक प्रकारको विपरीत रतासन भएको हुनाले मणिपुर "व" जलात्मक भुवनको देखिनाले कामबाट जलार्थक "क" र त्यसमा प्रकाशात्मक "र" मिली "क्र" को उद्धार हुन्छ । अनि कलाबाट "ई" को उद्धार भई दुइवटाको गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई कुन्तीबीजको उद्धार हुन्छ ।

चित्र नं. ५

५ विपरीत रतासन (ख) महादेव मन्दिर, काठमाडौं (गद्दीबैठक अगाडि)

यो चित्र महादेव मन्दिरको हुनाले शैवपीठको तोरण ठहरिन गयो । यसमा शक्तिले तर्जनी (मुद्रा) देखाएबाट यो तापभुवनको देखिन आयो । त्यसउसले यहाँ "म" कारको त विन्दुमैं लय हुने हुनाले कामबाट "हू" को उद्धार हुन्छ । माथि ज्ञानसूचक दुइ सिंह देखाएबाट शक्तिबाट "ऊ" को उद्धार हुन्छ र गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई दक्षिणाम्नायको अर्थ दिने कूर्चबीजको उद्धार हुन्छ ।

चित्र नं. ६

६ विपरीत रतासन (ग) पञ्चनारायण मन्दिर, पटको ममरू, ललितपुर

यो चित्र वैष्णवपीठको हुनाले र कलाको तिघ्रामाथि कामको खुट्टा राखेबाट यो वैष्णवपीठ भएबाट विशुद्धिचक्र आकाशात्मक भुवनको ठहरिएबाट कामबाट "ह्र", शक्तिबाट "ई" को उद्धार भई गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भएबाट दक्षिणाम्नायार्थक लज्जाबीजको उद्धार हुन्छ ।



## पश्चिमाम्नाय

पश्चिमाम्नायमा विन्द्वात्मक कामकलाको अवस्था प्रथम पटलको रेखाचित्र नं ६ बमोजिमको हुन्छ । यस मृगादिक रतासनको अर्थात् कलाको पछाडितिरबाट कामको रत गरिरहेको मूर्ति कल्पना हुन्छ । यस रतासनमा दुइ मूर्ति जोल्टिदा पहिले तिनको बीचमा अर्थात् गुप्तेन्द्रियमैं अरूको दृष्टि पर्ने हुँदा प्रणवको "म" कलाको प्रधानरूप देखिएबाट त्यो "म" को सूचक हुन गयो ॥१॥ यसमा वीराचारले उपासना हुने हुँदा यो पूर्वोक्तवत् "सोऽहं" भावको सूचक भयो ॥२॥ प्रणवको "म" कार संहारकलात्मक रुद्रको सत्ता हुँदा यो मूर्ति पश्चिमाम्नायको सूचक भयो ॥३॥ पश्चिमाम्नाय ऋग्वेदात्मक हुनाले त्यसको महावाक्यअनुसार कलाबाट "प्रज्ञानं" र कामबाट ब्रह्म" भन्ने बुझिनाले "प्रज्ञानं ब्रह्म" को सूचक भयो ॥४॥ यो मृगादिक रतासनमा संवित्सूचक योनिमा मिश्रविन्दु सूचक लिङ्ग घुस्दा कुण्डै तीन खण्डको एक खण्ड मात्रै वाहिर रहँदा यो मिश्रविन्दुको पूर्णरूप र अरू दुइ विन्दु सूचक दुइ अण्डाको ऐक्य भई मिश्रविन्दुमैं विलीन भएर संवित्सूचक योनिको मुखमा रही बैन्दवावस्था बन्यो र एकविन्दुबाट संहार हुने सिद्ध भयो ॥५॥

यस रतासनको भुवन भेदबाट हुने तीनवटा विविध प्रकारका रतासनका मूर्तिहरू यहाँ दिइन्छन् । त्यस्तै पश्चिमाम्नायका मृगादिक रतासनका खेचरी-बीज आदि पश्चिमाम्नायमा प्रयोग हुने बीजहरूको भेद यही मृगादिक रतासनको विविध प्रकारको आकारबाट उद्धार हुन सक्छ ।

चित्र नं. ७

७ मृगादिक रतासन (क) जगन्नाथ मन्दिर, हनुमानढोका, काठमाडौं

यो वैष्णव पीठको मूर्ति हो । यसमा काम र कला दुवैले लुगा लाएको बच्चा लिएको, कामले हतियार समेत भिरेको बच्चासहितको डोको बोकेको र फेटा बाँधेकोबाट यी पांच प्रकारका विकार देखिनाले यो रसायन भुवनको

बुझिन्छ। त्यसउसले कामबाट पांच अनुनासिक वर्ण र कलाबाट चार "अँ" कार अन्त्यमा "ए" कारको समेत सूचक भई पश्चिमाम्नायको अनुनासिक मन्त्रको उद्धार हुन्छ।

चित्र नं. ८

८ मृगादिक रतासन (ख) जगन्नाथ मन्दिर, हनुमानढोका, काठमाडौं

यो चित्र वैष्णव पीठको हो। यस चित्रमा माथि पुंरूप काम र स्त्रीरूप कलाको फेरि तल अश्व अर्थात् घोडारूप काम र घोडीरूप कलाको रतासन भएबाट यो ताप तत्त्वात्मक भुवनको देखिन आयो। तसर्थ पुरुष कामबाट "ह्" अनि अश्वरूप कामबाट "ख् फ्र" स्त्रीरूप कलाबाट "ए" अनि घोडीरूप कलाबाट "स" को उद्धार भई पश्चिमाम्नायार्थक मूल खेचरी बीजको उद्धार हुन्छ।

चित्र नं. ९

९ मृगादिक रतासन (ग) जगन्नाथ मन्दिर, हनुमानढोका, काठमाडौं

यो चित्र वैष्णव पीठको हो। यस चित्रमा कलाले आफ्नो हात कुम्भमा राखी दुइटा खुट्टामा वस्त्र बेरेको र कामले एक हातले कलाको पाखुरामा र अर्को हातले स्तनमा समाई वस्त्रको पटुका बांधेको हुनाले पटुकाबाट मणिपूर चक्र जलात्मक भुवनको देखियो। यसमा पुरुष हुनाले र जल तत्त्वात्मक हुनाले फेरि वैष्णव पीठको पनि हुनाले कामबाट "स्ह्" को उद्धार हुन्छ। फेरि स्तन समातेको र कपडाको पटुका समेत बाँधेको हुनाले यही अक्षरको त्रिरावृत्तिको उद्धार हुन्छ। फेरि शक्तिले कपडा बेह्रेबाट "आ" स्वयं शक्तिबाट "ई" अनि कुम्भमा हात राखेबाट "ऊ" उद्धार भई गुप्तेन्द्रियबाट तिनोटै नादविन्दुहरू उद्धार भएर कुब्जिकाको तीन मध्यबीजको उद्धार हुन्छ।



## उत्तराम्नाय

उत्तराम्नायमा विन्द्वात्मक कामकलाको अवस्था प्रथम पटलको रेखाचित्र नं. २ बमोजिमको हुन्छ। यसमा ताण्डव रतासन अर्थात् कला र काम दुवै नाची नाची रत गरिरहेको मूर्तिको कल्पना हुन्छ। नृत्य अर्थात् नाचबाट घूर्णनक्रिया हुँदा र घूर्णनक्रिया वृत्ताकार वा विन्दुको सूचक हुनाले प्रणवको बैन्दवकलाको प्रधानरूप देखिएबाट कामकलाको तलतिर मुख फर्केको दुवै त्रिकोणको कोणबाहिर विन्दुहरू रही रेखाङ्कित चित्र नं. २ को आकार अर्थात् आदि विन्द्वात्मक कामकलारूप बनेर विन्दु सूचक हुनगयो ।।१।। पूर्वोक्तवत् उत्तराम्नायमा उभयाचार अर्थात् पश्चाचार र वीराचार दुवैबाट उपासना हुने हुँदा "हंसः" भाव र "सोऽहं" भाव दुवै हुनुपर्ने थियो तर यो उत्तराम्नाय अन्तर्लीनात्मक अर्थात् अनाख्या अवस्थाको हुँदा "हंसः" को आद्यक्षर "ह्" कार र सोऽहंको आद्यक्षर "स" कारको विन्दु र विसर्गसाथ एकीकरण भएर यिनको सामरस्य प्रकट गर्न "औं" कारको आधारले यो मूर्ति "हसौंः" भावको सूचक भयो ।।२।। प्रणवविन्दु अनाख्याकलात्मक महेश्वरको सत्ता हुँदा यो मूर्ति उत्तराम्नायको सूचक भयो ।।३।। उत्तराम्नाय यजुर्वेदात्मक हुनाले त्यसको महावाक्यानुसार कलाबाट "अहं" कामबाट "ब्रह्म" र गुप्तेन्द्रियबाट "अस्मि" भन्ने बुझिनाले "अहं ब्रह्मास्मि" को सूचक भयो ।।४।। यस रतासनमा नाच्दै रत हुने हुनाले संचितसूचक योनिमा मिश्रविन्दु सूचक लिङ्गको करीव आधा मात्रै भित्र घुसेबाट र दुइ विन्दु सूचक दुइ अण्डा अलग भई योनिबाट धेरै नै फरक भएबाट अरू सबको केवल आकार मात्रको रूप बनेर मिश्रविन्दु स्पष्ट बनेबाट पूर्वोक्तबैन्दवावस्था बन्न गयो ।।५।। यस रतासनको भुवन भेदबाट हुने यहाँ तीनवटा विविध प्रकारका रतासनका मूर्तिहरू दिइन्छन्। उत्तराम्नायमा ताण्डव रतासनका रावबीज आदि उत्तराम्नायमा प्रयोग हुने बीजहरूको भेद यही ताण्डव रतासनको विविध प्रकारको आकारबाट उद्धार हुन सक्छ।

चित्र नं. १०

१० ताण्डव रतासन (क) नारायण मन्दिर, पतको ममरू, ललितपुर

यो चित्र वैष्णव पीठको हो । यसमा कलाले माथि खुट्टा फर्काएर नाची कामसित ताण्डव रतासन गरी गाग्रोमा हात टेकेको र काम खालि उभिएको अवस्था भएबाट विशुद्धि चक्र आकाशात्मक भुवनको देखियो । यसमा शक्तिको खुट्टा आकाशतिर फर्काएर घडामाथि हात राखेबाट "ख" ताण्डवको लागि उभिएको कामबाट "फ्र" अनि कलाबाट "ए" र ती दुवैको गुप्तेन्द्रियबाट नादविन्दु उद्धार भई डाकिनीबीजको उद्धार हुन्छ ।

चित्र नं. ११

११ ताण्डव रतासन (ख) महादेव मन्दिर, हनुमान्ढोका, काठमाडौं

यो चित्र शैव पीठको हो । यसमा परस्पर अंकमाल गरेर ठाडठाडै ताण्डव रतासन गरेको तर दुइ जनामा एउटाको पनि खुट्टा परस्परमा नजोडिएको तल दुइ जनाको खुट्टाको बीचमा एउटा पात्र समेत रहेबाट यो प्रकाश भुवनको ठहर्न आई पुरुषबाट "स्त्र", कलाबाट "ई" अनि गुप्तेन्द्रियबाट नादविन्दु उद्धार भइ उत्तराम्नायार्थक कान्ताबीजको उद्धार हुन्छ ।

चित्र नं. १२

१२ ताण्डव रतासन (ग) भगवती बहाल, नक्साल, काठमाडौं

यो चित्र शक्ति पीठको हो । यसमा दुवै जनाले चार हात खुट्टा टेकी ताण्डव रतासन गरेबाट यो मूलधार पार्थिव भुवनको ठहर्न आउँछ । यसमा पुरुषबाट "क्ल", कलाबाट "ई" र गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई उत्तराम्नार्थक कामबीजको उद्धार भयो ।



## ऊर्ध्वाम्नाय

ऊर्ध्वाम्नायमा विन्द्वात्मक कामकलाको अवस्था रेखाचित्र नं. ६ बमोजिमको हुन्छ । यसमा चणकाकृति रतासन अर्थात् काम र कला दुवै उभिएर वा बसेर जोल्टिकन चनाको जस्तो आकार बनेर रत गरिरहेको मूर्तिको कल्पना हुन्छ । चणकाकार हुँदा पूर्वोक्त चित्र नं. ३ को आदि मूर्तिको दुइ त्रिकोण मध्ये माथि मुख फर्केको त्रिकोण संवित्सूचक त्रिकोणसंग मुख मुख जोडेर खप्टंदा माथिको मिश्रविन्दु र तलको मिश्रविन्दु मिलेर एक एक मिश्रविन्दु र एक मात्र संवित्सूचक त्रिकोण बन्न गई तीनवटै शीर्षमा तीन विन्दु रही रेखाङ्कित चित्र नं. ३ बमोजिमको बन्न जांदा प्रणवको नादकलाको प्रधानरूप देखिएबाट त्यो "नाद" सूचक हुन गयो ।।१।। ऊर्ध्वाम्नायमा पनि उभयाचारले उपासना हुने हुनाले र यो अनुग्रहात्मक हुँदा अन्तर्लीनमा "हसौंः" भाव भई सकेर फेरि सृष्टि हुने भाव उत्पन्न हुँदा सोही भाव उल्टिएर "स्हौं" भाव हुन गयो ।।२।। प्रणवको नाद भासा कलात्मक सदाशिवको सत्ता हुँदा यो मूर्ति ऊर्ध्वाम्नायको सूचक भयो ।।३।। फेरि ऊर्ध्वाम्नाय गायत्रीको रूप हुनाले यसको महावाक्य "परोरजसेसावदोम्" हुन गयो ।।४।। यो चणकाकृति रतासनमा पुरुष र प्रकृति दुवैको गुप्तेन्द्रिय एकाकार भई टांसिएर मिलेको हुनाले माथिअंकित रेखाचित्र नं. ३ बमोजिमको भई वैन्दवावस्था हुन गयो ।।५।। यस रतासनको भुवनभेदबाट हुने तीनवटा विविध प्रकारका रतासनका मूर्तिहरू यहाँ दिइन्छन् । ऊर्ध्वाम्नायमा चणकाकृति रतासनका पराप्रासाद बीज आदि ऊर्ध्वाम्नायमा प्रयोग हुने बीजहरूको भेद यही चणकाकृति रतासनको विविध प्रकारको आकारबाट उद्धार हुन सक्छ ।

चित्र नं. १३

१३ चणकाकृति रतासन (क) पञ्चनारायण मन्दिर, पटको ममरू, ललितपुर

यो वैष्णव पीठको चित्र हो । यसमा दुवैले एक एक हात टेकेर, पुरुषले अर्को हात शक्तिको छातीमा राखेर रति गरेबाट यो विशुद्धि चक्र आकाशात्मक भुवनको ठहरिनाले पुरुषबाट "श्र" अनि स्त्रीबाट "ई" र गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई ऊर्ध्वाम्नायार्थक लक्ष्मीबीजको उद्धार हुन्छ ।

चित्र नं. १४

१४ चणकाकृति रतासन (ख) महादेव मन्दिर, हनुमानढोका, काठमाडौं

यो चित्र शैव पीठको हो। यसमा दुवै जना परस्पर जकडिए जस्तो गरी अंकमाल गरी तकियामा आड लिई रतासन गरेबाट रसायन भुवनको देखिन आएकोले शक्तिबाट "स" पुरुषबाट "ह" र दुवै जनाको गुप्तेन्द्रियबाट र तकियाबाट विसर्ग अनि दुइको आकृतिबाट "औ" उद्धार भई यो शैवपीठको हुनाले ऊर्ध्वाम्नायार्थक श्रीप्रासाद बीजको उद्धार हुन्छ। यस्तै वैष्णव पीठ र शक्तिपीठमा भए पराप्रासाद बीजको उद्धार हुने हुन्छ।

चित्र नं. १५

१५ चणकाकृति रतासन (ग) पञ्चनारायण मन्दिर, पटको ममरू, ललितपुर

यो चित्र वैष्णव पीठको हो। यसमा कामले कलालाई उचालेको, कलाले कामलाई अंकमाल गरेको र कामले दुइ हातले कलाको गोडा उचाली रत गर्न लागेबाट मणिपुर चक्र जलात्मक भुवनको देखियो। यसमा पुरुषबाट "स" र कलाबाट "औ" कलाको दुइ गोडा कामको दुइ हातले थामेको हुनाले यिनीहरूको गुप्तेन्द्रियबाट विगर्स उद्धार भई ऊर्ध्वाम्नायार्थक सत्ताबीजको उद्धार हुन्छ।

## अधराम्नाय

अधराम्नायमा विन्द्वात्मक कामकलाको अवस्था प्रथम पटलको रेखाचित्र नं. ७ बमोजिमको हुन्छ। यसमा चुम्बनादि रतासन अर्थात् कलाको योनिमा कामको औंला र कामको लिंग कलाले समाती कलाको मुखभित्र कामको लिंग र कलाको योनिमा कामको जिब्रो, फेरि कलाले दुइ हातले कामको लिंग समाई चुस्न लागेको इत्यादिबाट विमर्शले प्रकाशको सत्ता खिचिरहेको मूर्तिको



कल्पना हुन्छ। यस मूर्तिको रूप वज्राकार भएबाट त्यो "वज्र" कलको सूचक भयो ॥१॥ अधराम्नायमा चिनाचारले उपासना हुने हुनाले "हुं फट्" भाव हुन गयो ॥२॥ "हुं फट्" भाव हुनाले अधराम्नाय भयो ॥३॥ अधराम्नाय बौद्धमार्गीय हुनाले यसको महावाक्य "तारेत्तुतारे स्वाहा" हुन गयो ॥४॥ यस आसनमा कलाको हात मुखले कामको गुप्तेन्द्रिय छोपेकोले बिन्दुत्रय आफू आफूमा मिलेको कल्पना हुन्छ। त्यस्तै अधराम्नायमा चुम्बनादि रतासनका वधूबीज आदि अधराम्नायमा प्रयोग हुने बीजहरूको भेद यही चुम्बनादि रतासनको विविध प्रकारको आकारबाट उद्धार हुन सक्छ।

चित्र नं. १६

१६ चुम्बनादि रतासन (क) पञ्चनारायण मन्दिर, पटको ममरू, ललितपुर

यो चित्र वैष्णवपीठको हो। यसमा कामको दुइरूप, काम र वसन्त र कलाको कलारूप भएबाट र कलाले कामको लिंग चुसेको र वसन्तले औंलाले कलाको योनि मथन गरिरहेको हुनाले प्रकाश भुवनको ठहरियो। तसर्थ कामबाट "त्र" वसन्तबाट "स" कलाबाट "ई" को उद्धार भई अधराम्नायार्थक वधूबीजको उद्धार हुन्छ।

चित्र नं. १७

१७ चुम्बनादि रतासन (ख) गणेश मन्दिर, पटको ममरू, ललितपुर

यो चित्र गाणपत्य पीठको हो। यसमा काम र कलाले परस्पर पछाडिपट्टिबाट गुप्तेन्द्रिय जोडेर रतासन गरेको हुनाले चुम्बक भुवनको ठहरिन गई कामबाट "फ" कलाबाट "अ" र गुप्तेन्द्रिय जोडेबाट "ट" को उद्धार भई अधराम्नायार्थक अस्त्रबीजको उद्धार हुन्छ।

यसमा एक प्रकारको रतासन चौध भुवनमा चौध मात्रै हुंदैन। किनभने पीठको भेद र रतासनभन्दा माथि रहेका देवताका मूर्तिको अवस्था अर्थात् आधा आँखा चिम्लेको ध्यानावस्था केवल उभिईवसेको जाग्रत अवस्था आलीढ वा प्रत्यालीढ अवस्था र नाच्न लागेको ताण्डव अवस्था अनि हातका विविध प्रकारका मुद्राका भेदले समेत एउटै भुवनको रतासनबाट पनि अनेक बीजहरूको उद्धार हुन सक्छ । एवं प्रकारले पीठमा रहेका टुंडालकै अध्ययनले मात्र सबै विचार गरेर मन्त्रको अथवा बीजको उद्धार आउंछ। यी सबै कुरा पछि पछिको पटलमा देवालयको वर्णन गर्दा खुल्न आउनेछ।

इति श्रीपञ्चमीमूर्तिरहस्यवर्णनन्नाम तृतीयः पटलः



# चतुर्थ पटल

शेषजीको हजार मुखले पनि मन्त्रहरूको रहस्य वर्णन हुन सक्तैन भने मेरो एउटा क्षुद्र कलमले के वर्णन गर्न सकुंला। तथापि हुटिट्याउँले सागर थाम्न खोजे झैं गरी यहाँ कूट मूर्तिको रहस्यको यथाज्ञान वर्णन गर्ने चेष्टा गर्दछु । यसमा अघि पञ्चमीमूर्तिमा एक पुरुष एक स्त्री मात्र हुने हुनाले पुरुषबाट काम र स्त्रीबाट रतिको सूचना हुन्छ। यहाँ धेरै मूर्ति हुने हुनाले प्रधान पुरुषहरूबाट "काम" र गौण पुरुषबाट "वसन्तादि" को र प्रधान स्त्रीबाट रतिको र गौणस्त्रीहरूबाट प्रीत्यादिहरूको संकेत हुन्छ।

अब चित्रतिर विचार गरौं।

चित्र नं. १८

१८ मिश्ररतासन (क) जगन्नाथ मन्दिर, हनुमानढोका, काठमाडौं

यो चित्र जगन्नाथ मन्दिरको हो। यसमा सपरीत रतासन देखिएबाट पूर्ववत् मायाबीजको उद्धार त हुने नै भयो । अब त्यसपछाडि अर्को एक मानिस बायाँ हातमा खड्ग लिएर दायाँ हातले शक्तिको गोडा समातीरहेको हुनाले र यहाँ बायाँ हातको खड्ग ज्ञानसूचक हुनाले र फेरि यो जगन्नाथको वैष्णव मन्दिर बुझिएकोले विष्णुको ज्ञानरूप श्रीकृष्णले गीताको उपदेश गरी

अभीष्ट प्राप्त गरेको हुनाले र ज्ञानमूर्ति श्रीकृष्ण उत्तराम्नायात्मक हुनाले, उत्तराम्नाय वायुतत्त्वात्मक हुनाले यो खड्ग लिएको मानिसबाट "क" कार सूचित हुन्छ । तसर्थ यस मूर्तिबाट मायाबीजको अगाडि "क" जोडिएको कूटबीज बन्दछ ।

चित्र नं. १९

१९ मिश्ररतासन (ख) महादेव मन्दिर, काठमाडौं

यो मूर्ति शैवपीठको हो । यसमा पनि सपरीत रतासन भएबाट मायाबीजको उद्धार हुने नै भयो । पछाडिको मानिसको हातमा खड्ग र दाहिने खुट्टा पुरुषको ढाडमा राखेबाट र प्रहार गरिन लागेको खड्ग काल वा संहारको सूचक हुने हुनाले यस मानिसको मूर्तिबाट संहार सूचित भयो । यो मूर्ति शिवमन्दिरमा भएबाट शिवको संहाररूप रुद्र हुनाले र रुद्र तैजसात्मक हुनाले यो खड्गधारी मानिस रेफको सूचक भयो । त्यसउसले यस मूर्तिबाट रेफ (र्) युक्त मायाबीजको उद्धार हुन्छ ।

चित्र नं. २०

२० मिश्र रतासन (ग) पञ्चनारायण मन्दिर, पटको ममरू, ललितपुर

यस चित्रमा पनि सपरीत रतासन नै भएको हुनाले मायाबीजको उद्धार हुन्छ । यी दुवैको टाउकोपट्टि एउटी बालिकाले हातमा कुम्भ लिई उभिएबाट र कुम्भ ऐश्वर्यसूचक हुनाले र स्त्रीले लिएको हुनाले फेरि यो नारायणको मन्दिर हुनाले र नारायणको शक्ति लक्ष्मी भएको हुनाले र लक्ष्मीसूचक अक्षर "व" कार भएको हुनाले यस मूर्तिबाट "व" कारयुक्त मायाबीजरूप कूटबीजको उद्धार हुन्छ ।



अब यहाँ एउटा शंकाको कुरा उठ्तछ । देवीपीठहरूमा त पञ्च "म" कारको प्रयोगले पूजा हुन्छ भन्ने लोकप्रसिद्ध छ । त्यस उसले शक्तिका मन्दिरहरूमा मैथुनको प्रतिनिधिको पूरक रूप रतासनको तोरणा टाँगियो भन्ने शंका उठ्दछ । त्यसको समाधान के हो भने वीरभावले अर्थात् "सोऽहं" भावले उपासना गर्दा कुनै न कुनै प्रकारले पञ्च "म" कारको प्रयोग हुनैपर्छ । होम गर्दा मैथुन प्रयोगको कुरा नारद पञ्चरात्रको उक्ति माथि दर्शाइएकै छ । अब यहाँ वैष्णव परंपराको क्रममा पराकाष्ठामा पुगेपछि लक्ष्मी–नारायणको दीक्षा ग्रहण गरी उनको उपासना गर्नुपर्छ । अब यस विषयमा श्रीविद्यार्णव तन्त्रको सत्ताइसौं श्वासमा लक्ष्मी–नारायणको मन्त्रोद्धार गरीकन उनको उपासनाको विषयमा यस्तो उक्ति छ ।

"वटेरण्ये श्मसाने च शून्यागारे चतुष्पथे ।
अर्धरात्रे च मध्याह्ने पुरश्चरणमाचरेत्"

अर्थात् वरको रूखमुनि, बनमा, श्मशानमा, शून्यागारमा (यो कुरा पञ्चमयाग विषयको हो, गुरुमुखबाट जान्नुपर्छ) अनि चार दोबाटोमा पनि, आधा रातमा, मध्याह्नमा पनि पुरश्चरण गर्नुपर्छ (यहाँ च भन्नाले अथवा सम्झनुपर्छ ।) यही सिलसिलामा यस्तो उक्ति पनि छ ।

"पञ्चरत्नेश्वरीं विद्यां लक्ष्मी–नारायणस्य हि ।
जपेत् तां पञ्चभिः सार्धं पुरश्चर्याफलं लभेत्"

अर्थात् पञ्च "म" कारले सहित भएर लक्ष्मीनारायणको पञ्चरत्नेश्वरी विद्याहरूको जप गर्नाले पुरश्चरणको फल मिल्छ ।

शिवको पनि त्यस्तै हुन्छ । वीरवैष्णव र वीरशैवले अनुकल्परूप पञ्च मकारको प्रयोग गर्नैपर्छ । वीरवैष्णव र वीरशैवको लक्षण शक्तिसंगमतन्त्रमा यस प्रकारले बताएको छ–

"कायेन मनसा वाचा भजते विष्णुमेव यः ।
स वीरवैष्णवः प्रोक्तो देवतान्तरनिन्दकः ।।
चराचरमिदं विश्वं जानन्नारायणात्मकम् ।
कंचिन्न द्वेष्टि यः सोऽयमुत्तमो वीरवैष्णवः ।।"

अर्थात् मनले, वचनले, शरीरले, विष्णुलाई नै भजन गर्ने अनि अरू देवताको निन्दा गर्ने साधक वीरवैष्णव कहिन्छन् । चराचर जगत्लाई नै नारायण स्वरूप सम्झेर अरू कसैको द्वेष नगर्ने चाँहि झन् उत्तम वीरवैष्णव ठहर्छन् । अब वीरशैवको बारेमा सोही ग्रन्थमा यस्तो उक्ति छ ।

"केवलं शिवसंपन्नः स्वान्यदेवस्य निन्दकः ।
वीरशैव इति ख्यातः ..................."

अर्थात् शिवको मात्र भक्ति गर्ने अरूको चाँहि वास्ता नगर्नेलाई वीरशैव भन्दछन् ।
अब अर्को किसिमका चित्रहरूबाट केवल अक्षररूप मन्त्रको उद्धार हुन्छ ।

चित्र नं. २६

२६ आशयरतासन (क) महादेव मन्दिर, हनुमानढोका, काठमाडौं

यो मूर्ति महादेव मन्दिरको हो । यसमा पुरुषले आफ्नो गुप्तेन्द्रिय समाती राखेबाट शैवाक्षर "ह" अनि पद्मासनबाट "औ" को उद्धार भई यस मूर्तिबाट "हौ" को उद्धार हुन्छ ।

चित्र नं. २७

२७ आशयरतासन (ख) ज्ञानेश्वर महादेव, ज्ञानेश्वर, काठमाडौं

यो महादेव मन्दिरको मूर्ति हो । यसमा शक्तिबाट "अ" र शक्तिले माथि थामेबाट "आ" को उद्धार भई अ+आ मिलेर "आ" को उद्धार हुन्छ ।

चित्र नं. २८

२८ आशयरतासन (ग) महादेव मन्दिर, हनुमानढोका, काठमाडौं



यो महादेव मन्दिरको तोरणको चित्र हो । यसमा दुइ गोडा कांधमा पुऱ्याई आफ्नो योनि च्यातेर देखाइएको छ । यसमा शैवपीठ हुनाले शक्तिबाट "स" को र योनि देखाएबाट "ए" को उद्धार भई "स+ए" से को उद्धार हुन्छ ।

चित्र नं. २९

२९ आशय रतासन (घ) ज्ञानेश्वर महादेव मन्दिर, ज्ञानेश्वर, काठमाडौं

यो ज्ञानेश्वर महादेव मन्दिरको मूर्ति हो । यसमा एउटी स्त्री टुक्रुक्क योनि च्यातेर देखाएबाट "ए" को उद्धार हुन्छ ।

चित्र नं. ३०

३० आशय रतासन (ङ) जगन्नाथ मन्दिर, हनुमानढोका, काठमाडौं

यो जगन्नाथ मन्दिरको हुनाले यो वैष्णवपीठको मूर्ति भयो । यसमा पुरुषले शक्तिको स्तनमा हात राखेबाट "ज", टाउकोमा हात राखेबाट अनुस्वार र स्त्रीले पुरुषको लिंग समातेबाट "ऊ" को उद्धार भई यस मूर्तिबाट "जू" को उद्धार हुन्छ ।

चित्र नं. ३१

३१ आशय रतासन (च) ज्ञानेश्वर महादेव मन्दिर, ज्ञानेश्वर, काठमाडौं

माथिको चित्र ज्ञानेश्वर महादेव मन्दिरको मूर्ति हो । यहाँ एउटी स्त्रीले योनि देखाएको र अर्कोले स्त्रीको लुगा लगाएको हुनाले उसको लिंग स्पष्ट नदेखिएर स्त्री पुरुष नछुटिए तापनि योनि देखाएर उभिएकी स्त्रीबाट "ए" अनि स्त्रीवेषधारी पुरुषबाट "ऋ" को उद्धार भई "ऋ+ए" मिलेर "रे" को उद्धार हुन्छ ।

चित्र नं. ३२

३२ आशय रतासन (छ) ज्ञानेश्वर महादेव मन्दिर, ज्ञानेश्वर, काठमाडौं

यो मूर्ति शैवपीठको हो। यसमा शक्तिले पुरुषको लिंग समाएर आफूतिर तान्न लागेको र पुरुषले चाँहि एउटा हातले शक्तिको हातमा र अर्को हातले शक्तिको कांधमा समाएर तान्न लागेको हुँदा दुवैको परस्पराकर्षणबाट "क्ली" को उद्धार हुन्छ।

चित्र नं. ३३

३३ आशय रतासन ( ज ) ज्ञानेश्वर महादेव, ज्ञानेश्वर, काठमाडौं

माथिको चित्रमा स्त्रीले योनि देखाई पुरुषको लिंग समाएबाट "उ" र पुरुषले शक्तिको हात समाती अंकमाल गरेबाट "नमः" को उद्धार भई "उ नमः" को उद्धार हुन्छ।

चित्र नं. ३४

३४ आशय रतासन (झ) भगवतीबहाल, नक्साल, काठमाडौं

यो नक्साल भगवती मन्दिरको मूर्ति हो। यसमा स्त्रीपुरुष दुवै लुगा लगाई संगै टाँसिएर हिंड्न लागेको हुनाले पुरुषबाट "ह्र" को उद्धार भई ह्रल्लेखाक्षरको उद्धार हुन्छ।



चित्र नं. ३५

३५ आशय रतासन (ञ) भगवतीबहाल, नक्साल, काठमाडौं

यो चित्र पनि नक्साल भगवतीमन्दिरको हो। यसमा दुवैले परस्पर अङ्कमाल गरी पुरुषले स्त्रीको कटितिर हात लगी वस्त्र तान्न लागेबाट "त्र" अर्धनग्न शक्तिबाट "आ" र परस्पर अङ्कमाल गरेबाट नादविन्दुको उद्धार भई कपालवीजको उद्धार हुन्छ।

चित्र नं. ३६

३६ आशय रतासन (ट) ज्ञानेश्वर महादेव मन्दिर, ज्ञानेश्वर, काठमाडौं

यो शैव पीठको चित्र हो। यसमा स्त्री पुरुष दुवैले हातेमालो गरेको, ताण्डव मुद्रा हुँदा स्त्रीको विमर्शांशबाट "ह्र" स्त्रीरूपबाट "स" अनि पुरुषको आफ्नो स्वरूपबाट "फ" र उसको प्रकाशांशबाट "र" को उद्धार भई दुवैले हातेमालो गरी हात उठाएबाट "ऊ" को र गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई गुप्तेश्वरकूटको उद्धार हुन्छ।

चित्र नं. ३७

३७ आशय रतासन (ठ) भगवतीबहाल, नक्साल, काठमाडौं

यो नक्साल भगवती मन्दिरको चित्र हो । यसमा स्त्री पुरुष दुवैले वस्त्र लगाएको, पुरुषको दाहिने हात स्त्रीको कांधमा राखेको र देब्रे हातले स्तन समाएको र स्त्रीले दुवै हात छाडेको छ । यहाँ स्त्री लुगा लाएर

वसेबाट "आ" पुरुषले लुगा लाएबाट "ह्ल" र पुरुषले स्तन समाएबाट नादविन्दुको उद्धार फेरि वस्त्रबाट पनि "आ" को उद्धार भई यस मूर्तिबाट "आ+आ+ह्ल" भई स्कन्दबीजको उद्धार हुन्छ। यसमा दुइ स्वरको पुनरावृत्ति भएबाट यो पनि कादिमतबाट प्रयोग भएको बुझिन्छ।

चित्र नं. ३८

३८ आशय रतासन (ड) जगन्नाथमन्दिर, काठमाडौं

यो जगन्नाथमन्दिरको मूर्ति हो। यसमा एउटी स्त्री घुंडा मारेर बसेकी र आफ्नो दुवै हात घुडामाथि राखेकी छ। अनि त्यस स्त्रीको पछाडिबाट अश्वरूपी काम अथवा घोडाले रति गरिरहेको छ। यो पश्चिमाम्नायात्मक रतासन हुनाले यो वायुतत्त्वात्मक र फेरि घोडा पनि वेगसूचक हुनाले घोडाबाट "य" अनि स्त्रीबाट "ऊ" र तिनीहरूको गुप्तेन्द्रियबाट नादविन्दु उद्धार भई "यूँ" बीजको उद्धार हुन्छ।

चित्र नं. ३९

३९ आशय रतासन (ढ) जगन्नाथमन्दिर, काठमाडौं

यो पनि जगन्नाथमन्दिरको मूर्ति हो। यसमा शक्तिको एक हातले पुरुषलाई अङ्गालो मारेको र अर्को हात ठेकीभित्र राखे जस्तो छ। पुरुषले चाहिं एक हातले स्त्रीलाई कम्मरमा समातेको र अर्को हातले लिङ्ग समाई पछाडिबाट रत गर्न लागे जस्तो छ। पुरुषभन्दा पनि पछाडिकी स्त्रीले आफ्नो दुवै हात माथि उठाई रमाएर नाच्न लागे जस्तो छ। शक्तिले पुरुषलाई अङ्कमाल गरिरहेबाट पुरुषबाट "ह" र शक्तिको वस्त्र समेत भएबाट "स" अर्की स्त्री ताण्डव नृत्य गरिरहेबाट उत्तराम्नायात्मक "औ" को उद्धार भई यस मूर्तिबाट "ह+स+औ" मिलेर "हसौ" को उद्धार हुन्छ।



चित्र नं. ४०

४० आशय रतासन (ण) जगन्नाथमन्दिर, काठमाडौं

यो जगन्नाथ मन्दिरको चित्र हो। यसमा पुरुषले दुवैतिर दुइटा स्त्रीलाई च्यापी अंकमाल गरेको छ। पुरुषको बायांपट्टिको स्त्रीले पुरुषको काखमा बसी पुरुषकै चिउडो समातीराखेको जस्तो छ। दायां पट्टिको स्त्रीले चाहिं घुंडा टेकेर बसी पुरुषको लिंग समाई राखेको छ। लिंग समाउने शक्तिबाट "उ", वस्त्र लाएबाट र अर्की स्त्रीबाट "आ" यो वैष्णवमन्दिर हुनाले पुरुषबाट अनन्ताक्षर "ख" को उद्धार भई "ख+आ+उ" मिलेर "खो" को उद्धार हुन्छ।

चित्र नं. ४१

४१ आशय रतासन (त) जगन्नाथमन्दिर, काठमाडौं

यसमा एउटा पुरुष र दुइटी स्त्री छन्। बायांपट्टिको स्त्रीको दुवै हातले पुरुषको हात समातेको बायांपट्टिको स्त्रीको एक हातले पुरुषको लिंग समाएको र अर्को हात आफ्नो योनिमा राखेको छ। पुरुषले चाहिं एक हात आफ्नो कम्मरमा राखेको र अर्को हात स्त्रीको हात भित्र पट्टिबाट ल्याई माथि उठाएको छ। पुरुषको लिंग र आफ्नो योनि समाउने स्त्रीबाट "ऐ" अनि अर्की स्त्रीबाट "स" यहाँ वस्त्र भए तापनि गुप्तेन्द्रियहरू देखिएबाट "आ" हुन सकेन र वैष्णवपीठ हुनाले र पुरुष उभिएको हुनाले अनन्ताक्षर "ख" को उद्धार भई "स+ख+ऐ+मिलेर "स्खै" को उद्धार हुन्छ।

अब यहाँ एउटा कुरा भन्नु छ।

चौसट्ठी अक्षरबाट चौसट्ठी योगिनी र पुरुषमा चौसट्ठी भैरव निस्कने कुराको माथि वर्णन भइसकेको छ। त्यसैको आधारमा यी मूर्ति कलाहरू रहेका हुन्। यिनबाट जुन जुन अक्षरको उद्धार हुन्छन्; तीभन्दा माथि रहेका भैरव या भैरवीका मूर्ति तिनै अक्षरबाट वा तिनै अक्षरको संकेतका निमित्त निस्केका हुन्। पुरुषको मूर्ति भए भैरवहरूको र शक्तिको मूर्ति भए भैरवीहरूको समष्टिरूप भई आवरण देवतामा परिणत भइरहेका हुन्छन्। तर माथि उद्धार भए ॐ मूर्तिको तलको अक्षरबाट माथिको देवताको रूप बनेको हुन्छ। सो रूपसित तलको अक्षरको अन्योन्याश्रय हुँदा सो मन्त्रको रूप अर्कै हुन जाने पनि संभव हुन्छ। जस्तो कि उपसर्ग मिल्दा धातुको अर्थ अर्कै हुन जान्छ।

इति श्रीमन्त्रोद्धारवर्णनन्नाम चतुर्थः पटलः



# पंचम पटल

रतासनका रहस्यको विषयमा माथिमा पटलहरूमा वर्णन भयो। अब देवालयहरूको बारेमा वर्णन गर्नुपर्ने भयो। सर्वप्रथम अहिले यस पटलमा मेरै घर नगीचमा रहेको नवसागर (नक्साल) भगवतीको पीठ र देवालयको यथाज्ञान वर्णन गर्दछु।

चित्र नं. ४२

४२ नवसागर भगवती मन्दिर, नक्साल, काठमाडौं

यो नवसागर (नवसाल) भगवतीको दक्षिण मोहडापट्टिको मूलद्वार र मन्दिरको तसवीर हो। यो पीठको बारेमा वंशावलीमा यस्तो उक्ति छ। अघि राजा विक्रमकेशरीकी रानी नवसागर महारानीले राज्य गरिरहेको वखतमा एउटा कालिगढले भगवतीको एउटा मूर्ति बनाई निज महारानीलाई चढाएका थिए। रानी खुशी भई आफ्नो नाउँमा मिलाई विशालनगरको बीचमा नवसागर भगवती भनी स्थापना गरेकी थिइन्। पछि यी भगवती जागेर उग्र हुँदा त्यस मूर्तिलाई विधि–विधानपूर्वक खाडलमा राखी ढुङ्गाले छोपी राजा शंकरदेवले अर्को मूर्ति (हाल देवालयमा भएको) बनाई स्थापना गरी देवालयसमेत बनाई प्रेत चतुर्दशीका दिन रथारोहण गरी यात्रा समेत गर्ने प्रथा चलाए। पछि बि. सं. १९९० सालको भुईंचालोमा सो तीन तले देवल भत्की गजुर समेत खसेको हुनाले वि. सं. १९९५ सालमा श्री ३ महाराज

जुद्धशम्शेर ज.व.रा. बाट जस्ताको तस्तै भई बन्यो । यसमा त्रितत्त्वात्मक (आत्मतत्त्व, विद्यातत्त्व र शिवतत्त्व) छाना देखियो । तर वेदी भने तीन देखिएन। शायद मन्दिर सडकभन्दा तल भएको हुनाले वेदी पनि तल दवेको हुन सक्छ। फेरि जुन देवताको पीठ हो, उही देवताको मूर्ति स्थापना भएको बुझिन्छ । किनभने मूलद्वार माथिको अंकित मूर्ति, भित्र स्थापित भएको देवताको मूर्तिसित मिल्दछ ।

यिनी अष्टादशभुजा उग्रचण्डा दुर्गा हुन् भन्ने बुझियो । उग्रचण्डा दुर्गाका दुइ भेद हुन्छन् । (१) उग्रचण्डा दुर्गा (२) महोग्रचण्डा चण्डिका। "तेजोराशिसमुद्भवा" भनेर सप्तशतीमा वर्णित अष्टादशभुजा चण्डी महालक्ष्मीको रूपान्तर उग्रचण्डा हुन् । तिनको ध्यानमा महिषासुरलाई वध गरिरहेको हुन्छ । यिनको मन्त्र द्वात्रिंशाक्षरी अर्थात् ३२ अक्षरको हुन्छ । यिनको यो ध्यान र यो मन्त्र प्रचलित छ । तर यिनको अर्को रहस्यरूप सप्तशतीर्वागत महाकाली, महालक्ष्मी र महासरस्वती तीनवटैको समष्टिरूप अष्टादश भुजाको महिषासुरलाई मारेको र दुइ बाहुलीले दुइतिर चण्ड र मुण्डलाई नागपाशले बाँधेको अर्को रूप हुन्छ । यिनको मन्त्र चत्त्वारिंशदक्षरी अर्थात् ४० अक्षरको हुन्छ । यिनी चण्डिका उग्रचण्डा हुन् । यिनलाई महोग्रचण्डा पनि भन्दछन् । यिनको रूप द्वात्रिंशाक्षरी मन्त्रात्मिका उग्रचण्डाकै जस्तो हुन्छ । आयुधहरू पनि उस्तै हुन्छन् । तर धारण गरेको क्रम भने तलमाथि फरक हुन्छ र उग्रचण्डाको हातको वर र अभयको साटो यिनले चण्ड र मुण्डलाई दुइतिरबाट नागपाशले बाँधेको हुन्छ ।

यसरी यी नक्सालको नवसागर भगवती "महोग्रचण्डा" नै हुन् भन्ने बुझियो। यिनको यहाँ भएको मूर्ति फट्ट हुर्दा षोडशभुजा जस्तो देखिन्छ तापनि नियालेर हेर्दा पात्र र मुद्रा युक्त दुइ हात छातीनिर खुम्च्याएर राखेको देखिन्छ। अब यहाँ अर्को एउटा कुरा भन्नु छ। रम्भकल्पमा "तेजोराशिसमुद्भवा" अष्टादशभुजा दुर्गा उग्रचण्डा भइन् । अनि उनै नीललोहित कल्पमा षोडश भुजा दुर्गा भद्रकाली भईन् । अनि उनै अहिले श्वेतवाराह कल्पमा दशभुजा कात्यायनी भइन् । अतः आ-आफ्नो परंपरानुसार शारदीय दुर्गापूजामा यी तीनमध्ये एकको पूजा हुन्छ। दशभुजा कात्यायनी



हाल श्वेतवाराहकल्पको हुनाले धेरैको परंपरा र वैष्णव परंपरामा समेत यिनै दशभुजा कात्यायनीको नै पूजा हुन्छ।

यिनको दायां र वायां गणेश र कुमारको स्थापना हुन्छ। यिनको पूजा पाशवकल्प र वीरकल्प दुवैबाट हुन्छ। तर दुर्गा भद्रकाली र दुर्गा उग्रचण्डाको भने बीरकल्पबाट मात्रै पूजा हुन्छ। अतः यिनीहरूको अगलबगलमा गणेशको सत्तारूपिणी मातृका महालक्ष्मी र कुमारको सत्तारूपिणी मातृका कौमारीको रूप प्रतिष्ठापित हुन्छ ।

यसको रहस्य के हो भने दशभुजा दुर्गाको पूजा श्रीरामले सीता वियोग भएको अवस्थामा गरेका थिए। त्यस उसले दशैंमा यिनको पूजा हुने कल्पमा स्वास्नीमानिसलाई आगमघर (दशैंघर)भित्र पस्न निषेध हुनाले यहाँ दुर्गाको अगलबगलमा पुंरूप गणेश कुमार स्थापित हुन्छन् ।

तर भद्रकाली दुर्गा र उग्रचण्डा दुर्गाको पूजा हुने कल्पमा श्रीरामले अयोध्यामा सीता साथमा लिएर सुवासिनी पूजा समेत गरेर गरेको हुनाले यी दुइ कल्पमा सुवासिनी पूजा गर्नैपर्छ । तसर्थ सुवासिनी शक्तिरूप यी दुर्गाको अगलबगलमा महालक्ष्मी र कौमारी स्थापित हुने भएको हो। सोही परंपरानुसार यहाँ नवसागर भगवतीको द्वारको मूर्तिका दुइतिर दायां वायां सिहवाहिनी मातृका महालक्ष्मी र मयूरवाहिनी मातृका कौमारीको मूर्ति देखिन्छ। फेरि मूल मूर्तिको तलतिर मातृका चामुण्डाको मूर्ति समेत अंकित भएको हुनाले रक्तबीजको वध गर्ने अवस्थामा चामुण्डाले जिब्रो फिंजाई रक्तपान गरेको हुनाले सोही चामुंडाको मूर्ति समेत यी महोग्रचण्डाको मूर्तिमुनि रहेको हुंदा यिनी दुर्गा सप्तशतीवर्णित महाकाली, महालक्ष्मी र महासरस्वतीको समष्टिरूपिणी महोग्रचण्डा नै हुन् भने ठहरिन्छ।

अब यहाँ देखिएकी महालक्ष्मी अष्टमातृकामध्यकी मातृका महालक्ष्मी हुन् भनी बताइयो। अब प्रसङ्गात् यहाँ लक्ष्मीको विषयमा पनि केही कुरा दर्शाउनुपर्ने आवश्यक पर्न आयो। लक्ष्मीको भेदमा मुख्य पञ्चलक्ष्मी छन् र त्यसपछि षोडशभेदका षोडश लक्ष्मी हुन्छन् । ती सबैको नामरूप फरक

फरक छ। त्यस विषयमा अहिले वर्णन गरिरहनु आवश्यक परेन। अहिले यहाँ केवल महालक्ष्मीविषयको भेद मात्र बताइन्छ। ती भेदहरू कस्ता कति प्रकारका हुन्छन् र तिनका पीठहरू हाम्रो नेपालमा कहाँ कहाँ छन् भन्ने विषयमा एउटा सूक्ष्म तौरले दिग्दर्शन गरिन्छ।

महालक्ष्मीका जम्मा चार भेद हुन्छन्। (१) चण्डी महालक्ष्मी (अष्टादशभुजा), (२) कमलात्मिका महालक्ष्मी (चतुर्भुजा), (३) कालरात्री महालक्ष्मी (चतुर्भुजा) र (४) मातृका महालक्ष्मी (अवस्थाभेदले चतुर्भुजा षड्भुजा र अष्टभुजा हुन्छन्)।

अष्टादशभुजा चण्डी महालक्ष्मीको ध्यान सप्तशतीमा वर्णित छ। यिनको मन्त्र नवाक्षरी हुन्छ। अर्को कमलात्मिका महालक्ष्मी हुन्। यिनको चारबाहुमध्ये माथिका दुइ बाहुमा आदर्श र संपुटपात्र र तल्लो दुइ बाहुमा दुइ कमल हुन्छन्। यिनको मन्त्र अष्टाविंशत्यक्षरी अर्थात् २८ अक्षरको हुन्छ। अर्को कालरात्री महालक्ष्मी हुन्। यिनको रूप माथिल्लो दुइ बाहुमा आदर्श र संपुटपात्र हुन्छ र तल्लो दुइ बाहुमा वर र अभय हुन्छ। यिनको मन्त्र कमलात्मिका महालक्ष्मीकै जस्तो हुन्छ। तर मन्त्राक्षरमा श्रीबीज र मायाबीजको साटासाट हुन्छ। कालरात्री अर्थात् गाई तिहारे औंसीको राती (लक्ष्मीपूजाको दिन) श्रीकल्पबालाले यिनै लक्ष्मीको पूजा गर्छन्। तर काली कल्पवालाले यस रातमा काली पूजा गर्छन्। अब अर्को महालक्ष्मीमातृका महालक्ष्मी हुन्। उनको भने अवस्था भेदले कहीं चारभुजा, कहीं छ भुजा र कहीं अष्टभुजा मूर्ति हुन्छ। यिनका मन्त्र पनि पृथक् पृथक् हुन्छन्। यी लक्ष्मीहरूमध्ये हाम्रो नेपालमा चण्डिका महालक्ष्मीको पीठ काठमाडौं उपत्यकाको लुंभू (पाटन जिल्ला) मा छ। थछे (ठेचो) मा पनि अर्को लक्ष्मीपीठ छ भन्छन्। तर मनकामना भन्ने पनि नाम रहेबाट यिनी सिद्धिलक्ष्मीको एक भेद हुन् कि भन्ने पनि देखिन्छ। त्यो कुरा पछि पछिको पटलमा यस ठाउँको अनुसन्धान हुँदा पत्ता लाग्नेछ। अर्को मातृका महालक्ष्मीपीठ भादगाउँ थलाछे टोलमा छ। थछे (ललितपुर) महालक्ष्मीको बारेमा वंशावलीमा यस्तो लेखिएको छ। यो पीठ धेरै पहिलेको हो। तर यसको स्थापना गर्ने को हो पत्ता छैन। अधि नेपालमा नुवाकोटका वैश्य ठकुरीहरू



आई टोलै पिच्छे राजा भई शासन चलाएका थिए। यी ठकुरी राजाका पालामा नेपालमा धेरै भक्कुहरू आई तिनले मानिस मारी खप्पर लैजाने गर्न थाले। त्यसकारण ठकुरी राजाले यस्तै चाल भयो भने त प्रजाहरू नाश हुन्छन् भनी भक्कुहरू मार्नुपर्यो भनी यिनले थछे महालक्ष्मीपीठमा गई महालक्ष्मीको सेवा गरे। त्यसपछि राजाले महालक्ष्मीबाट वर प्रसाद पाई जहां जहां भक्कुहरू भेटिन्छन्; त्यहीं त्यहीं तिनलाई मारी एक एक पीठ जगाईदिए। तिनले यिनै भक्कुहरूको नाइके मारी मूलचोकमध्ये महालक्ष्मी जगाई स्थापना गरिदिए। "फेरि नेपाली संवत् ७५०–५१ साल अर्थात् १६८६–८७ वि. सं. तिर सिद्धिनरसिंह मल्लले तीन तले मन्दिर बनाई प्रख्यात शिवशक्तिस्वरूप श्रीमनकामनापीठ प्रकाश गरिदिएका हुन्। वि. सं. १९९० को भैंचालोमा यो मन्दिरलाई केही भएन।"

अर्को महालक्ष्मीको विषयमा यस्तो छ। सूर्यवंशी राजा गुणकामदेवलाई कान्तीश्वर विराजमान भएको ठाउँमा एउटा शहर बनाऊँ, म पनि त्यहीं आई बसुँला, त्यस ठाउँमा दिनको लाख रुपियाँको चल्तिफिर्ति हुनेछ भनी महालक्ष्मीबाट सपनामा आज्ञा भए बमोजिम कान्तिपुर शहर बनाई सकेपछि महालक्ष्मी आफैं सवारी भई इन्द्रचोकमा विराजमान भएकी भन्छन्। तर तिनको केही पत्ता छैन। यी महालक्ष्मी कमलात्मिका र कालरात्री महालक्ष्मी मध्ये कुनै एउटा हुनुपर्छ। किनभने माथिको वर्णनमा दिनको लाख रुपियांको चल्तिफिर्ति हुन्छ भनेको हुँदा यिनी धन दिने महालक्ष्मी हुन् भन्ने बुझिनाले कमलात्मिका र कालरात्री मध्ये एक हुनैपर्छ। तर यिनको मूर्ति कस्तो छ, कहाँ छ थाहा हुन सकेको छैन। अहिले यहाँ उग्रचण्डाकी पार्श्वगता महालक्ष्मीको परिचयको प्रसंगमा यी सबै लक्ष्मीको वर्णन गरिएको हो। ती अरू लक्ष्मीको वर्णन पछि हुनेछ।

अहिले यहाँ फेरि यही नवसागर भगवती पीठको बारेमा विचार गरौं। यी भगवती उज्जैनकी रानीबाट स्थापित भएकी भन्ने भए तापनि गौड संप्रदायअनुसार स्थापना भई सोही संप्रदायबाटै यिनको पूजा आजा भएको बुझिन्छ। किनभने यहाँको पूजाहारी नेवाली गौड संप्रदायी नै छन्।

अब यी नवसागर भगवतीको मन्दिरमा कसैं कसैंको आकाशबाट परेको बिजुलीबाट बचाउनको लागि यी रतासन्न मूर्ति राखिएका हुन् भन्ने पनि भनाइ छ। यस बारेमा कुनै शास्त्रमा यस्तो उक्ति पनि पाइन्छ।

"किञ्चित् प्रतनुभिर्गात्रैः कार्या सुरतलालसाः"
"पुरस्तात्कीर्तितान्यत्र प्रयोक्तव्यानि यानि च ।
तानि शस्तानि कक्षासु सभादेवकुलेषु च ।।"

अर्थात् "केही पातला शरीर भएका रतासन मूर्तिहरू बनाउनू र सभागृह देवालयहरूमा अघि बताइएका र अरू पनि जुन जुन असल (रतासक्त) मूर्तिहरू छन् तिनलाई राखनू।

पुराणमा यस्तो उक्ति छ—

"वज्रपातादिभीत्यादिवारणार्थं यथोदितम् ।
शिल्पशास्त्रेपि मण्यादिविन्यासं पौरुषाकृतिम् ।।"

अर्थात वज्रपात आदि भयहरूको निवारणार्थ शिल्पशास्त्रमा पनि यथोक्त (रतासक्त) पुरुषाकार मणिहरूको विन्यास गर्नू। कसैं कसैले घरमा पनि यसको लागि योन्याकार चिन्ह राख्दछन्। छाना माथि त्रिशूल राख्ने वा घरको अगलबगलमा सिहुँडीको बोट लाउने पनि गर्दछन्। माथिको भनाइ पनि ठीक हुन सक्तछ। तर यस्तोमा एउटा मात्र रतासन मूर्ति भए पुग्नेमा यहाँ एउटै मन्दिरमा पनि धेरै धेरै रतासन मूर्तिहरू राखिएका देखिन्छन्। फेरि कुलक्रमचिन्तामणि तन्त्रको वचनमा "पीठे पीठे तोरणानि पीठ-जागर्तिहेतवे" इत्यादि वचन भएबाट पनि यसको रहस्य गुरुमुखगम्य छ भन्ने बुझियो।

अब यहाँ चित्रमा अङ्क वर्णको संकेत दिई त्यसको व्याख्या गरिनेछ। पाठकवर्गले यसको लागि चित्रमा समेत अवलोकन गर्नुपर्नेछ। पहिले यहाँ चित्रहरू दर्शाइन्छन्।



चित्र नं. ४३

४३ नवसागर भगवती, नक्साल, काठमाडौं

यो माथिको तसवीर मूल देवता अर्थात् नवसागर भगवतीको हो। यसमा दुइतिर चण्ड र मुण्डलाई नागपाशले बाधेको र महिषासुरलाई शूलले रोपेको स्पष्टै देखिएको छ। अठार बाहुमध्ये सोह्र बाहु स्पष्टै देखिन्छ। छातीमा जोरेर मुद्रा र पात्र धारण गरेको हात चित्रमा स्पष्ट नदेखिए पनि मूर्तिमा नियालेर हेर्दा देखिन्छ।

यसमा देवलको तल्लो तलाको भित्तामा चित्रहरू लेखेको देखिन्छ, तर त्यो ९० सालको भूकम्पपछि लेखिएको बुझिएकोले कुनै तान्त्रिक रहस्यपूर्ण चित्र जस्तो बुझिंदैन। अब क्रमैसित टुंडालका तस्वीरहरूको वर्णन गरिन्छ। अब सर्वप्रथम मन्दिरको तल्लो तला अर्थात् आत्मतत्त्वात्मक तलाका चार कुनातिर विचार गरौं। अब यहाँ विचार गर्नु पर्ने कुरा यो छ कि हरेक मन्दिरको चार कुनामा सिंह, गरुड, घोडा अथवा अनेक भयानक रूपमा क्षेत्रपालहरू हुन्छन्। त्यस मध्ये जुन देवताको पीठ हो, त्यही देवताको यन्त्र रक्षक (रखवालाहरू) हुन्छन्। यो नवसागर भगवतीको मन्दिर सर्वाम्नायात्मक दुर्गापीठ बुझिएकोले यस मन्दिरको चार कोणमा रहने चार क्षेत्रपाल हुन्। तिनको चित्र र मन्त्रोद्धार क्रमैसित दिइन्छ।

चित्र नं. ४४

४४ नक्साल भगवती मन्दिरको उत्तर पूर्व कुनाको टुँडाल (क)

यो तसवीर मन्दिरको ईशान दिशापट्टिको हो। अब यसमा तलदेखि विचार गरौं। यसमा सबभन्दा तल एउटा पुरुष आफ्नो गुप्तेन्द्रिय समाती दुइ खुट्टा साँढेको दुइ सिङमा टेकी बसेबाट पुरुषबाट "ग", टुक्रुक्क बसेबाट

"अ" अनि गुप्तेन्द्रिय समातेबाट "क्ष" को उद्धार भई "ग+क्ष+अ" को उद्धार हुन्छ। अब त्यस अक्षरको अर्थबाट "क्ष" को अर्थले क्षेत्रपाल, "ग" को अर्थले गोमुख उद्धार हुन्छ । अतः यिनी गोमुख क्षेत्रपाल भए । यहाँ गोमुख क्षेत्रपाल रहनुको कारण के हो भने ईशान दिशाको मालिक स्वयं ईशान अर्थात् शिव नै भएको हुनाले र उनको आसन वृषभ हुनाले यहाँ वृषभकै जस्तो मुख भएको क्षेत्रपाल रहे ।

चित्र नं. ४५

४५ नक्साल भगवती मन्दिरको दक्षिण पूर्व कुनाको टुंडाल (ख)

यो तसवीर मन्दिरको आग्नेय दिशाको टुंडालको हो । यसमा सबभन्दा तल एउटा पुरुष आफ्नो गुप्तेन्द्रिय समाती सांढेको सिङमा टेकेर बसेबाट पुरुषबाट "अ" एक हातले माथि थामेबाट "ब" अनि गुप्तेन्द्रिय समातेबाट "क्ष" को उद्धार हुन्छ । अब त्यस अक्षरको "अर्थले "क्ष" बाट क्षेत्रपाल "ब" बाट बिडालमुख भन्ने आउँछ । अतः यिनी विडालमुख क्षेत्रपाल भए । यहाँ बिडालमुख क्षेत्रपाल रहनुको कारण के हो भने षष्ठिकाको वाहन बिरालो फेरि षष्ठिकाको भैरव (पुरुष) कुमार र कुमारको अग्निसंग घनिष्ट सम्बन्ध भएको हुनाले आग्नेय दिशाको मालिक अग्नि भएको हुनाले यो आग्नेय दिशामा बिडालमुख क्षेत्रपाल रहन गए ।

चित्र नं. ४६

४६ नक्साल भगवती मन्दिरको दक्षिण पश्चिम कुनाको टुंडाल (ग)

यसमा एउटी स्त्रीले सांढेको सिङमाथि टेकी दुवै हातले माथि थामेर बसेबाट, स्त्रीरूप बसेबाट "ई" दुवै हातले माथि थामेबाट "ख" अनि गुप्तेन्द्रियबाट "क्ष" को उद्धार हुन्छ । अब त्यस अक्षरको अर्थले "ख" बाट खरास्य, "क्ष" बाट क्षेत्रपाल उद्धार भई खरास्य क्षेत्रपालको उद्धार हुन्छ ।



यो नैर्ऋत्य दिशामा खरास्य क्षेत्रपाल रहनुको कारण के हो भने विशेष गरी राक्षसहरूको वाहन खर ( गधा ) हुन्छ । अतः यो नैर्ऋत्यको मालिक निर्ऋति राक्षसरूप हुनाले यहाँ खरास्य क्षेत्रपाल रहन गए ।

चित्र नं. ४७

४७ नक्साल भगवती मन्दिरको उत्तर पश्चिम कुनाको टुंडाल (घ)

यस चित्रमा सबभन्दा तल एउटा पुरुषले सिङमाथि टेकेर बसी दुवै हातले माथि थामेकोले पुरुषबाट "अ" दुवै हातले माथि थामेबाट "द" र गुप्तेन्द्रियबाट "क्ष" को उद्धार भई "अ" बाट घोटकमुख "द" बाट दन्तुर अनि "क्ष" बाट क्षेत्रपालको उद्धार भई दन्तुर घोटकास्य क्षेत्रपालको उद्धार हुन्छ । यो वायव्य कोणमा दन्तुर घोटकास्य क्षेत्रपाल रहेको कारण के हो भने यस दिशाको मालिक वायु भएकोले र दन्तुर घोटक वायुपंखी भएकोले यहाँ दन्तुर घोटकास्य क्षेत्रपाल रहन गए । अब यही नवसागर भगवती मन्दिरको पहिलो तला अर्थात् आत्मतत्त्वात्मक तलाको टुंडालको वामावर्तले वर्णन गरिन्छ ।

अब यही आत्मतत्त्वात्मक तलाको टुंडालहरूमा अष्टमातृका र अष्टभैरवहरूको चित्र अङ्कित भएको छ । यो मन्दिरको देवता अर्थात् महोग्रचण्डाको आवरण देवताको सूचक हो । खास गरेर सबै देवताको यन्त्रमा भूपुर र त्यसभित्र अष्टदल हुन्छ । त्यसमा भूपुरमा द्वारपालहरूको विविध प्रकारले पूजा हुन्छ । अष्टदलमा भने अष्टमातृकाको पूजा हुन्छ । तिनीहरूको अष्टभैरवको कतै दलाग्रमा कतै शक्तिको समीपमा दाहिनेतिर पूजा हुन्छ । यसमा क्रम भने देवतापिच्छे फरक फरक हुन्छ । अब अष्टमातृकाको विषयमा केही कुरा दर्शाउँछु । यी अष्टमातृकाका तीन भेद हुन्छन् । एकथरी अष्टवर्ग अर्थात् अ, क, च, ट, त, प, य, श बाट निस्केका, अर्का थरी तेजः पुञ्जको सात वर्णको (इनीखहपीस्वराः) अर्थात् इ=इन्द्रनील, नी=नील, ख=ख (आकाश वर्ण), ह=हरित, पी=पीत, स्व=स्वर्ण (सुनौला) अनि र=रक्त यति सात किरण र समूहरूप श्वेत गर्दा आठ हुन आउँछन् । अनि अर्को थरी आठ देवताका शक्तिरूप ब्रह्माको ब्रह्माणी वा ब्राह्मी, महेश्वरको माहेश्वरी,

विष्णुको वैष्णवी, कुमारको कौमारी, वराहको वाराही, इन्द्रको इन्द्राणी, भैरवको चामुण्डा, गणेशको महालक्ष्मी यी आठ मातृका हुन् । तर कतै कतै आम्नायात्मक देवताको भेदले गर्दा यी अष्टमातृकाहरूमध्ये कुनै कुनैको सट्टा निम्नलिखित मातृकाहरू हुन आउँछन् । अपराजिता, नारसिंही, र नारायणी आउन सक्छन् । फेरि तेजः पुञ्जको क्रममा महालक्ष्मीको सट्टा अरुणा पनि हुन्छिन् । देवताका शक्ति वा सत्तारूपिणी मातृकाहरूमा पर्ने चामुण्डालाई भैरवस्थानीय अर्थात् भैरवको सट्टा मानिन्छ । किनभने देवताका सत्तास्वरूप ब्राह्मी आदि मातृकाहरू शक्तिरूपमा स्वयं पुरुषहरू नै भएका हुनाले तिनको अर्को पृथक् भैरव हुँदैनन् । त्यस कारण तिनै मातृका चामुण्डालाई अष्टमातृकाको भैरवस्वरूप मानिएको हो । यिनका भेद नवकोटि चामुण्डा हुन्छन् । अर्थात् आठ भैरवका आठ र तीन शक्तिको समष्टिरूपिणी त्रिशक्तिचामुण्डा समेत जम्मा नउ । त्यसमा त्रिशक्ति चामुण्डाचाहिं अष्टमातृका भित्रकी होइनन् र यिनी उपाम्नाय नायिका हुन् ।

चित्र नं. ४८

४८ नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. १

यो चित्रमा असिताङ्ग भैरव हुन् । तल पुरुषले एक हातले स्त्रीको स्तन समातेको र अर्को हातले अंकमाल गरेर चलाचल गरेको देखिएको हुनाले लुगा लगाएको पुरुषबाट "ह्" लुगा लगाएको स्त्रीबाट "आ", र स्त्रीलाई अंकमाल गरेर स्तन समाएबाट नादविन्दुको उद्धार हुन्छ । यहाँ स्त्री पुरुष दुवै मौजुद भएबाट नमोन्त मन्त्र ठहर्छ । त्यसमा "असितांग" भन्ने नाममा नमः प्रयोग हुनाले ङेन्त भयो । तसर्थ उपर्युक्त बीज "ह+आ+नादविन्दु" भएको स्कन्दबीज पछि ङेन्त असितांगअनि नमः राख्दा यिनको अष्टाक्षरी मन्त्रको उद्धार हुन्छ ।



चित्र नं. ४९

४९ नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. २

यस चित्रमा उनै असितांग भैरवकी शक्ति ब्राह्मी (ब्रह्माणी) हुन् । यहां तलको तसवीरमा गदा हातमा लिएर दुवै स्त्री पुरुष नाच्न तत्पर भएको देखिएको हुनाले लुगा लगाएर गदा हातमा लिएको पुरुषबाट "ब्र" लुगा लगाएर नाच तत्पर भएकी शक्तिबाट "आ" दुवैको गदाबाट नादविन्दु उद्धार भई यसबाट "ब्र+आ+नादविन्दु" रूपबीजको उद्धार हुन्छ । दुवै स्त्री पुरुष मौजुद भएबाट यो मन्त्र नमोन्त ठहर्छ । अतः यसबाट पूर्वोक्त बीजपछि ङेन्त ब्राह्मी अनि नमः हुँदा यसबाट पञ्चाक्षरी मन्त्रको उद्धार हुन्छ ।

चित्र नं. ५०

५० नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. ३

यो नक्साल भगवती मन्दिरको तेश्रा टुंडाल हो । यो टुंडालको चित्र रूरू भैरवको हो । यिनको मुनिको मूर्तिमा स्त्री पुरुष दुवै ध्यानावस्थामा बसेबाट प्रणवको उद्धार हुन्छ । यहाँ स्त्री पुरुष दुवै हुनाले नमोन्त मन्त्र हुन गयो । फेरि स्त्री पुरुषको स्पर्शसम्म नभएबाट भैरव भन्ने पद पनि राख्नुपर्‍यो । अतः यसबाट प्रणव अनि ङेन्त रूरू भैरव नमः भन्ने नवाक्षर मन्त्रको उद्धार हुन्छ ।

चित्र नं. ५१

५१ नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. ४

यो मन्दिरको चौथा टुंडालको तसवीरमा उनै रूरू भैरवकी शक्ति महेश्वरी हुन् । यसमा स्त्री पुरुष दुवैले लुगा लगाएको र पुरुषको देब्रे हातले स्त्रीलाई

लुगा समाई तानेको र दाहिने हातले चुल्ठोमा समाएको छ। स्त्रीले चाहिं पुरुषको देब्रे हात पन्छाउन लागेको र अर्को हातले घडा उचाली राखेको छ। यसमा अर्ध नग्न स्त्रीबाट "आ", घडा लिएबाट बिन्दु, पुरुषको एक हातले वस्त्र तानेको र एक हातले चुल्ठो समाएबाट नाद र पुरुषबाट "म" भई "मां" बीजको उद्धार हुन्छ। स्त्री पुरुष मौजुद हुनाले नमोन्त भएको हुनाले यसबाट "मां" पछि ङेन्त महेश्वरी अनि नमः हुँदा सप्ताक्षरी मन्त्रोद्धार हुन्छ।

चित्र नं. ५२

५२ नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. ५

यो चण्ड भैरवको मूर्ति हो। यसमा तलका मूर्तिमा दुइजना हातमा गदा लिएर नाचिरहेको हुनाले लुगा लगाएर नाचिरहेको पुरुषबाट "फ्र", लुगा लगाएकी शक्तिबाट "आ" अनि दुइजनाले लिएको गदाबाट नादविन्दुको उद्धार भई बीजको उद्धार हुन्छ। स्त्री पुरुष दुवै मौजुद भएकोले यो नमोन्त मन्त्र ठहरिने भयो। अतः यसबाट पूर्वोक्त बीजपछि ङेन्त चण्ड अनि नमः भई षडक्षरी मन्त्रको उद्धार हुन्छ।

चित्र नं. ५३

५३ नक्साल भगवती मन्दिर, काठमाडौं, टुँडाल नं. ६

यो तसवीर चण्ड भैरवकी शक्ति कौमारीको हो। तलको मूर्तिमा दुइजना स्त्री लुगा लगाई एक एक हातले ढुंगा जस्तो केही वस्तु उचाली नाचिरहेको हुनाले दाहिने पट्टिको शक्तिबाट "आ" र देब्रे पट्टिको शक्तिबाट "ई" को उद्धार भएर त्यसमा दुइ ढुंगाबाट नादविन्दुको उद्धार हुँदा वाग्बीजको उद्धार हुन्छ। यहाँ दुइटी स्त्री हुनाले स्वाहान्त मन्त्र ठहरियो। अतः वाग्बीजपछि ङेन्त कौमारी अनि स्वाहा भई षडक्षरी मन्त्रको उद्धार हुन्छ।



चित्र नं. ५४

५४ नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. ७

यो चित्र कपाली भैरवको हो। यी भैरव मुनिको चित्रमा लुगा लगाएको पुरुषले एक हातले स्त्रीलाई अंगालो हाली अर्को हात योनितिर लगेर लुगा लगाएकी शक्तिले पुरुषको चिउडो समातेको छ। यसमा परस्पर अंकमाल गरी पुरुषले स्त्रीको योनितिर हात लगी केही घुसार्न लागेबाट "त्र" अर्धनग्न शक्तिबाट "आ" र परस्पर अंकमाल गरेबाट नादविन्दुको उद्धार भई कपालबीजको उद्धार हुन्छ। यहाँ स्त्री पुरुष दुवै मौजुद भएबाट यो मन्त्र नमोन्त ठहर्छ। अतः यसबाट कपाल बीज पछि ङेन्त कपालिन् अनि नमः को उद्धार भई सप्ताक्षरी मन्त्रको उद्धार हुन्छ।

चित्र नं. ५५

५५ नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. ८

यो चित्र उनै कपाली भैरवकी शक्ति ऐन्द्रीको हो। यिनको मुनिको चित्रमा स्त्री पुरुष दुवैले चारै हात खुट्टा टेकी ताण्डव रतासन गरेबाट यो र मूलाधार पार्थिव भुवनको ठहर्न आउँछ। यसमा पुरुषबाट "क्ल", शक्तिबाट "ई" र गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई उत्तराम्नायार्थक कामबीजको उद्धार हुन्छ। यहाँ स्वयं ऐन्द्रीसमेत ताण्डव मुद्रामा रहेकी अर्थात् नाचिरहेकी हुनाले उत्तराम्नायार्थक गराई नाममा महा उपाधि दिनुपर्‍यो। फेरि यहाँ तलको मन्त्रमा स्त्री पुरुष दुवै मौजुद भएकोले नमोन्त मन्त्रको उद्धार भयो। अतः यसबाट कामबीजपछि ङेन्त माहेन्द्री अनि नमः भई षडक्षरी मन्त्रको उद्धार हुन्छ।

चित्र नं. ५६

५६ नक्साल भगवती मन्दिर, काठमाडौं, टुँडाल नं. ९

यो चित्रमा क्रोध भैरव हुन् । तल यी भैरवको मूर्तिमुनि सपरीत रतासन गरेको देखिन्छ । यस रतासनमा काम केही ठाडो भएर उसले शक्तिको स्तनमा हात राखेको र शक्तिले पुरुषको मुख नहेरी अर्कोतिर हेरेको र हातमा आदर्श लिएको हुनाले यो विशुद्धिचक्र आकाशात्मक भुवनको ठहरिई त्यसबाट "श्र" अक्षरको उद्धार हुने हुनाले कामबाट "श्र" बुझियो । फेरि कामतिर नहेरेर अर्कोतिर हेरेको शक्तिबाट "ई" अनि ती दुइको गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई पूर्वाम्नायात्मक इन्दिरा बीजको उद्धार हुन्छ । यहाँ पुरुष र शक्ति दुबै मौजुद भएबाट यो मन्त्र नमोन्त हुन्छ । फेरि दुबैको रतासन भएबाट "भैरव" भन्ने पद पनि अन्त्यमा लाउनुपर्‍यो । अतः यसबाट लक्ष्मीबीजको पछिल्तिर ङेडन्त क्रोध भैरव र नमः हुँदा नवाक्षरी मन्त्रको उद्धार हुन्छ ।

चित्र नं. ५७

५७ नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. १०

यो दशौं टुंडालको चित्रमा क्रोध भैरवकी शक्ति वैष्णवी हुन् । यसमा पुरुषले एक हात एक खुट्टाले जमीनमा टेकी अर्को एक एक हात र एक खुट्टा उचालेको र स्त्रीले एक हातले कङ्कालको टाउको समाती अर्को हात पुरुषको टाउकोमा राखेको छ । शक्तिले पुरुषको टाउकोमा हात राखेबाट "ई" र कङ्काल समातेबाट "ह्ल" लुगा लगाएबाट "आ" को उद्धार हुँदा "ह्ला" को उद्धार । पुरुषले एक हात एक खुट्टा टेकी एक हात एक खुट्टा उचालेबाट "फ" को उद्धार भई फ+र+आ+ई="फ्रे" को उद्धार भयो । यो काहादिमतको हो । यसमा साधारण वैष्णवीको मुण्डमाला नहुने तर



यहाँ यी वैष्णवीको मुण्डमाला देखिएबाट यी अपराजिता वैष्णवी ठहरिन आउँछिन् । यहाँ स्त्री पुरुष मौजुद भएको हुनाले यो मन्त्र नमोन्त हुन आउँछ । अतः यसबाट संवर्तक बीज पछि ङेन्त अपराजिता वैष्णवी अनि नमः र यिनी अपराजिता वैष्णवी भएको हुनाले मन्त्रको आदिमा प्रणव समेत रहने गरी द्वादशाक्षरी मन्त्रको उद्धार हुन्छ ।

चित्र नं. ५८

५८ नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. ११

यो चित्र संहार भैरवको हो । तलको रतासन मूर्तिमा पुरुषको कपाल लर्काएबाट "क्ष" भारी बोकेबाट नादविन्दु र यहाँ भारीको नगीच उभिएर लुगा लगाएकी शक्तिबाट "ओ" को उद्धार भई संवर्तक बीजको उद्धार हुन्छ । अतः यसबाट संवर्तक बीज पछि ङेन्त संहार बीज अनि स्त्री पुरुष दुवै मौजुद भएबाट यो नमोन्त भई दशाक्षरी मन्त्रको उद्धार हुन्छ ।

चित्र नं. ५९

५९ नक्साल, भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. १२

यो चित्र उनै संहार भैरवको शक्ति महालक्ष्मीको हो । योभन्दा तलको रतासन मूर्तिमा बीचमा स्त्री दायांपट्टि पुरुष र बायांपट्टि स्त्री छन् । दायां बायांका दुवै स्त्री पुरुषले आफ्नो एक एक वटा हात बीचको स्त्रीको टाउकोमा राखेका र अर्को एक एक वटा हातले बीचको स्त्रीको पाखुरा समाएका छन् । बीचको स्त्रीचाहिं घुंडामा हात राखेर टुक्रुक्क बसेकी छ । त्यसमा बायांपट्टिको स्त्रीबाट "ह" दायांपट्टिको पुरुषबाट "श" अनि दुइ-तिरबाट दुइ जनाले शक्तिको शिरमा हात राखेबाट दुबैतिर दुइ रेफ र बीचको वस्त्र लाएको शक्तिबाट प्रत्येकमा नादविन्दु सहित "ई" कारको उद्धार भई

पहिलो मायाबीज तत्पश्चात् श्रीबीजको उद्धार हुन्छ । अतः यस टुंडालको मूर्तिबाट मायाबीज, श्रीबीज अनि ङेन्त महालक्ष्मी अनि स्त्री र पुरुष भएकोले नमोन्त भई अष्टाक्षरी मन्त्रको उद्धार हुन्छ ।

चित्र नं. ६०

६० नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. १३

यो चित्र उन्मत्त भैरवको हो। यी भैरव मुनिको रतासन मूर्तिमा शक्तिको दुइ तिघ्रा कामले फटाई रत गर्न लागेको र शक्तिको हातमा अभय मुद्रा देखिएबाट यो गतिभुवनको ठहरिन आयो । तसर्थ यहाँ पुरुषबाट "स" र शक्तिबाट "औ" को उद्धार भई दुइको गुप्तेन्द्रियबाट रतासन आरम्भ हुन लागेको देखिएकोले र दुइ विन्दु अर्थात् विसर्ग सृष्टिको सूचक हुनाले यहाँ तिनीहरूको गुप्तेन्द्रियबाट विसर्गको उद्धार भई पूर्वाम्नायार्थक शक्तिबीजको उद्धार हुन्छ । अतः यस टुंडालको मूर्तिबाट कामबीज शक्तिबीज अनि ङेन्त उन्मत्तभैरव त्यसपछि स्त्री पुरुष दुबै मौजुद भएबाट नमः भई एकादशाक्षरी मन्त्रको उद्धार हुन्छ ।

चित्र नं. ६१

६१ नक्साल, भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. १४

यो चित्र उनै उन्मत्त भैरवकी शक्ति वाराहीको हो । यहाँ तलको चित्रमा दुइ स्त्रीले पाषाण लिएको र एक एक हात घुंडामाथि राखेको छ । यसमा दुवै स्त्रीले पाषाण लिएको र एक एक हात घुंडामा राखेबाट "उ" दुवैले वस्त्र लाएबाट "आ" को उद्धार भई "उ+आ=वा" को उद्धार हुन्छ । अनि तिनीहरूको गुप्तेन्द्रिय र स्तनबाट नादविन्दु सूचित भई "वा" बाट नादविन्दु युक्तबीज बनी त्यसपछि ङेन्त वाराही अनि यहाँ दुवैजना स्त्री भएको हुनाले स्वाहाको प्रयोग भई षड्क्षरी मन्त्रको उद्धार हुन्छ ।



चित्र नं. ६२

६२ नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. १५

यो चित्र भीषण भैरवको हो। तलको चित्रमा साधारण किसिमको मृगादिक रतासन भएको र यो शक्ति पीठको समेत भएको हुनाले यो विशुद्धि भुवनको ठहरियो। तसर्थ कामबाट "ह्ल" कलाबाट "ई" र तिनीहरूको गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई पश्चिमाम्नायार्थक त्रपाबीजको उद्धार हुन्छ। अतः यस टुंडालको मूर्तिबाट ङेन्त भीषण भैरव अनि स्त्री पुरुष मौजुद भएबाट नमःको प्रयोग भई दशाक्षरी मन्त्रको प्रयोग हुन्छ।

चित्र नं. ६३

६३ नक्साल भगवती मन्दिर, काठमाडौं, टुंडाल नं. १६

यस चित्रमा उनै भीषण भैरवकी शक्ति चामुण्डा हुन् । यसमा तलको मूर्तिमा स्त्री पुरुष दुवै लुगा लगाई संगै टांसिएर हिंड्न लागेको हुनाले पुरुषबाट "ह्ल" शक्तिबाट "ई" को उद्धार भई हृल्लेखाक्षरको उद्धार हुन्छ। तर यसमाथि शक्तिको मूर्ति भएबाट त्यसमा नादविन्दु प्रयोग भई हृल्लेखाबीज बन्दछ । अतः यस मूर्तिबाट हृल्लेखाबीज अनि ङेन्त चामुण्डा अनि स्त्री पुरुष मौजुद भएबाट नमःको प्रयोग भई सप्ताक्षरी मन्त्रको उद्धार हुन्छ ।

यहाँ रहेका अष्टमातृकाहरू तेजः पुञ्जबाट निस्केका मध्येका हुन् र भैरवहरू पनि तिनीहरूकै शिवरूप हुन् ।

अब विद्यातत्त्वात्मक दोस्रो तल्लामा अष्टदलको कर्णिकाभित्र रहेका मन्त्रको आवरण देवताहरूको मूर्ति र मन्त्रको उद्धार सोह्रवटा टुंडालमा भएको हुन्छ ।

चित्र नं. ६४

६४ नक्साल भगवती मन्दिर, काठमाडौं, तला (क)

यो माथिको तसवीर नक्साल भगवती मन्दिरको दोस्रो तलाको दक्षिणपट्टिको हो । यस्तै प्रकारले मन्दिरको अरू दिशापट्टिको प्रकारले मन्दिरको अरू दिशापट्टिका टुंडालहरू रहेका छन् । माथिको चित्रमा चार अनि पूर्व, उत्तर र पश्चिमपट्टि चार चार वटा गरी दोस्रो तलामा जम्मा सोह्रवटा टुंडाल रहेका छन् । अब यसै विषयमा दक्षिणपट्टिदेखि वायांवर्तले वर्णन गरिन्छ । दक्षिणपट्टिको दुइटा टुंडाल अथवा माथिको तसवीरमा झ्यालको दायांपट्टिको दुइ टुंडाल, पूर्वपट्टिको चार टुंडाल र उत्तरपट्टिको तीनवटा टुंडाल गर्दा जम्मा नौवटा टुंडालमा गौर्यादि नवमातृका, उत्तरपट्टिको एउटा टुंडाल र पश्चिमपट्टिकै चारवटा गरी जम्मा पांच वटामा कुब्जिका पञ्चरत्न विद्या र दक्षिणपट्टिको बांकी दुइवटा अर्थात् माथिको तसवीरमा झ्यालको वायांपट्टिको दुइटा टुंडालमा कुलगणेश्वर र पाण्डुनाथ भैरवको उद्धार भई जम्मा सोह्रवटा टुंडालमा गौर्यादि नवमातृका नऊ, कुब्जिका पञ्चरत्न विद्या पांच र कुलगणेश्वर र पाण्डु नाथ भैरव दुइको उद्धार भएको छ ।

अब शिवतत्त्वात्मक तेस्रो तलामा विचार गरौं ।

चित्र नं. ६५

६२ नक्साल भगवती मन्दिर, काठमाडौं, तला (ख)



यो तसवीर मन्दिरको तेस्रो अर्थात् शिवतत्त्वत्मक तलाको दक्षिण पट्टिको हो । यो तेस्रो तलामा पनि यस्तै किसिमले दुइ दुइ वटा टुंडाल गरी चारतिर गरेर जम्मा आठ वटा टुंडाल रहेका छन् । यो पीठ महाकाली, महासरश्वती र महालक्ष्मीको समष्टिरूपको हुनाले यहाँ पनि टुंडालमा भएका प्रत्येकमा दुइ दुइ शक्तिको हिसावले वायांवर्तले महाकाली, चण्डी महालक्ष्मी, चण्डिका महासरस्वती र त्रिशक्ति चामुण्डाको प्रत्येक आ–आफ्नो नवार्णको उद्धार अनि त्यसपछि दुर्गाको पञ्चरत्न विद्या अर्थात् जयदुर्गा, कात्यायनीदुर्गा, भद्रकालीदुर्गा र उग्रचण्डादुर्गाको आ–आफ्नो मन्त्रको उद्धारका लागि टुंडालमा यस प्रकारको रूप अंकित भएको छ । यस मन्दिरको कलाको विषयमा प्रकाश पार्न हुने जति कुरा यहाँ प्रकाश गरियो । यसको अतिरिक्त गुरुवक्त्रगम्य विद्या हुनाले आफ्नो गुरुमुखबाटै बुझ्नुपर्छ । अब अरू मन्दिरको विषयमा पछि पछिको पटलमा व्याख्या हुनेछ । यिनको छाना कलश आकारको भई माथि सुनको छत्र भएको हुनाले, छत्र राजसी चिह्न हुनाले यो रजगुणात्मक पीठ भन्ने बुझिन्छ ।

इति श्रीनवसागरभगवतीपीठवर्णनन्नाम पञ्चमः पटलः ॥

ॐ नमः परदेवतायै

# प्रथम पटल

नेपाल पचास पीठमध्येको तेस्रो पीठ हो । त्यसउसले यहाँ घरघरैमा भने जस्तो एउटा एउटा कुमारी विराजमान छिन् । अब यस पीठको मुख्य देवता गुह्येश्वरी हुन् । अब तिनको विषयमा यहाँ वर्णन गरी यस लेखको आरम्भ गर्दछु ।

गुहेश्वरी पीठको बारेमा मृगस्थलीबाट प्रकाशित देवमालानामक पुस्तकमा यस्तो लेखिएको छ । "आदियुगमा दक्ष प्रजापतिका अपमानले यज्ञकुण्डमा फाल हाली प्राणमुक्त भएकी सतीदेवीको लाश महादेवले बोकी हिंडेको मनुष्य कीट पतंगदेखि तेत्तिसकोटि देवतासमेतले सहन नसकी श्रीवैकुण्ठनाथ विष्णुकहाँ बिन्ति गर्न गए । त्यसपछि श्रीवैकुण्ठनाथ विष्णुले आफ्नो मायाले झिङ्गा उत्पत्ति गरी सतीदेवीको शरीर गलित गराई दिनुभयो । ती गलित भएको सतीदेवीको लाशलाई पनि बोकी श्रीमहादेवले पृथ्वीभ्रमण गरिरहनुहुँदा सबभन्दा पहिले सतीदेवीको गुह्यस्थान नेपालमा पतन भयो" र गुह्येश्वरीदेवी चन्द्रघण्टा योगिनी सिद्धेश्वर महादेव उत्पत्ति भए । यहाँ गुह्येश्वरी विराजमान भएकीले भद्रकाली, कंकेश्वरी, अष्टमातृकागण, वच्छलेश्वरी, जयवागेश्वरी, मनमैजु, मैती इत्यादि ५६ लाख भैरव भैरवी विराजमान भएका छन् । सो गुह्यकाली जलज्योतिरूप भई पोखरी जस्तो भइरहेकी थिइन् ।

पछि शंकरदेव राजाका पालामा तान्त्रिक नृसिंह ठाकुर नेपाल आई-बसेको वेलामा, "मलाई प्रकाश गर" भनी स्वप्नामा आज्ञा भएबमोजिम र हिमवत्खण्ड नेपाल महात्म्यअनुसार प्रमाण मिलाई श्लेष्मांतक वनमा खोजी गर्दा उत्तरवाहिनी वाग्मतीदेखि पश्चिम, किरातेश्वरदेखि पूर्व, मृगस्थली वनदेखि उत्तर यतिभित्र गई हेर्दा नृसिंह ठाकुरले त्यही पोखरी जस्तो पानी जमिरहेको देखी पानीभित्र ईश्वरीको दर्शन पाउँदा सपना पनि मिल्न गयो। त्यसपछि त्यस जलज्योतिलाई छोपी अतिरमणीय मन्दिर बनाइदिए। पछि राजा प्रताप मल्लका पालामा सो मन्दिर ठाउँ ठाउँमा बिग्रँदा गुरु लम्बकर्ण भट्टको सम्मति लिई नेपाली संवत् ७७४ अर्थात् वि. सं. १७१० माघ शुक्ल एकादशीको दिन गुह्येश्वरीको कुण्डमा फलामको दलिन राखी चारैतिर पर्खाल लगाई जलज्योतिलाई ढाकी अष्टदल पद्मयन्त्राकार र भैरव सहित गरी स्फटिकको कलशाकार बनाई अष्टमातृकागणले आवरण गराई राम्रो मन्दिर बनाई स्थापना गरी मन्दिरको बाहिरपट्टि शिलाको खम्बा खडा गरी त्यसमा सिंहको सालिक राखिदिई आचार्यबाट नित्य नैमित्तिक पूजा गराई नित्यमहाभोग र दशैंकर्म गर्नलाई धेरै खेत गुठी राखिदिए।

यो गुह्येश्वरी पीठमा तप गरी अघि परापूर्वमा धर्मदत्त राजा मारवाड देशकी रानी पिङ्गला आदि धेरै मानिस मुक्त भएथे। पछि राजा जयप्रकाश मल्लका काजी प्रधान मन्त्रीहरू एकगठ्ठा भई ५ वर्षको राजकुमार ज्योतिप्रकाश मल्ललाई राजगद्दीमा राखी जयप्रकाश मल्ललाई धपाउँदा कुनै देवताको शरणमा जांदा पनि आफ्नो राज्य हात नलाग्दा गुह्येश्वरीमा गई तीन महीनासम्म तप गरिबस्दा कुण्डभित्र एक अद्भुतको योगीबाट खड्ग वरप्रसाद पाई ती निमकहराम काजी प्रधानमन्त्रीहरूसंग लडाइँ गरी जिती आफ्नो राज्य हात पारे। यस्तो खड्गको वरप्रसाद अघि अघिका राजाहरूले पनि बराबर पाइरहेका थिए। नेपाली संवत् ८४४ अर्थात् वि. सं. १७८० मा कुण्डबाट हिरो उत्री आयो र ने. संवत् ८४५ अर्थात् वि. सं. १७८१ सालमा भादगाउँ र पाटनको लडाइँ हुँदा पाटनको विसंखु जिल्ला भादगाउँका राजाले जिती लिए। शाके संवत् १७०० अर्थात् वि. सं. १८३५ सालमा श्री ५ महाराजाधिराज रणबहादुर शाहबाट त्रिकालमा कुस्ले बाजा र नगरा बजाउने चलन चलाए। श्री ३ महाराज जङ्गबहादुर राणाले १९२१-२२



सालमा गुह्येश्वरीको अष्टदल पद्माकारमा र भैरवमा सुनका पाताले छाइदिए र नवरत्न जडाउको सुनको कलश र चांदीका भांडाहरू पनि चढाए। त्यसै वखत राजवैद्य चक्रपाणिले सुनका नाग चारवटा बनाई मन्दिरको माथि चार कुनामा राखी सुनको मुलंवा पाताले मोरी शोभायमान गरी चढाई दिए। अघि पित्तलको पाताले छाएको भुई जीर्ण हुँदा श्री ३ महाराज चन्द्रशमशेरले बेलायती टायल झिकाई छाउन लाए र अष्टदल यन्त्राकार कलश र भैरवसमेत खिएकोले धेरै सुन थपी जीर्णोद्धार गरिदिए। बि. सं. १९९० साल माघ २ गते ठूलो भूकम्प जांदा यो मन्दिर केही भएन। सत्तल अलि अलि भत्केको थियो। पछि श्री ३ महाराज जुद्धशमशेरबाट बनाइयो।"

पछि वि. सं. २००९ सालतिर गुह्येश्वरी भित्र छापेको सुन चोरी भयो र अरू देवालयहरूका सुनका गजुरहरू पनि त्यही समयमा चोरी भएको थियो। त्यसपछि २०१६ सालतिर श्री ५ महेन्द्रवीरविक्रम शाहबाट पहिलेको भन्दा राम्रो गरी सुन छापिबक्सियो र देवलको सामुन्ने मौसूफका दम्पतिको सालिक रह्यो।

यी गुह्येश्वरीमा जलज्योतिमा पश्चिमाम्नायेश्वरी कुब्जिका र कुण्डमा उत्तराम्नायेश्वरी सिद्धिकराली गुह्यकाली र समष्टिमा ऊर्ध्वाम्नाय श्रीविद्याको सपर्या हुने हुनाले यो पीठ "गुह्या एव ईश्वरी", गुह्येश्वरी भन्ने नामले प्रचलित भयो। बौद्धमार्गीहरूले पनि यिनैलाई नैरात्म्ययोगिनी मानी पूजा गर्छन्। अतः पशुवलि सोझै कुण्डमा हुँदैन। कुण्डदेखि ईशानपट्टि भित्तामा सिद्धि-कराली र गुह्येश्वर भैरव समष्टि गराई प्रतिष्ठित भएको कराली तथा गुह्येश्वररूप शिलामा रतनपरम्पराले वलि हुन्छ। मपञ्चकले भने कुण्डमा नै क्रमार्चन हुन्छ।

हाम्रो नेपालमा "अरू विदेशीहरूले थाहा पाएर पीठ विमुख गराउलान् भन्ने डरले यहाँका धेरै जाग्रत पीठहरूमा भित्र एउटा देवता बाहिर नाम अर्कै गर्ने गरेका छन्। अहिले हालमा विमुख गराउन सक्ने मानिस (साधक) र संमुख गराउन सक्ने साधक व्यवहारमा होलान् जस्तो लाग्दैन। त्यस्ता सिद्ध भएका साधकहरू भए पनि हिमालतिर गुप्त तौरले तपस्या गरी रहेका होलान्।

श्रीगुह्येश्वरी मन्दिरको चित्र

अब कुन कुन पीठको के के नाम भएको छ भन्ने कुरालाई यो गुह्येश्वरी भन्ने नाम गुह्यकुब्जिकाको हुन गयो । त्यस्तै यिनको आवरण अष्टमातृकाहरूका नाम र स्थान निम्नलिखित प्रकारका छन् ।

१. ब्राह्मी (ब्रह्माणी)- यिनी पासिको अजिमा नामले प्रख्यात भई कमलादीमा शोभागृहदेखि पछाडि मूल सडकको छेउमा दक्षिणपट्टि विराजमान भएकी छिन् । यिनको विशेष केही देवल छैन, केवल पाषाणमूर्ति मात्रै छ । अघि त्यहाँ खेत हुँदा बराबर कुकुराको रूप भई त्यहाँ चर्न आउने र कोही मानिस नगीच पुग्यो भने बिलाउने भई ती ब्रह्माणी बिलाउने गर्थिन् रे भन्ने बुढीरूढी कुरा सुनिन्छ ।

२. माहेश्वरी- यिनी लुमडी अजिमा नामले प्रख्यात भई टुंडिखेलको आग्नेय दिशामा अर्थात् सिंहदरबारअगाडि विराजमान भएकी छन् । यिनको पूर्व मोहडा विपरीत प्रत्यंगिरा भद्रकाली र पश्चिम मोहडा माहेश्वरी हुन् । भद्रकालीमा दुइ भेद हुन्छ । एक भेद षोडशभुजा महिषमर्दिनी- चण्डीमा वर्णन भएको तेजोराशिसमुद्भवारूपिणी अर्थात् सबै देवताको तेजबाट बनेकी दुर्गा भद्रकाली हुन् । अर्कीचाहिं सतीदेवी अग्निकुण्डमा प्रवेश भएपछि दक्षयज्ञ विनाश गर्नको लागि शिवजीले आफ्नो जटा भुइंमा पछारेर वीरभद्रको साथ उत्पन्न गराएकी दुइ हात भएकी डरलाग्दो, गाजल जस्ती काली विपरीत प्रत्यंगिरा भद्रकाली हुन् । यी लुमडी अजिमामा दुवैतिरबाट पूजा हुन्छ (पूर्वतिरबाट भद्रकालीको र पश्चिमतिरबाट माहेश्वरीको) । यिनको बारेमा देवमाला नामक पुस्तकमा यस्तो लेखिएको छ । "सूर्यवंशी राजा श्री गुणकामदेवलाई श्रीमहालक्ष्मीबाट सपनामा आज्ञा भएबमोजिम कान्तिपुर बनाई सकेपछि देशरक्षा खातिर नीलपीठबाट आवाहन गरी श्रीभद्रकाली पीठदेखि पूर्वतिर स्थापना गरिदिए । पछि श्री राजा अमरमल्लले साल बसाली प्रेत चतुर्दशीका





श्री गुह्येश्वरी मंदिर

दिन रथारोहण यात्रा गरी देश घुमाउने रीत चलाई १२ वर्षमा एक पटक नचाउने गरी नृत्यलीला समेत बनाइदिएको अद्यावपि चलेकै छ। वि.सं. १९९० साल माघ २ गतेको दिन ठूलो भूकम्प जांदा यसमा केही भएन ।"

३. कौमारी– यिनी फिवो अजिमा नामले प्रख्यात छिन्। यिनको पीठ टुंडिखेलबाट थापाथली निस्कने सडकको छेउमा तोपखाना ब्यारेकनिर छ। यिनको विशेष देवालय केही छैन।

४. वैष्णवी– यिनी पचली अजिमाको नामले प्रख्यात छिन्। यिनी पचलिंगेश्वर अर्थात् पचलीभैरवको पीठनिर विराजमान भएकी छन्। यिनको विशेष देवालय केही छैन। यिनलाई पचलीभैरवकी शक्ति पनि भन्दछन्।

पचलीभैरवको बारेमा देवमाला पुस्तकमा यस्तो छः– "अघि सूर्यवंशी राजा श्रीगुणकामदेवलाई श्रीमहालक्ष्मीबाट सपनामा आज्ञा भएबमोजिम देशको दक्षिण भागमा पञ्चलिंगेश्वर भैरव, गणेश, अष्टमातृकागण समेत आवाहन गरी स्थापना गरिदिए। फेरि नुवाकोटबाट वैश्यठकुरीहरू काठमाडौं आई टोलैपिच्छे राजा भए। त्यसै बखत भीमसेनस्थानमा वैश्य ठकुरी राजा गोपुष्पलाई सपनामा पञ्चलिंगेश्वर भैरवबाट ,'मेरो मूर्ति बनाई यात्रा गर" भन्ने वाणी हुँदा यी राजाले माटाको भैरवको घ्याम्पो बनाई काली गणेशसमेत गरी प्रतिवर्ष आश्विन शुक्ल चौथीको राति यस पीठमा मांसाहुति यज्ञ गरी भोलिपल्ट पञ्चमीको दिन यात्रा गर्ने रीत चलाई ज्यापूबाट नित्यार्चन समेत गर्ने गराए। पछि रत्न मल्लका सन्तान शिवसिंह मल्लका पालामा पाटनका शासक हरिहरसिंह मल्लले पचलीभैरवको कुम्भ कहिल्यै भरिंदैन भनेको सुनी म भर्छु भनी घमंड गरी यात्रा गर्ने दिन आश्विन शुक्ल चौथीको रातमा धेरै द्रव्य ल्याई भर्दा पनि नभरिएको हुनाले ईश्वरसंग क्षमा मागी पूजा पठाए। अद्यापि पाटनबाट प्रतिवर्ष यी भैरवकहाँ पूजा ल्याउदैछन्। यही सालको यात्रामा यी भैरवको कुम्भ चिकंमुगलमा खसी फुट्यो र राजा शिवसिंह मल्लले सो फुटेका टुक्राहरू सबै जम्मा गरी त्यसै ठाउंमा गाडी छोपी पूजा मान्ने गरी भेलुपात भनी प्रख्यात

गरिदिए। यी पञ्चलिंग भैरव "दक्षिणका क्षेत्रपाल बडो प्रत्यक्षका छन्" भनी धातुको कुम्भ सुनले मोरी भैरवको ध्यानले युक्त गरी नानाद्रव्यले भरी आश्विन शुक्ल पञ्चमीको दिन यात्रा गर्ने चलन चलाए। पछि लम्बकर्ण भट्टले राजाको सम्पत्ति लिई पञ्चलिंगलाई गुप्त राखी अर्को लिंगले ढाकी दिए। अद्यावधि सो पीठ सोही रूपको छ।"

५. वाराही– यिनी कंकेश्वरी अजिमा नामले प्रख्यात छिन्। यिनको पीठ विष्णुमतीको किनारमा भएको कुरा सर्वविदितै छ। यिनको बारेमा देवमालामा यस्तो छः– "सूर्यवंशी राजा श्रीगुणकामदेवलाई महालक्ष्मीबाट स्वप्नामा आज्ञा भएबमोजिम कान्तिपुर शहर बनाईसकेपछि देशरक्षा खातिर श्रीकंकेश्वरी आवाहन गरी देशको पश्चिम भागमा विष्णुमतीको समीपमा स्थापना गरिदिए। पछि राजा श्रीअमरमल्लले साजवसाली प्रेत चतुर्दशीका दिन रथारोहण यात्रा गरी देश घुमाउने चलन गरी १२ वर्षमा एक पटक नाच नचाउने चलन चलाएका थिए। केही वर्ष पछि नृत्यलीला भईरहेको बेलामा एउटा मानिस पशुरूप भई देवीको अगाडि बसेको देखी देवी रिसाई त्यस मानिसको बलि खाइन्। त्यस बेलादेखि नाच नचाउन मनाही भयो। वि. सं. १८९६ मा जनरल नजरसिंहले माथिल्लो छाना र पछि जनरल गगनसिंहले माझ तलाको छाना सुनले मोरी छाइदिए। वि. सं. १९१८ सालमा श्री कम्याण्डर इन् चिफ जनरल कृष्णबहादुर कुंवर राणाले देवालयको भित्र चंदुवा हालिदिए। केही दिनपछि माथिल्लो पूर्व दक्षिण, पश्चिमतिर जीवनारायण मानन्धरले, पूर्वतिर विलं कसाईले र उत्तरतिर सेते दमाईले सुनको झल्लर बनाईदिए। त्यही सालमा माझतलाको दक्षिणपट्टि उजीर कसाईले सुनको झल्लर बनाईदिए। त्यसपछि माझतलाको पश्चिमपट्टि ज्योचा भन्ने सिंहवीर मानन्धरले सुनको झल्लर बनाईदिए। वि. सं. १९९६ सालमा देवराज मानन्धरले भुइमा देशी टायलले मोरी दिए।"

यी कंकेश्वरीलाई कतै कसैले "धूमावती" हुन् पनि भन्दछन्। तर त्यो कुरा सत्य हो भन्ने यथार्थ प्रमाण पाइएको छैन। मानन्धरहरूले भने कंकेश्वरी भन्ने नामले बुद्धमार्गबाट देवालीपूजाहरू गर्छन् भन्ने बुझिएको छ।



६. इन्द्राणी– यिनी लुति अजिमाको नामले प्रख्यात छिन। यिनी शोभा-भगवतीदेखि वारि विष्णुमतीको किनारमा विराजमान भएकी छन्। यिनको बारेमा सोही देवमाला नामक पुस्तकमा यस्तो लेखिएको छः– "सूर्यवंशी राजा श्रीगुणकामदेवलाई श्रीमहालक्ष्मीबाट स्वप्नामा वाणी भए बमोजिम कान्तिपुर शहर बनाइसकेपछि देशरक्षा खातिर श्रीइन्द्राणी पीठ जगाई देशको वायव्य भागमा विष्णुमतीको समीपमा स्थापना गरिदिए। केही दिनपछि सबैभन्दा माथिल्लो छाना तामाको बनाइ दिए। बि. सं. २००० सालपछि एउटा साहूले देवलभित्र मूर्तिहरू राखिदिएका छन्।"

७. चामुण्डा– यिनी ह्वँपी अजिमाको नामले प्रख्यात छिन्। यिनको पीठ काठमाडौंबाट बालाजु जाने बाटोमा बिष्णुमतीको पुलदेखि उत्तर–पूर्वमा एउटा थुम्को जस्तोमा छ।

यिनलाई बौद्धमार्गीहरूले 'योगाम्बर-ज्ञानश्री' देवता मानी आएका छन्❋। यिनको पीठस्थान वरिपरि परखालले छेकिएको छ र माथितिर अरू विशेष अजिमाहरूकै जस्तो आकाश खुला गरी राखिएको छ। यस पीठको मोहडा उत्तर फर्केको छ। यिनको पनि मूर्ति नकुंदिएको केवल शिलारूप मात्र स्थापित भएको देखिन्छ। पीठको उत्तरको मूलद्वारमाथि रहेको मूर्तिमा तीन नेत्र, चार हात, बायाँ हातमा खट्वांग दाहिने हातमा डमरू, अनि काद्य (पात्र) र विन्दुमुद्रा धारण गरेको देखिन्छ। यिनका परिवारमा एकातिर सिंहमुखी र अर्कोतिर व्याघ्रमुखी (योगिनीहरू) अनि गणेश क्षेत्रपाल र अरू अष्टमातृकाहरू पनि छन्। यिनको दक्षिणपट्टि भित्तामा दक्षिण मोहडा गरेको पुरानो गणेशको मूर्ति छ। यी गणेश चार वाहु, तीन नेत्र चन्द्रशेखर, नागयज्ञोपवीती र हातमा खड्ग, डमरू, कपालपात्र र त्रिशूल लिएका सात फणा भएको नागमा अडेस लाएका, देब्रे पाउ कमलमाथि र दाहिने काख मजुर

❋ कसै कसैको मतमा यी ह्वँपी अजिमालाई चण्डिका महालक्ष्मी र ठमेलको पाषाणरूपी चामुंडालाई अष्टमातृका चामुंडा हुन् भन्ने पनि बुझिन्छ। ठमेलमा पनि चामुण्डा नामकी एउटी अजिमा छन्।

जस्तो पंछीमाथि राखेका वीरासन मुद्रामा रहेका छन् । यी बौद्ध मार्गीय गणेश हुन् । यी गणेशलाई जलविनायकको आक्रमण रोक्न ह्माँपी भगवतीले नै नामकरण गरेर यहाँ राखेको भन्ने भनाइ छ। यिनको (ह्माँपीको) पीठको पश्चिमपट्टि भित्तामा स्वयं प्रकट भएकी दिगम्बरस्वरूप मायायक्षिणीको मूर्ति स्थापित छ। यस पीठमा अघि श्री प. क. ज. जितशमशेर जङ्गबहादुर राणाले एक महात्माको निर्देशनअनुसार लक्ष्मीपूजाका दिन प्रतिवर्ष सजघजसाथ पञ्चबलिसहितको पूजा पठाउने गरेको मलाई थाहाछ। यो पीठ कति पुरानो हो भन्ने निश्चित प्रमाण त केही पाइएको छैन । तर अरू अजिमाका पीठ फैं यो पीठ पनि संभवतः गुणकामदेव राजाद्वारा नै स्थापित गरिएको हुनुपर्दछ ।

८. महालक्ष्मी– यिनी श्रीअजिमाको नामले प्रख्यात भई नारायणहिटी राजदरबारको कम्पाउण्डभित्र आदिकालदेखि कुण्डरूप भई विराजमान भएकी छन् ।

यी अष्टमातृकाहरू पाषाणरूपमा स्थापना भएका हुनाले यिनमा मातृकोद्भव अष्टमातृका रश्मिरूपा अष्टमातृका र सत्तारूपा अष्टमातृका (जसको वर्णन प्रथम खण्डमा भएको छ) यी तीनै प्रकारका अष्टमातृका-हरूमध्ये जुन रूपको मातृकाको पूजा गरे पनि हुन्छ।

अब जयवागेश्वरीको पीठको बारेमा सोही देवमाला नामक वंशावलीमा यस्तो छः–

यो नेपालमण्डलमा श्रीपशुपतिनाथ र श्रीगुह्येश्वरी प्रकट भएपछि द्वापरयुगमा यिनी ईश्वरी मानसरोबरबाट शिला नदी तरी नेपालमा प्राप्त भएकी हुन् । यिनको मन्दिर मूर्ति केही थिएन, गुप्तरूप पीठसम्म थियो । सूर्यवंशी राजा शिवदेवका पालामा गोल नाम शहर बसाई श्रीजयवागेश्वरीलाई नित्यार्चन गराएका थिए। यिनैको पालामा स्वप्न-तीर्थमा स्नान गरी आउने एउटा योगीले राजासंग "म दुर्वासा ऋषिको अंश हुँ" भनी भन्दा सोही योगीको सम्मति लिई यी श्रीजयवागेश्वरीको



चञ्चल मूर्तिलाई स्थिर गरी बडो कष्टसंग रहस्य मूर्ति बनाई चित्रकार गरी मन्दिरको उत्तर भागमा चञ्चल मूर्ति भैरवको चित्र लेखी आचार्यलाई पूजाहारी गरी दिएका थिए । पछि श्रीअंशुवर्माले प्रतिवर्ष चित्रकार गर्न मुस्किल हुने हुनाले १२ वर्षमा मात्रै चित्रकार गर्ने रीति चलाई चण्डी पूर्णिमाका दिन देवी प्रसन्न गराउना निमित्त कौमारीगण बनाई अनेक यज्ञादि कर्मक्रिया गरी बलि दिए । पछि जगज्जय मल्लका पालामा यो मन्दिरभित्र चोर पसी धेरै गहनाहरू चोरेर लग्यो र त्यस चोरलाई अनेक खोज तलास गर्दा पनि फेला पार्न सकेनन् । चोरी भएको तीन महीनापछि पांच वर्षको कन्याकुमारी आचार्यपुत्रीको शरीरमा देवी आवेश भई मेरो गहना चोर्ने चोर हाडिगाउँको पाटीको ढोकामा बसी थाम बजाइरहेछ" भन्ने सुन्दा सबैजना गई हेर्दा त्यो चोर थाम बजाईरहेको अवस्थामा फेला पऱ्यो । अनि त्यस चोरलाई समाती राजाकहाँ ल्याएपछि गहना फेला पऱ्यो र त्यस चोरलाई ज्यान सजाइँ भयो । वि. सं. १९९० सालमा ठूलो भूकम्प जांदा केही भएन ।"

राजराजेश्वरी– राजराजेश्वरी भन्ने नाम त श्रीविद्या महात्रिपुर-सुन्दरीको हो। तर यहाँ पशुपतिमा रहेको राजराजेश्वरी नामले प्रख्यात भएको पीठ नवदुर्गाको हो। यस विषयमा हस्तलिखित वंशावलीमा र देवमालानामक वंशावलीमा यस्तो छः– "यी ईश्वरी अघि गुह्येश्वरी प्रकट हुँदा आवरण गरिराखेको पीठ मात्र थियो। पछि श्री राजा विश्वगुप्तबाट श्री जयवागेश्वरीको रहस्य मूर्ति बनाई स्थापना गरी बलि गर्नको लागि प्रतिष्ठा कर्म गरी नवदुर्गाको नौवटा मूर्ति मृतिकाको बनाई प्रकाश गरी स्थापना गरिदिएका हुन्। यी ईश्वरी नवदुर्गा बहुतै प्रत्यक्षकी हुन् । वि. सं. १९९० साल माघ २ गतेको दिन ठूलो भूईचालो जांदा यो मन्दिर केही भएन।"

वच्छलादेवी– अब वत्सलादेवीको बारेमा वर्णन गरिनेछ। देवमालामा यिनको बारेमा यस्तो छः– "यी ईश्वरी आफ्ना गणसहित भई गुह्येश्वरी प्रकट भएदेखि विराजमान भएकी छन् । यो पीठ बहुतै उग्र छ। सूर्यवंशी राजा शिवदेवका पालामा यी परमेश्वरी नेपालको आदि

मूल पीठ ठहराई वैशाख शुक्ल एकादशी उत्तर फाल्गुणी नक्षत्र वरीयान योग बृहस्पतिवारको दिन पूजा नरबलि विधिपूर्वक गरी शिलाका पद्माकार वच्छला बनाई भित्र यन्त्र गुप्त गरी प्रतिष्ठा स्थापना गरी देवालय बनाई सेवा गरिआएको र त्यसको २।३ वर्षपछि यी ईश्वरीमा विधिपूर्वक आमन्त्रण कर्म गरी काठमाडौंका भद्रकाली कंकेश्वरी आदि पीठ र अरू सबै देवताहरू चैत्र वदिका दिन श्री पशुपतिनाथबाट निमन्त्रणा गराई प्रेत चतुर्दशीका दिन कौमारीगण युक्त आवाहन गरी देवीको आवाहन गरी देवीका स्थानमा विराजमान गराई तन्त्रोक्त शास्त्रबाट महासंकष्ट विधिले नरबल र नरशिवाहरू (मानिस श्याल जस्तो गरी चार हात खुट्टा टेकी कराउने) कोलाहल गरी कराउन लगाई मातृकागणले भक्षण गराई संतुष्ट गराई विसर्जनको वेलामा अनेक द्रव्य दक्षिणा भेटी वस्त्र चढाई सम्मान गर्ने रीत प्रतिवर्ष चलाई दिएका थिए। अनि राजा विश्वगुप्तका पालामा यी वत्सलामा नरबलि प्रतिवर्ष चलाउन कष्ट भयो भनी देवीलाई शान्तिपूजा गरी निखा जोडा बोका बलि दिने रीत चलाईदिए । शिवा आवाहन गर्न नसक्दा मनुष्यै कोलाहल गरेको यी राजाले हेर्न जांदा हंस्सी उडाएको हुनाले नरशिवाले राजालाई समात्न गयो। अनि राजा खुशी भई नरशिवालाई धेरै खेत विर्ता दिएको आजसम्म पनि भोग गर्दछ। वि. सं. १९९० साल माघ वदि ३० रोज २ मा ठूलो भूकम्प जांदा यी ईश्वरीको मन्दिर केही भएन।"

यी वत्सला पशुपतिको दक्षिणमुखरूप अघोरकी शक्ति हुन् । पशुपतिको विषयमा पशुपति पुराणादिमा र इतिहासकारहरूको लेखबाट किसिम किसिमको इतिहास देखिन्छ। यसबारे अर्को पटलमा लेख्नेछु । यतिकैमा यो पटल समाप्त गर्दछु।

।। इति कामकलारहस्ये द्वितीयखण्डे गुह्येश्वरीपीठादिवर्णनन्नाम प्रथमः पटलः ।।



# द्वितीय पटल

'पाशुपत क्षेत्र' नामले नेपाल उपत्यका प्रख्यात रहेको छ । त्यस उसले यहाँका अधिष्ठाता देवता पशुपतिको विषयमा यथाज्ञान वर्णन गर्दछु । पशुपतिको प्रादुर्भाव कहिले, कसरी भयो भन्ने कुरा राम्ररी जान्न सकिएको छैन । हाम्रो यहाँ प्रचलित गोपालवंशावली आदि वंशावलीहरूमा, देव मालामा पशुपतिको प्रादुर्भाव धेरै अगाडि भएको वर्णन परेको छ। गोपालवंशी राजाकै पालामा एक कैली गाईले वाग्मतीको किनारमा आई प्रतिदिन दूध चढाएको देखी गोपालहरूले खनी हेर्दा पशुपतिको प्रादुर्भाव भएको कुरा गोपालवंशावलीमा परेको छ । त्यस बेलादेखि पशुपतिनाथ नेपालका अधिष्ठाताका रूपमा रहनुभयो। त्यसपछि किरातकालमा पनि पशुपतिनाथ प्रति आदर, श्रद्धा यथावत् रह्यो। किरात राजाहरूलाई जिती यहाँ लिच्छविहरूले आफ्नो राज्य कायम गरे। प्रसिद्ध लिच्छवि राजा सुपुष्पदेवले पशुपतिनाथको भव्य मन्दिर बनाएको वर्णन गोपालवंशावलीमा परेको छ। यसरी लिच्छविकालमा पशुपतिनाथको प्रतिष्ठा झन् बढ्यो। लिच्छविकालमा नेपाल-उपत्यका 'पाशुपत क्षेत्र' कहलाएको कुरा हामी त्यस बेलाका अभिलेखबाट थाहा पाउँछौं।

लिच्छविकालमा राजा अंशुवर्माको उदयले एकातिर नेपालको सर्वाङ्गीण विकास हुन थालेको थियो भने अर्कोतिर धार्मिक क्षेत्रमा पनि पुनर्जागरण भएथ्यो। अंशुवर्माले धार्मिक उदारताको नीति लिएका थिए। साथै उनले पशुपतिनाथलाई राष्ट्रिय सन्मान प्रदान गरी पशुपतिनाथको नाउँमा सर्वप्रथम 'मुद्रा' ढाल्न लगाई उनले पशुपतिनाथप्रति अपूर्व सन्मान प्रकट गरे। आफ्नो प्रशस्तिमा समेत 'पशुपतिपादानुगृहीत' भन्ने विशेषण अंशुवर्माले लाएका थिए।

अंशुवर्मा पछि भएका अरू राजाहरूले पनि यस कुराको अनुसरण गरे। पशुपतिको राष्ट्रिय सम्मानको लागि 'मुद्रा' प्रचलित गराउने र राजप्रशस्तिमा पशुपति प्रति आदरभाव व्यक्त गर्ने परम्परा हाम्रो यहाँ पछिसम्म पनि चालू रह्यो।

नरेन्द्रदेव जस्ता लिच्छवि राजाले धार्मिक सङ्घलाई ठूलो प्रोत्साहन दिने नीति लिएका हुँदा हाम्रो यहाँ पाशुपत संघहरू राम्रो अवस्थामा रहेको कुरा लिच्छविकालका अभिलेखबाट थाहा पाइन्छ।

पशुपतिमा धेरैजसा नेपालका राजाहरूका कृतिहरू रहेका थिए। तिनमा लिच्छवि राजा द्वितीय जयदेवले पशुपतिमा चढाएको चाँदीको अष्टदल कमलको विशेष महत्त्व रहेको छ। सो कमल चढाई राख्न लाएको बृहत् शिलालेख पशुपतिमा अद्यावधि छँदैछ। त्यस अभिलेखमा पशुपतिको भव्य वर्णन परेको छ। राजा जयदेवका पद्यका नमूना पनि त्यसमा परेको छ।

पशुपतिनाथको प्रसिद्धि भारतमा समेत फैलिएको थियो। हाम्रो यहाँ पाशुपत–मण्डलीहरू कायम रहेका हुँदा भारतका पनि ठूल ठूला शैवाचार्यहरू यहा आईरहन्थे। खुद शङ्कराचार्य पनि यहाँ आएको उल्लेख पाइन्छ। शङ्कराचार्यले नेपालमा शैवधर्मको पुनरुत्थान गरी पशुपतिका माथमा श्रीखण्डले नित्य श्रीयन्त्र लेखी श्रीविद्यानुकल्पले नित्यार्चन गर्ने पद्धति चलाएको कुरा प्रसिद्ध छ।

प्राचीन कालमा जस्तै मध्यकालमा पनि पशुपतिको प्रतिष्ठा, सम्मान झन् बढ्दै गएको देखिन्छ। नेपाल संवत्को प्रचलन पशुपतिनाथकै विशेष पूजाको उपलक्ष्यमा भएको देखिएको छ। यस कुराको संज्ञना 'पशुपति भट्टारके संवत्सरप्रवृत्तिः कृता' यस टिपौटले गराएको छ। जे होस्, मध्यकालको शुरूमा पनि पशुपतिनाथको ठूलो सन्मान रहेको कुरा अनेक प्रमाणबाट थाहा पाइन्छ। पशुपतिको नजिकै बसेको शहर 'देवपत्तन' कहलाएको र तात्कालिक राजाहरूको राज्याभिषेक देवपत्तनमा हुने उल्लेख पाइन्छ।



स्थितिमल्लको उदयपछि नेपालमा फेरि उत्थान शुरू हुन्छ। स्थितिमल्ल र उनका वंशज मल्ल राजाहरू सबै नै पशुपतिका भक्त थिए। उनीहरूको प्रशस्तिमा 'श्रीमत्पशुपतिचरणकमलधूलिधूसरितशिरोरुह' भन्ने विशेषण जोडिएको हुन्थ्यो। उनीहरूका लालमोहरको शिरानमा 'श्रीपशुपतिर्जयति' भन्ने वाक्य लेखिएको हुन्थ्यो। मल्ल राजाहरूका, राजमाताहरूका राजपत्नीहरूका धेरै कृतिहरू पशुपतिमा रहेका छन्।

मल्लकालमा पशुपतिका पुजारीका रूपमा अनेक प्रसिद्ध स्वामीहरू रहेको हामी पाउँछौं। यक्षमल्लका छोरा रत्नमल्लले एक जना सोमेश्वरानन्द भन्ने षोढान्यासी स्वामीलाई पशुपतिका पुजारी बनाएको वर्णन वंशावलीमा परेको छ। उनको मद्दतको लागि बिसेत र भण्डारी टहलुवा राख्ने परम्परा पनि त्यसै बेलादेखि चलेको भन्ने छ। राजा रत्नमल्लले नुवाकोटका वैश्य ठकुरीलाई जिती नुवाकोटबाट फलफूल ल्याई श्रीपशुपतिनाथलाई चढाएका थिए। सो रीत अद्यावधि कायमै छ। यसै गरी नित्यानन्द, राघवानन्द, विमलानन्द आदि अनेक स्वामीहरू पशुपतिनाथका पुजारी रहेको उल्लेख पाइन्छ। जगज्जयमल्लको पालादेखि दक्षिणी भट्टहरूलाई ल्याई पूजाहारी बनाउने पद्धति निरन्तर रूपमा कायम रह्यो।

श्री ५ बडा महाराजाधिराज पृथ्वीनारायण शाहद्वारा नेपाल विजय भएपछि शाह राजाहरूद्वारा पनि पशुपतिनाथको राष्ट्रिय सम्मान गर्ने प्राचीन परम्पराको संरक्षण र संवर्द्धन कायम रह्यो। श्री ५ पृथ्वीनारायण शाहले पशुपतिमा नित्य पञ्चामृतले स्नान गराई पूजा गर्न धेरै गुठी राखिदिए। श्री ५ रणबहादुर शाहले संवत् १८३५ मा चाँदीको जलहरी बनाई पशुपतिनाथलाई चढाए। कवच जीर्णोद्धार गरी पूर्णिमा पिच्छे महास्नान गराउने, त्रिकाल कुसले बाजा बजाउने गरी धेरै गुठी राखिदिए। यसै गरी शाह कालका पनि पशुपतिमा धेरै कृतिहरू रहेका छन्।

वि. सं. १८६३ साल बैशाख शुदि ६ रोज ७ का दिन श्री ५ रणबहादुर स्वर्ग्य भएपछि श्री ५ गीर्वाण युद्ध विक्रम शाह राजा भएर गीर्वाण युद्ध विक्रमले देउपाटन शहर ने. सं. ९१८–३० अर्थात् १८५५–६७

सालमा श्रीपशुपतिनाथलाई चढाए । श्री ३ महाराज रणोद्दीप सिंहबाट १९३६ सालमा कलकत्ताबाट तलकदार सेतो ढुङ्गा झिकाई श्रीपशुपतिनाथको मन्दिरको गाह्रोमा टांसी राम्रो बनाईदिए । फेरि यिनै रणोद्दीपसिंहबाट वि. सं. १९३४ सालमा आफ्नो पुर्खा रामकृष्ण कुंवरले बनाएको गुह्येश्वरी जाने बाटो बिग्रेको हुनाले राम्रोसंग बनाईदिए । श्रीजनरल जगत्जङ्ग-बहादुर राणाले वि. सं. १९३६ साल वैशाख वदि १३।१ का दिन सुनको ठूलो बसाहा बनाई पशुपतिनाथको पश्चिम ढोका अगाडि स्थापना गरिदिए । श्री ३ महाराजा चन्द्रशमशेर ज. ब. रा. बाट वि. सं. १९८० सालमा पशुपतिनाथको मन्दिर भित्र आफ्नो मूर्तिको चांदीको मोहर बनाई जमीनमा छापिदिए र मन्दिरभित्र गाह्रोमा सेतो टायल छापिदिए । फेरि यिनै श्री ३ चन्द्र शमशेर ज. ब. रा. ले अघि राजा नृपेन्द्र मल्लबाट बनाइएको पशुपतिनाथको छाना पुरानो भई ठाउँठाउँमा बिग्रेको हुनाले वि. सं. १९८२ सालमा बुइतला छाना सुनले छाई सबै मन्दिर भरि नै रङ्ग रोगन गरि बिजुली बत्ती समेत राखिदिए । वि. सं. १९९० साल माघ २ गते सवादुइ बजे ठूलो भइंचालो जांदा श्रीपशुपतिनाथको मन्दिर र गुह्येश्वरीको मन्दिरमा केही भएन । अरू तिनै शहरका घरहरू ध्वस्त भए । वि. सं. १९९१ सालमा श्री ३ महाराज जुद्ध शम्शेरले पशुपतिनाथको मन्दिर भित्र पशुपतिनाथको नाउँको र आफ्नो नाउँको बुट्टा बनाईदिए ।

शिवलाई ब्रह्माण्डरूप मान्दछन् । फेरि ब्रह्माण्ड अण्डाकार मानिएको छ । त्यसउसले अण्डाकार शिवलिङ्ग बनाई मूल प्रकृतिरूप जलहरिमाथि राखी पूजा गर्ने चलन चलेको हो । सो लिङ्गमा आठ प्रकारको शिवरूपले घेरिएको पनि मान्ने चलन छ । ती आठ प्रकारका शिवरूप यी हुन्–

१. शर्व २. भव ३. ईशान ४. रुद्र ५. उग्र ६. भीम ७. पशुपति ८. महादेव ।

हाम्रा नेपालका देवालयहरूमा रहेका रहस्यात्मक देवमूर्तिहरूमा तिनको प्रत्येक भेद मूर्तिहरूमा कल्पना गर्न हुने किसिमको हुन्छ । त्यस्तै हाम्रो यहाँ श्रीपशुपतिनाथका चारमुख भएका मूर्ति छन् । त्यस विषयमा



यहाँ केही कुरा झल्काउने चेष्टा गर्दछु । "सर्वे जीवा एव पशवः, तेषां पतिः पशुपतिः" त्यस कारण पशुपति साक्षात् परब्रह्मको सगुणरूप हुन् । यिनमा तीन भेद छन् र ती के के हुन् भने (१) लघु पाशुपत विद्या– त्यस विद्यामा वधूबीजरहित भए पाशुपतास्त्र बन्दछ । (२) मध्यम पाशुपत विद्या– यस मन्त्रमा पाशुपत कूटसमेत समावेश भएको हुन्छ । (३) महापाशुपत विद्या– यसमा महापाशुपत कूट र वैदिक ब्रह्मविद्या समेत समष्टि भई निगमागमात्मक विद्या बन्दछ ।

लघुपाशुपत विद्यात्मक पशुपतिको ध्यान यस प्रकार छ–

"मध्याह्नार्कसमप्रभं शशिधरं भीमाट्टहासोज्ज्वलम् ।
त्र्यक्षं पन्नगभूषणं शिखिशिखाश्मश्रुस्फुरन्मूर्धजम् ॥
हस्ताब्जैस्त्रिशिखं समुद्गरमसिं शक्तिं दधानं विभुम् ।
दंष्ट्राभीमचतुर्मुखं पशुपतिं दिव्यास्त्ररूपं स्मरेत् ॥"

अर्थात् मध्याह्नकालका सूर्य झैं कान्ति भएका, चन्द्रमा पहिरिएका, डरलाग्दो गरी खित्का छोडेर हाँसिरहेका तीन नेत्र भएका, सर्पको गहना पहिरेका अग्निशिखा रूप जुङ्गा र फुरेका ठाडा केश भएका त्रिशिख, मुंग्रो, तरवार र शक्ति चारबाहुमा धारण गरेका, दाह्रा निस्केको भयङ्कर चारमुख भएका, सर्वव्यापी, दिव्य अस्त्ररूप भएका पशुपतिलाई सम्झनू । यो पशुपतिको तामसी ध्यान अर्थात् तामस रूप हो ।

(२) मध्यम पाशुपात विद्यात्मक पशुपतिको ध्यान यस प्रकारको छ ।

"ध्यायेत् पशुपतिं सम्यङ्‌ मन्त्री चैकाग्रमानसः ।
पञ्चवक्त्रं दशभुजं प्रतिवक्त्रत्रिलोचनम् ॥
अग्निज्वालानिभं श्मश्रुसंयुतं भीमदंष्ट्रकम् ।
खड्गबाणानक्षशूलं शक्तिं परशुमेव च ॥
दधानं दक्षिणैर्हस्तैरूर्ध्वादिक्रमतो गुरुम् ।
खेटचापौ कुण्डिकाञ्च त्रिशूलं ब्रह्मदण्डयुक् ॥

वामहस्तैश्च विभ्राणं मध्याह्नार्कसमप्रभम् ।
नानाभरणसंदीप्तं पन्नगेन्द्रैरलंकृतम् ॥
स्फटिकौघनिभं शान्तं सर्वरक्षाकरं स्मरेत् ॥

अर्थात् पांचमुख भएका, दशवाहु भएका, हरेक मुखमा तीनतीन नेत्र भएका, आगोको ज्वालाझैं लालवर्ण भएका, जुंघा भएका, भयंकर दाह्रा भएका, खड्ग पञ्चवाण, रुद्राक्षको माला, शक्ति अनि वज्रो दाहिने पट्टिको माथिल्लो वाहुदेखि क्रमैले धारण गरेका, ढाल, धनु, कमण्डलु, त्रिशूल अनि ब्रह्मदण्ड वामबाहुमा धारण गरेका मध्याह्नकालका सूर्य झैं कान्ति भएका, नानातरहका गहना पहिरिएर उज्यालो भएका, नागहरूका गहना पहिरिएका, सबैलाई रक्षा गर्ने स्फटिक झैं कञ्चन अर्थात् निर्मल सेतो वर्ण भएका शान्तस्वरूप पशुपतिलाई संझोस् ।

(३) अब महापशुपत विद्यात्मक पशुपतिको ध्यान यस प्रकारको छ–

सूर्यकोटिप्रतीकाशं चन्द्रकोटिसुशीतलम् ।
उत्तप्तहेमसंकाशं त्रिकोणोपरिसंस्थितम् ॥
पूर्वे तप्तसुवर्णाभं शान्तं विष्ण्वात्मकास्यकम् ।
दक्षिणे भैरवास्यञ्च श्यामं दंष्ट्रांकुरान्वितम् ॥
क्षीरकुन्देन्दुधवलं कात्मकं पश्चिमाननम् ।
उत्तरे वदने गौरं गौरीशङ्कररूपकम् ॥
जटाजूटं चन्द्रचूडं प्रतिवक्त्रत्रिलोचनम् ।
ऊर्ध्वे ज्योतिर्मयं वक्त्रं शिखाकारं तदन्तरे ॥
श्रीचक्रराजविह्नन्तु परब्रह्मात्मकं विभुम् ।
नाभौ कालाग्निरुद्राख्यवदनं प्रोज्वलाननम् ॥
पन्नगाभरणोपेतं रुद्राक्षैः समलङ्कृतम् ।
नानारत्नोज्ज्वलाङ्गञ्च मुण्डमालाविभूषणम् ॥
विल्वपत्रमयीमालयापादान्तावलम्बितम् ।
दक्षिणैर्वेददोर्दण्डैरभीतिदानमुत्तमम् ॥
वरदं वामहस्तैश्च चतुर्भिर्दधतं शिवम् ।



एवमष्टभुजं देवं सदा षोडशवार्षिकम् ॥
खगान्तरे शून्यमध्ये शून्यपद्मोपरिस्थितम् ।
श्रीमत्पशुपतिं ध्यायेत् सच्चिदानन्दलक्षणम् ॥

अर्थात् कोटिसूर्य झैं प्रकाशयुक्त, कोटिचन्द्र झैं शीतल, तताएको सुन झैं वर्ण भएका, त्रिकोणाकार यन्त्रमाथि बसेका । पूर्वतिर तताएको सुन झैं वर्ण भएको शान्त विष्णुरूपी मुहार । दक्षिणपट्टि श्यामवर्ण भएको दाह्रा निस्किएको भैरवरूपी मुहार । पश्चिममा दूध, चन्द्र र कुन्दपुष्प झैं सेतो ब्रह्माको रूप भएको मुहार । उत्तरमा शिव शक्त्यात्मक गोरो मुहार । माथमा जूरो बांधेका । माथमा चन्द्रमा पहिरिएका । हरेक मुखमा तीन तीन आंखा भएका । माथितिर वत्तीको शिखा झैं ज्योतिर्मय मुहार र त्यसभित्र श्रीयन्त्रको चिह्न भएको । नाभिस्थानमा बलिरहेको कालाग्नि रूद्रात्मक मुहार । नागको गहना पहिरेका । रुद्राक्षको गहना पहिरेका अनेक तरहका गहना पहिरिएका । मुण्डमाला पहिरेका । वेलपत्रको माला पाउसम्म पहिरिएका । दाहिने चार वाहुमा अभयमुद्रा धारण गरेका वायां चार वाहुमा वरमुद्रा धारण गरेका शिवरूप । यस प्रकारका आठ वाहु भएका । संधैका षोडषा पठ्ठा । अर्को आकाशमा अर्थात् शून्याकाशमा शून्यपद्ममा वसेका । सच्चिदानन्दस्वरूप श्रीपशुपतिको ध्यान गर्नू ।

यहाँ नेपालका श्रीपशुपतिको प्रतिमामा पूर्वोक्त तीनै प्रकारको ध्यान घट्छ । यो मूर्ति जलहरिमाथि स्थापित भएको छ, यसमा चारतिर चारमुख र प्रत्येक मुखमा दुइ दुइ वाहु देखिन्छन् । अब यस मूर्तिलाई पहिलो ध्यानमा घटाउँदा चारमुख त स्पष्टै भयो, प्रत्येक मुखको दुइ दुइ वाहुलाई ध्यानोक्त हतियारयुक्त एक एक वाहुमात्रै कल्पना हुँदा चारवाहु हुन्छ । अनि दोस्रो ध्यानमा घटाउँदा जलहरिलाई आसनरूप पद्म फेरि चारमुख र आठवाहु छँदैछ; त्यसमा थप लिंगमाथि अंकित भएको श्रीयन्त्रलाई एकमुख र दुइ वाहु कल्पना हुन्छ र पांच वक्त्र र दशभुजा भएका ठहरिन्छन् । फेरि तेस्रो ध्यानमा घटाउँदा चारमुख र आठवाहु स्पष्टै भयो । लिङ्गको शिर ज्योतिर्मयवक्त्र, अनि त्यसमा अंकित श्रीयन्त्र र जलहरिमाथि लिङ्गको जरालाई नाभिस्थानको वक्त्र अनि जलहरीलाई त्रिकोणासन भन्ने कल्पना हुँदा ध्यानोक्त छ मुख आठवाहु र त्रिकोणासन सिद्ध हुन्छ ।

धेरै प्रकारका रूपको कल्पना भई उपासना हुने देवताहरूको ठूला ठूला पीठहरूमा यस्तै सांकेतिक मूर्ति अथवा केवल अरूप शिला, कुण्ड, यन्त्र वा कलश इत्यादि स्थापित हुन्छन् ।

पशुपतिको कुन कुन मुख कुन कुन देवतात्मक हुन् भन्ने महापाशुपतको ध्यानबाट झल्किएकै छ । तथापि यहाँ विशेष केही कुरा लेख्ने चेष्टा गर्दछु । यिनको पश्चिम मुख ब्रह्मात्मक सद्योजात पश्चिमाम्नाय तत्त्वका हुन् । उत्तर मुख गौरीशंकरात्मक वामदेव उत्तराम्नाय तत्त्वात्मक हुन् । पूर्वमुख विष्ण्वात्मक तत्पुरुष पूर्वाम्नाय तत्त्वात्मक हुन् । दक्षिणमुख भैरवात्मक अघोर दक्षिणाम्नाय तत्त्वात्मक हुन् । विशेष गरेर यही मुखमा भोग लाग्छ । ऊर्ध्वमा मुख छैन; खालि केही उक्सेको मात्र छ । त्यहाँ नित्यशः श्रीखण्डले श्रीयन्त्र लेखिन्छ । सोही श्रीयन्त्रको विन्दुचक्रलाई ऊर्ध्वमुख मानेर परब्रह्मात्मक ईशान ऊर्ध्वाम्नाय तत्वको कल्पना हुन्छ । यस श्रीयन्त्रमा श्री १०८ शंकराचार्यले राखेका नियमानुसार श्रीयन्त्रको केरल संप्रदायबाट सपर्या हुन्छ । त्यस उसले हाम्रा नेपालका उपासकहरू गौड संप्रदायी हुनाले अथावधि केरल संप्रदायी दक्षिणी भट्टहरूलाई नै यहाँका पूजाहारी बनाउने चलन छ ।

अब यहाँ धेरै जनाले रहस्य नबुझेको एउटा विचारको कुरा छ । त्यो के भने यो पशुपति पीठ शिवशक्त्यात्मक श्रीविद्यापीठ हो । यहाँ मुख्य श्रीयन्त्रमा श्रीविद्याकै पूजा हुन्छ । अतः श्रीविद्याको पूजामा श्रीपात्रस्थापना गर्नु अत्यावश्यक हुन्छ । गौड संप्रदाय र कश्मीर संप्रदायमा सामान्यार्घ र शंखार्घ (विशेषार्घ)को बीचमा श्रीपात्रको स्थापना हुन्छ । आनन्दभैरव र आनन्दभैरवीको सामरस्य पूजा सोही श्रीपात्रमा हुन्छ । तर केरल संप्रदायको हयग्रीव मतमा श्रीपात्रको स्थापना हुँदैन । त्यसमा हुने आनन्द भैरव र आनन्द भैरवीको सामरस्य पूजादि सबै विशेषार्घ अर्थात् शंखार्घमै हुन्छ । फेरि यहाँ पशुपति नै शिवलिंगात्मक हुनाले शिवलाई शंखार्घ चढ्दैन । त्यस उसले यहाँ विशेषार्घ स्वरूप सुनको शंखरूप अर्घ बनाएर राखिएको छ । फेरि अर्को एउटा ठूलो चाँदीको शंख पनि बनाएर राखिएको छ । यहाँ शंखजल भनेर जो अभिषेक गरिन्छ; त्यो श्रीपात्रात्मक शंखको अभिषेकै हो, केवल शंखको होइन ।



अब देवालयको विषयमा अर्को एउटा कुरा लेख्नु छ । त्यो कुरा के हो भने पशुपतिको देवलको चारतिर रहेको दुइ शरभ दुइ शरभीको बारेको कुरा । त्यस विषयमा वाराहीतन्त्रको रहस्य खण्डमा यस प्रकारको कथा लेखेको छ ।

अघि नृसिंहावतार भएर हिरण्यकशिपुको बध गरेपछि नृसिंहको कोप उत्पातसित बढ्दै गयो र सो शान्त गर्न स्वयम् लक्ष्मी र प्रह्लादले समेत स्तुति गर्दा पनि नसकेर शान्त भएन । तसर्थ सदाशिवले निम्नलिखित ध्यान बमोजिमको शरभको रूप धारण गर्नुभयो । सो रूप यस प्रकारको छ–

"चन्द्रार्काग्निस्त्रिनयनं कालीदुर्गाद्विपक्षकम् ।
विद्युज्जिह्वं वज्रनखं वडवाग्न्युदरं तथा ॥
व्याधिमृत्युरिपुघ्नं च चण्डवातातिवेगिनम् ।
हृद्भैरवस्वरूपञ्च वैरिवृन्दनिषूदनम् ॥
मृगस्त्वर्धशरीरेण पक्षाभ्यां चञ्चुना द्विजः ।
अधोवक्त्रश्चतुष्पादस्तूर्ध्ववक्त्रश्चतुर्भुजः ॥
कालान्तदहनप्रख्यो नीलजीमूतनिःस्वनः ।
अरिर्यद्दर्शनादेव विनष्टबलविक्रमः ॥
सटाच्छटोग्ररूपाय पक्षविक्षिप्तभूभृते ।
अष्टपादाय रुद्राय नमः शरभमूर्तये ॥"

अर्थात् "चन्द्र, सूर्य र अग्नि रूप तीन नेत्र, काली र दुर्गा स्वरूप दुइ पखेटा, विजुलीस्वरूप जिब्रो, वज्ररूपी नङग्रा, वडवाग्निरूप पेट भएका, रोग मृत्यु र शत्रुलाई नाश गर्ने चण्डवात (आंधीबेहरी) जस्ता अत्यन्त वेगिला, भैरवस्वरूप हृदयका, वैरीहरूको समूहलाई नाश गर्ने, आधा शरीर (शरीरको तल्लो भाग) मृगको जस्तो र आधा (माथिल्लो भाग) पंक्षीको जस्तो चुच्चो र पखेटा भएका, चार खुट्टा र चार हात भएका, प्रलयकालका अग्नि जस्तो तेज र नीलमेघको जस्तो गर्जना भएका, जसलाई देख्नेबित्तिकै शत्रुको सारा बल पराक्रम गल्ने, यस्ता केशर वा जटाले गर्दा उग्ररूपका, पखेटाको वेगले पहाड पल्टाउने, अष्टपाद रुद्ररूप शरभ मूर्तिलाई नमस्कार ।"

यस्तो रूपको अगाडिको चार हातको नंग्राले वाजले परेवालाई गांजे झैं गरी नृसिंहको जगल्टामा गांजी आकाशमा लगे फ्वाङ्ङल फुङ्ङल गरी हाइ दुहाइ गराई शान्त युगल नारायणरूप बनाई हाल शिखानारायण भएको ठाउँमा फाली शिखानारायणको उत्पत्ति गराए । त्यसपछि नागार्जुन डांडामा आई बसेर कुर्ले । सो कुर्ल्याइको गर्जनाले थर्किएर पहाड फुटी त्यहाँबाट वाग्मती निस्किन् । वाक्बाट निस्किएको हुनाले तिनको नाम वाग्मती हुन गयो । अनि उनैको पसिनाबाट रुद्रमती बन्न गयो । यसै चालले त्यहांकै वरिपरिको डाँडामा शरभ विचर्न थाले । सो कुरा पार्वतीले पनि थाहा पाई उस्तै शरभीको रूप धारण गरी धेरै कालसम्म त्यहीं क्रीडा गर्नुभयो । शिवले क्रीडा गरेको स्थान हुनाले त्यस डाँडाको नाम शिवपुरी हुन गयो । हाल अपभ्रंशले गर्दा शिउपुरी भन्दछन् । त्यसपछि शरभीले चारवटा फुल पारेर त्यहाँ छाडी शिवपार्वती कैलाशतिर प्रस्थान गर्नुभयो । कालान्तरमा ती चार फुलबाट दुइ शरभ र दुइ शरभी जन्मी आ-आफ्नो वासस्थानको लागि शिवजीको आराधना गर्दा "मेरो मन्दिरको चार दिशामा तिमीहरू चारजना रहनू र मेरै पूजा भएबाट तिमीहरू तृप्त हुनेछौ" भन्ने शिवजीबाट ती दुइ शरभ र दुइ शरभीलाई वरदान भयो । त्यस कालदेखि प्रत्येक शिवको मन्दिरमा प्रत्यक्ष अथवा अप्रत्यक्ष रूपले भए पनि तिनीहरू रहन्छन् । हाम्रो यहाँ पशुपतिको मन्दिरको टुंडालमा यी चार मूर्ति छन् । त्रिपुरेश्वरमा त अझ स्पष्टरूपले अष्टधातुका मूर्तिहरू स्थापित छन् ।

इति श्रीकामकलारहस्यद्वितीयखण्डे पशुपतिवर्णनन्नाम द्वितीयः पटलः ।



# तृतीय पटल

**चित्र नं. ६८**

**भक्तपुर भैरवनाथ मन्दिर, भक्तपुर**

लक्षण र पीठको विचारले यस पटलमा भक्तपुरको प्रसिद्ध पांचतले मन्दिरको र भक्तपुर भैरवको यथाज्ञान व्याख्या गर्दछु । भैरवनाथको बारेमा देवमाला नामक वंशावलीमा यस्तो लेखिएको छ । परापूर्वकालमा भक्तपुरको एउटा राजाले राती आफुलाई डस्न आउने नागलाई मारी भोलिपल्ट एउटा काठ गाडेर त्यसमा झुण्ड्याइदिए । त्यो नाग हेर्नलाई तेत्तिसकोटी देवताहरू मानिसको रूप धारण गरी आएका थिए । तीमध्ये काशीका कालभैरव पनि आएका रहेछन् । त्यही बखत एउटा मुनि आचार्य भन्नेले "ती भैरवलाई यहीं राख्न पाए हुन्थ्यो" भनी मन्त्र गरेर लखेट्न जांदा जांदा ती मुनिले हाल भक्तपुर भैरवनाथनिर जमीनभित्र पस्न लागेको भेट्टाई तिनको टुपी समाई शिर छेदन गरेर शरीर चांहि जमीनभित्र पसी काशीमा पुग्यो । त्यसपछि त्यो शिरलाई मूर्ति बनाई त्यहीं स्थापना गरिदिए । पछि श्री राजा आनन्ददेवले एउटा मन्दिर बनाई शहरको बीचमा स्थापना गरिदिए । त्यसपछि राजा जगज्योति मल्लले कालभैरवको रथ बनाई मेष संक्रान्तिको दिन शत्रुहन्ता योगले लिंगो ढाल्ने रीत गरी भैरवको र कालीको रथयात्रा गरी भैरवलाई अनेक शक्तिविषय गमन इच्छा गरिएका लीला भावले कालीको रथ र भैरवको रथ परस्पर जुधाउने रीत चलाई दिए । पछि राजा भूपतीन्द्र मल्लले ज्यादै राम्रो मन्दिर बनाई दिएका थिए । यसपछि राजा रणजित् मल्लले मन्दिरको

अगाडि र पश्चिमपट्टि सुनको छाना हालिदिए। त्यसपछि श्री ५ रणबहादुर शाहले मन्दिरको जीर्णोद्धार गरिदिए। पछि श्री ३ महाराज चन्द्रशंशेरको पालामा एकजना भक्तले वेताललाई पित्तलको पाताले मोरिदिए। वि. सं. १९९० सालना ठूलो भूकम्प जांदा मन्दिर जम्मै भत्कियो र सोही सालमा श्री ३ महाराज जुद्ध शमशेरले जगँदेखि नयाँ मन्दिर बनाई दिएका हुन्।

यी भैरवको सक्कली टाउको एउटा तामाको पेटारीभित्र राखी बन्द गरिएको छ। सोही बन्द पेटारीमा नै पूजा र दर्शनादि हुन्छ। वर्षको एकदिन बिस्केटको दिनमा मूल पुजारीले मात्र सो पेटारी खोली सो शिरमा तीनथुङ्गा चमेलीको फूल अर्पण गरेर अघिल्लो सालमा अर्पण गरेको तीन थुङ्गा (ताजा नै हुन्छ रे) झिकी एक थुङ्गा प्रसाद श्री ५ महाराजाधिराज सरकारका जुनाफमा चढाई पठाउने गर्छन्।

अब यही भैरव मन्दिरको टुंडालबाट मन्त्रोद्धार गरिन्छ। अष्टमातृकाहरू र अष्टभैरवहरू सबै आम्नायको आवरणमा पूजित हुने हुनाले यिनको मन्दिरको टुंडालमा आम्नायात्मक रतासन हुँदैन। त्यस उसले यो कालभैरवको मन्दिर ठहरिन आएको हुनाले कालभैरव धूमावती शक्तिका भैरव हुन्। यी बटुकभैरवका अंश होइनन्। यी संहारभैरवको अंश हुनाले यिनको टुंडालमा तल दिए बमोजिमको चित्र हुन जान्छ। यहाँ यस मन्दिरको पश्चिम मोहडाको दाहिनेदेखि बायाँसम्मको टुंडालको क्रमैसित व्याख्या गर्ने चेष्टा गर्दछु।

चित्र नं. ६९

श्रीभैरवनाथको मन्दिरको टुंडाल नं. १ (प) भक्तपुर

यो चित्रमा तल आठ हात गरेका भैरव अश्वासन गरेकाले भीषण भैरव ठहरिएबाट नादबिन्दु सहित "ओ" को उद्धार हुन्छ। आठ हात भएबाट "क्र" को उद्धार भई अंकुशबीजको उद्धार हुन गयो। अब माथिको मूर्तिमा भीषण भैरवको शक्ति चामुंडाको रूपान्तर ठहर्न आयो। त्यस उसले



नादविन्दुसहित "औं" को उद्धार हुन्छ। (आवरण देवता हुँदा सबैको मूर्ति प्रायश एकै हुनाले रूपबाट विशेष केही खुल्न आउँदैन।) शक्तिमाथि छत्र भएको हुनाले "ह्" को उद्धार भएको हुनाले "ह्"+नादविन्दु सहित "औं" को उद्धार भई शिवप्रासादबीजको उद्धार हुन्छ। अतः यस टुंडालबाट रेफयुक्त शिवप्रासाद अनि अंकुशबीज र त्यसपछि एक वाहनमाथि एक पुरुषरूप भैरव देखिएको हुनाले "हूं फट्" को उद्धार भई सार्ध चतुरक्षरी मन्त्रको उद्धार हुन्छ। शक्तिको दाहिने हातमा खड्ग भएबाट विजय, सबभन्दा तल्लो हातले त्रिशूलले वैरीलाई रोप्न लागेबाट त्रिविधोत्पातकनाश, बायाँ हातले शत्रुको केश समातेबाट प्रपञ्चको संकेत बुझिन्छ। अरू हातको तत्त्व बुझ्न नसकिएकोले क्षमाप्रार्थी छु।

चित्र नं. ७०

भैरवनाथको मन्दिरको टुंडाल नं. २ (प) भक्तपुर

यस चित्रमा तल आठ हात भएका भैरव वृषभासन गरेबाट आनन्द भैरवको रूपान्तर ठहरिएकोले आनन्दभैरवकूटको उद्धार हुन्छ। माथिको शक्ति पनि निजको शक्ति ठहरिएको हुनाले आनन्दभैरवीकै रूपान्तर ठहरिन्। छत्रसहित शक्तिको मूर्तिबाट आनन्दभैरवीकूटको उद्धार हुन्छ। अतः यसबाट आनन्दभैरवीकूट अनि हूं फट् प्रयोग भई सार्ध चतुरक्षरीको उद्धार हुन्छ। शक्तिको दुइ हातमा कपालपात्र धारण गरेबाट बुद्धि, तत्त्वमुद्राबाट ज्ञानरूप बुझिन्छ। त्रिशूलले वैरीलाई रोप्न लागेबाट त्रिविधोत्पात नाश र बायाँ हातले केश समातेबाट प्रपञ्च बुझिन्छ।

चित्र नं. ७१

भैरव मन्दिरको टुंडाल नं. ३ (प) भक्तपुर

यो चित्रमा आठ हात भएका भैरवले सिंहवाहन गरेबाट असिताङ्ग भैरव ठहरिन्छन्। यिनको आठ हात भएबाट "क्र", असिताङ्ग भैरवबाट

नादविन्दु सहित "अ" भएको हुनाले "क्ष"+नादविन्दु सहित "अ" को उद्धार हुन्छ। माथिको शक्ति यिनै भैरवकी शक्ति ब्रह्माणीको रूपान्तर ठहर्न जाँदा नादविन्दुसहित "आ" को उद्धार हुन्छ । ब्रह्माणीको छत्र हुनाले छत्रबाट "ब्र" को उद्धार भई "ब्र+आ+नादविन्दुको उद्धार हुन्छ । अतः यस टुंडालको मूर्तिबाट "ब्र+आ+नादविन्दु" अनि "क्ष+अ+नादविन्दु त्यसपछि पूर्वोक्तवत् हूं फट्को उद्धार भई सार्धचतुरक्षरीको उद्धार हुन्छ। शक्तिको हातमा भएको त्रिशूलले वैरीलाई रोप्न लागेबाट त्रिविधोत्पात नाश र केश समातेबाट प्रपञ्च ठहर्छ ।

चित्र नं. ७२

भैरव मन्दिरको टुंडाल नं. ४ (प) भक्तपुर

यो चित्रमा तल अष्टभुजी भैरव वेतालमाथि बसेबाट संहार भैरव ठहर्छन् । यिनी संहार भैरव ठहर्नाले शिरविन्दुको उद्धार हुन्छ । माथि उनकी शक्ति मातृका महालक्ष्मीको रूपान्तर ठहर्न आयो । त्यस उसले महालक्ष्मीबाट श्रीबीजको र "अः" स्वरको उद्धार हुन आउँछ । माथि एक छत्र भएबाट "ह" को उद्धार हुन्छ। तल संहार भैरवबाट "अं" र वेतालबाट "ल्ह" को उद्धार भई "ल्हँ" बीजको उद्धार हुन्छ । अतः यस टुंडालको चित्रबाट पहिले श्रीबीज अनि "ल्हँ" अनि "ह्" त्यसपछि पूर्वोक्तवत् तल भैरव भएबाट हूं फट्को उद्धार भई सार्ध पञ्चाक्षरीको उद्धार हुन्छ । महालक्ष्मीको दाहिने हातको खड्गबाट विजय, त्रिशूलले वैरीलाई रोप्न लागेबाट त्रिविधोत्पातनाश, मुद्रा र पात्रयुक्त हातबाट बुद्धि र ज्ञानको सूचना हुन्छ ।

चित्र नं. ७३

भैरवनाथको मन्दिर, टुंडाल नं. ५ (प) भक्तपुर



यो चित्रमा तल पुरुषरूप भैरवले नाग आसन गरेबाट अमृतेश्वर भैरव उद्धार भई यिनबाट नादविन्दु सहित "जू" बीजको उद्धार हुन्छ। माथिको मूर्ति यिनकी शक्ति अमृतलक्ष्मीको ठहर्न आउँदा त्यस मूर्तिबाट सर्गयुक्त "स"को उद्धार हुन्छ। यिनको एक छत्र भएको हुनाले केवल "ह्" हुनुपर्ने हो। तर यहाँ अरू कुनै स्वरको उद्धार नदेखिएबाट केवल प्रणवको मात्र उद्धार हुन्छ । फेरि माथि प्रणव भएबाट तल भैरव भएपनि हूं फट्को उद्धार नभै प्रणवको लगत्तै पछि नादविन्दुयुत "जू" बीज आई त्यसपछि अमृतलक्ष्मीको सर्गयुक्त "स" बीज आई त्र्यक्षरी मृत्युंजय मन्त्रको उद्धार हुन्छ।

चित्र नं. ७४

भैरव मन्दिरको टुंडाल नं. ६ (प) भक्तपुर

यस चित्रमा तल पुरुषरूप भैरव नागवेष्ठित शिवमाथि बसेबाट यिनी मन्थानभैरव ठहरिई त्यस मूर्तिबाट कूर्चबीजको उद्धार हुन्छ। माथिको मूर्ति यिनको शक्ति मन्थानेश्वरीको रूपान्तर ठहर्न आउँछ। अतः मन्थानेश्वरीबाट योगिनीबीज तथा नादविन्दु युक्त "औ" कारको उद्धार हुन्छ। माथि एउटा छत्र भएबाट "ह" कारको उद्धार भई अघि उद्धार भएको स्वरमा मिल्दा शिवप्रासाद बीजको उद्धार भई शिवप्रासादबीज, योगिनीबीज अनि कूर्चबीज अनि एक भैरव भएबाट माथि बताए झैं "हूं फट्" भई यसबाट सार्ध पञ्चाक्षरी मन्त्रको उद्धार हुन्छ।

चित्र नं. ७५

भैरव मन्दिरको टुंडाल नं. ७ (प) भक्तपुर

यस चित्रमा तल पुरुषरूप भैरव मयूरमा बसेबाट शिखा स्वच्छन्द भैरव ठहर्छन् । अतः यिनबाट व्योमशशी युक्त "क्ष" मा नादविन्दु युक्त "आ" मिलेको कूटको उद्धार हुन्छ। यस माथिको मूर्ति यिनको शक्ति

स्वच्छन्देश्वरी कुजाबाट पूर्वोक्त कूटमा "आ" कारको सट्टा ईकार भएको कूटको उद्धार हुन्छ। यहाँ एउटा छत्र भएबाट "ह्" उद्धार हुनुपर्ने, त्यसमा कुनै स्वरको उद्धार नभएको हुनाले अघि ॐ "हूं फट्" हुनुपर्नेमा सो हराई पूर्वोक्तवत् मन्त्र प्रयोग हुँदा अघि उद्धार भएको कूट पहिले आकारयुत कूट अनि इकारयुत कूट प्रयोग भई दुइ कूटाक्षरी मन्त्रको उद्धार हुन्छ । शक्तिको दाहिने हातमा खड्ग भएबाट विजय, त्रिशूल भएबाट त्रिविधोत्पात नाश, बायां हातले वैरीको केश समातेबाट प्रपञ्च र तत्त्वमुद्रा र पात्र भएबाट ज्ञान र बुद्धिको सूचना हुन्छ ।

चित्र नं. ७६

भैरव मन्दिरको टुँडाल नं. ८ (प) भक्तपुर

यस चित्रमा तल पुरुषरूप भैरव बंदेल आसन गरेर बसेबाट चण्डभैरव ठहर्न आउँछन् । यिनबाट नादविन्दु युक्त "उ" कारको उद्धार हुन्छ । तल वराह भएबाट "र" को उद्धार भई अकूपार बीजको उद्धार हुन्छ । माथिको मूर्तिमा यिनको शक्ति कौमारी हुनाले यो मूर्ति कौमारीको रूपान्तर ठहरिन गएबाट कच्छेष्टयुक्त भास्करसहित "क्र" मा नादविन्दु युक्त "औं" बाट बनेको कौमारी कूटको उद्धार हुन्छ। फेरि यिनैबाट नादविन्दु युक्त "ऊ" कारको पनि उद्धार हुन्छ। माथि एक छाता भएबाट "ह्" कारको उद्धार भई अघि उद्धार भएको नादविन्दु युक्त "ऊ" कारमा मिल्न जांदा कूर्चबीजको उद्धार हुन्छ। अतः यस टुंडालको मूर्तिबाट कूर्चबीज कौमारीकूट अनि अकूपारबीज पछि पूर्ववत् तल भैरव भएको हुनाले "हुं फट्" भई सार्ध पञ्चाक्षरी मन्त्रको उद्धार हुन्छ । शक्तिको दायां हातले शत्रुलाई त्रिशूलले रोप्न लागेबाट त्रिविधोत्पातक नाश र तत्त्वमुद्रा र पात्र भएबाट ज्ञान बुद्धिको सूचना हुन्छ।

प्रत्येक टुंडालको मूर्तिमा छत्रमुनि दुइ अप्सराले माला अर्पण गरेबाट प्रत्येक मूर्तिमा प्रत्येक मन्त्रपछि यहाँको देवताको नाम उच्चारण गरी "श्री



पादुकां पूजयामि" भन्नुपर्ने सूचित हुन्छ । यस मन्दिरको अरू दिशातिर पनि यस्तै प्रकारका मूर्तिहरू छन् । यिनीहरूको पनि यस्तै प्रकारले मन्त्र उद्धार हुन सक्छ ।

चित्र नं. ७७

न्यातपोल, पाँचतले मन्दिर दक्षिण मोहडा, भक्तपुर

अब यहाँ भक्तपुरको पाँचतले मन्दिर (न्यातपोल) को वर्णन गर्दछु । यो मन्दिर सिद्धिलक्ष्मीको हो । नेवारी भाषामा "न्यातपोल" को अर्थ–न्या (न्यागुको छोटकरी) को अर्थ पाँच "त" को माने तह अर्थात् तला र पोलको अर्थ छाना हुन्छ । यो मन्दिरको सिँढी पनि पाँच तह परेको छ । सबभन्दा तल्लो तहमा जय प्रताप, त्यसमाथि हात्ती, सिंह, शार्दूल रहेका छन् । त्यसमाथि बघिनी र सिंहिनी छन् । मन्दिरको चारकुनामा दिग्गणेश राखिएका छन् ।

यस मन्दिरको बारेमा देवमाला नामक पुस्तकमा यस्तो लेखिएको छ । "श्रीराजा भूपतीन्द्र मल्लले यो पाँचतले मन्दिर बनाई आदि शक्ति भवानीलाई विधानपूर्वक स्थापना गरिदिए । सो मन्दिर तयार भएपछि भादगाउँको भैरवबाट राजालाई सपनामा "हे राजा, तिमीले मेरो भन्दा पनि अग्लो देवल बनाएछौ, सो मन्दिरमा मैले पनि मान्नुपर्ने 'भवानी' "स्थापना गरेनौ भने म सहनेछैन" भन्ने वाणी भयो । तसर्थ ती राजाले भैरवको आज्ञा मुताविक भवानी मनमानेश्वरी स्थापना गरिदिए । वि. सं. १९९० सालमा भैचालो भई माथिल्लो एक तला भत्कियो ।

हाम्रो नेपालमा वैरी तरफका मानिसले चर पाउलान् भन्ने डरले देवताहरू स्थापना गर्दा अर्कै नामले स्थापना गर्ने चलन भएको छ । तसर्थ यस मन्दिरभित्रकी भवानीको नाम 'मनमानेश्वरी' रहेको हो । यिनी खास त्रिशक्त्यात्मिका सिद्धिलक्ष्मी हुन् । यी चण्डीभद्रकाली, प्रत्यङ्गिरा र सिद्धिलक्ष्मी समष्टि भएको सिद्धिलक्ष्म्यात्मिका रूप हुन् । मन्दिरभित्रको यिनको मुख्य रूप यस प्रकारको छ । माथि एकमुख चण्डीभद्रकालीको, त्यसमुनि तीनमुख

त्रिवक्त्रा प्रत्यंगिराको र त्यसमुनि पाँचमुख पञ्चवक्त्रा सिद्धिलक्ष्मीको गर्दा जम्मा ९ मुख छ । अब हातको हकमा भद्रकालीको सोह्र, त्रिवक्त्रा प्रत्यङ्गिराको छ र सिद्धिलक्ष्मीको दश भई जम्मा बत्तिस हात हुनुपर्नेमा समष्टिरूप भएको हुनाले त्यसको आधा सोह्र हात मात्र भयो । यिनको रूप रुद्रस्कन्धगता अर्थात् रुद्रको कांधमा चढेकी सिद्धिलक्ष्मीकै रूप छ । ती रुद्र पनि बेताल माथि आसन गरेका, मानिस जत्रो एउटै ढुङ्गामा कुंदिएका छन् । श्रीसिद्धिलक्ष्मीको दायां बायां महाङ्काल भैरव र श्मशान भैरव पनि स्थापना भएका छन् । तर ढोका माथिको रूपमा भने तीन शक्तिको तीन रूप त दिएको छ तर आकार भने सबैको चण्डीभद्रकालीको जस्तै छ । त्यस उसले यो देवता बहुतै गुप्त गराएर स्थापना गरे जस्तो बुझिन्छ । फेरि तन्त्रको आवरण देवता जुनसुकै भए पनि तिनको आ-आफ्ना मन्त्र र नाम भए पनि रूप एकै प्रकारको हुन्छ । यसको रहस्य गुरुमुखबाट जान्नुपर्छ ।

यो सिद्धिलक्ष्मीको पीठ हुनाले देवताहरू सर्वप्रथम सिद्धिलक्ष्मीकै आवरणको रूपमा निम्नलिखित प्रकारले रहेका छन् ।

चित्र नं. ७८

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. १ (द) भक्तपुर

यस चित्रमा भैरवरूप काम र भैरवीरूप रति हुन् । काम र रति दुवै बेतालमाथि उभिएर उत्तराम्नायात्मक भई नाचिरहेबाट रावबीजको उद्धार हुन्छ । यिनी सिद्धिलक्ष्मीको आवरणको प्रथम देवता हुनाले माथिको मूर्ति महाचण्डयोगेश्वरीको रूप ठहर्न आयो । अतः यस टुंडालको मूर्तिबाट रावबीज चण्डयोगेश्वरी त्यसपछि भैरवी भैरवरूप रतिकामको रूप हुनाले श्रीपादुकां पूजयामि नमः भन्नुपर्‍यो ।

चित्र नं. ७९

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. २ (द) भक्तपुर



यो चित्रमा पनि अघि कैं रूप देखिएबाट रावबीजकै उद्धार भई माथिको देवताको नाम क्रमैसित हुन जांदा चण्डकापालिनी अनि पूर्ववत् श्रीपादुकां पूजयामि नमः हुन गयो ।

चित्र नं. ८०

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. ३ (द) भक्तपुर

यस चित्रको टुंडालमा सबभन्दा तल भैरवले एक पाउ बेतालमा र अर्को पाउ कुनै अर्कै चीजमा राखेको र भैरवीले चाहिं दुवै पाउ शवमा नटेकी अर्कै वस्तुमा टेकेको हुँदा यसबाट खयुत रावबीजको उद्धार हुन्छ । यस माथिको मूर्ति महाकालीको पर्न आउँछ र पूर्वोक्तवत् श्रीपादुकां पूजयामि नमः हुन्छ ।

चित्र नं. ८१

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. ४ (द) भक्तपुर

यो चित्रमा तल कामरूप भैरव र रतिरूप भैरवी बेतालमाथि उभिएबाट रावबीजको उद्धार हुन्छ । माथिको देवता सिद्धिकाली हुन् । यसमा पनि नाम पछि श्रीपादुकां पूजयामि नमः हुन्छ ।

चित्र नं. ८२

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. ५ (द) भक्तपुर

यसमा पनि तल कामरूप भैरव र रतिरूप भैरवी बेतालमा टेकी उभिएबाट रावबीजको उद्धार हुन्छ । यस माथिको देवता कालसंकर्षिणी हुन् । यिनको नाम पछाडि श्रीपादुकां पूजयामि नमः हुन्छ ।

चित्र नं. ८३

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. ६ (द) भक्तपुर

यो चित्रमा तलको मूर्तिमा शक्तिको मूर्ति भएको हुनाले मायाबीजको उद्धार हुन्छ। यस माथिको मूर्तिको देवता डामरेश्वरी हुन्। यहाँ तल शक्तिको एक मूर्ति मात्रै भएको हुनाले मायाबीजपछि डामरेश्वरी स्वाहा अनि श्रीपादुकां पूजयामि नमः हुन्छ।

चित्र नं. ८४

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. ७ (पू) भक्तपुर

यस चित्रको तलको मूर्तिमा भैरव र भैरवी शवमा टेकेर उभिई उत्तराम्नायात्मक भएको हुनाले रावबीजको उद्धार हुन्छ। यहाँ माथिको मूर्तिको देवता कुब्जिका हुन्। त्यसकारण रावबीजपछि कुब्जिका अनि 'श्रीपादुकां पूजयामि नमः' हुन्छ।

चित्र नं. ८५

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. ८ (पू) भक्तपूर

यो चित्रमा तल भैरव भैरवी शवमा टेकी उत्तराम्नायात्मक भई नाचेको हुनाले यसबाट पनि रावबीजको उद्धार हुन्छ। माथिको मूर्तिको देवता सुन्दरी हुन्। रावबीज पछि सुन्दरी अनि श्रीपादुकां पूजयामि नमः हुन्छ।



चित्र नं. ८६

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. ९ (पू) भक्तपुर

यस चित्रमा रहेकी देवता फ्रंकारिणी हुन्। यहाँ तलको पुरुषले एक खुट्टा शवमा र एक खुट्टा अर्कोमा टेकेको हुनाले यिनी संहारभैरव ठहरिए। त्यस कारण भैरवबाट प्रणव र शवासन भएबाट देवीको नाममन्त्र 'फ्रं' हुन्छ। त्यस कारण पहिले प्रणव अनि फ्रं बीज अनि फ्रंकारिणी यसपछि फट् भई श्रीपादुकां पूजयामि नमः हुन्छ।

चित्र नं. ८७

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. १० भक्तपुर

यो चित्रमा भएको देवता प्रत्यङ्गिरा हुन्। तलको मूर्तिमा कामरूप भैरव र रतिरूप भैरवी शवमा टेकी उत्तराम्नायात्मक भई नाचेको हुनाले यसबाट रावबीजको उद्धार हुन्छ। अब यसमा पहिले रावबीज अनि प्रत्यङ्गिरा पछि श्रीपादुकां पूजयामि नमः हुन्छ।

चित्र नं. ८८

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. ११ (पू) भक्तपुर

यो चित्रमा पनि तल कामरूप भैरव र रतिरूप भैरवी वेताल आसन गरी उत्तराम्नायात्मक भई नाचेको हुनाले रावबीजको उद्धार हुन्छ। माथिको मूर्तिको देवी सिद्धियोगेश्वरी हुन्। यसमा रावबीज अनि सिद्धियोगेश्वरी पछि श्रीपादुकां पूजयामि नमः हुन्छ।

चित्र नं. ८९

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. १२ (पू) भक्तपुर

यो चित्रमा रहेकी देवी सिद्धिकराली हुन् । यस चित्रमा तल रतिरूपिणी भैरवी वेताल आसन गरी उभिएको हुनाले यसबाट मायाबीजको उद्धार भई यसपछि सिद्धिकराली स्वाहा अनि श्रीपादुकां पूजयामि नमः हुन्छ ।

यति सिद्धिलक्ष्मीको प्रथम आवरण भयो ।

चित्र नं. ९०

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. १३ (उ) भक्तपुर

यस चित्रमा तल एउटी शक्तिले एउटा खुट्टा काठमा अर्को खुट्टा बेतालमा टेकेको हुनाले यसबाट मायाबीजको उद्धार हुन्छ । माथिको देवता मूल प्रकृति हुन् । त्यस कारण यस चित्रबाट पहिले मायाबीज अनि ङे युक्त मूल प्रकृति पछि तल एक शक्ति मात्र भएको हुनाले स्वाहा भई श्रीपादुकां पूजयामि नमः हुन्छ ।

चित्र नं. ९१

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. १४ (उ) भक्तपुर

यो चित्रमा तल भैरव भैरवीले वेतालमा टेकी उत्तराम्नायात्मक भई नाचेको हुनाले यसबाट रावबीजको उद्धार हुन्छ । माथिको देवी धरणी हुन् । अतः रावबीज पछि धरणी श्रीपादुकां पूजयामि नमः हुन्छ ।



चित्र नं. ९२

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. १५ (उ) भक्तपुर

यो चित्रमा तल भैरवले मात्र वेताललाई टेकेको र भैरवीले वेताललाई नटेकेको हुनाले स्त्री पुरुषबाट रावबीज त उद्धार हुने नै भयो । शक्तिले काठमा टेकेको हुनाले मायाबीजको पनि उद्धार हुन्छ । अतः माथिको देवी वनदुर्गा ठहर्न आउँदा रावबीज मायाबीज वनदुर्गा श्रीपादुकां पूजयामि नमः हुन्छ ।

चित्र नं. ९३

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. १६ (उ) भक्तपुर

यो चित्रमा रहेकी देवी श्रीशैलतनया हुन् । यस चित्रमा तलका मूर्ति वेताल माथि उभिएको हुनाले यसबाट पनि रावबीजको उद्धार भई रावबीज पछि शैलतनया अनि श्रीपादुकां पूजयामि नमः हुन्छ । यति प्रत्यङ्गिराको प्रथम आवरण भयो ।

चित्र नं. ९४

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. १७ (उ) भक्तपुर

यसमा भैरवले वेतालमा टेकी भैरवीले चाहिं अन्त टेकेको हुनाले यसबाट रावबीज र मायाबीजको उद्धार हुन्छ । यसमा माथि रहेको देवता उग्रचण्डा भएकी हुनाले रावबीज र मायाबीज पछि उग्रचण्डा अनि श्रीपादुकां पूजयामि नमः हुन्छ ।

चित्र नं. ९५

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. १८ (उ) भक्तपुर

यो चित्रमा भएको माथिको मूर्ति प्रचण्डाको हो। यस चित्रमा तल भैरव मात्र भएको हुनाले यसबाट प्रणवको उद्धार हुन्छ। यसमा पहिले प्रणव अनि ङे युत प्रचण्डा पछि हूं फट् भई श्रीपादुकां पूजयामि नमः हुन्छ।

चित्र नं. ९६

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. १९ (प) भक्तपुर

यस चित्रमा तल शक्तिले एउटा गोडा बेतालमा टेकी अर्को गोडा अर्कै वस्तुमा टेकेको हुनाले यसबाट मायाबीजको उद्धार हुन्छ। माथिको देवता चण्डोग्रा भएको हुनाले मायाबीज पछि ङेयुत चण्डोग्रा अनि स्वाहा अनि श्रीपादुकां पूजयामि नमः हुन्छ।

चित्र नं. ९७

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. २० (प) भक्तपुर

यसमा तल एक खुट्टा बेतालमा राखेको र अर्को अन्त राखेको भैरवी भएको हुनाले यसबाट मायाबीजको उद्धार हुन्छ। माथिको देवता चण्डनायिका भएकी हुनाले मायाबीज पछि ङेयुत चण्डनायिका अनि स्वाहा भई श्रीपादुकां पूजयामि नमः हुन्छ।



चित्र नं. ९८

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. २१ (प) भक्तपुर

यो चित्रमा तल भैरव भैरवी दुवैले बेताल आसन गरी उभिएको हुनाले यसबाट रावबीज उद्धार हुन्छ। माथिको देवता चण्डा हुन्। त्यस कारण रावबीज पछि चण्डा अनि श्रीपादुकां पूजयामि नमः हुन्छ।

चित्र नं. ९९

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. २२ (प) भक्तपुर

यो चित्रमा रहेको देवता चण्डावती र तलको मूर्तिमा भैरव भैरवी बेताल आसन गरिरहेबाट रावबीज उद्धार हुन्छ। अतः रावबीजपछि चण्डवती अनि श्रीपादुकां पूजयामि नमः हुन्छ।

चित्र नं. १००

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. २३ (प) भक्तपुर

यो चित्रमा रहेको देवता चण्डरूपा हुन्। तलको मूर्तिमा भैरवले बेतालमा टेकेको र भैरवीले अन्यत्र टेकेको हुनाले यसबाट रावबीजको उद्धार हुन्छ। त्यस कारण रावबीज र मायाबीज पछि चण्डरूपा अनि श्रीपादुकां पूजयामि नमः हुन्छ।

चित्र नं. १०१

पाँचतले मन्दिर (न्यातपोल) को टुंडाल नं. २४ (प) भक्तपुर

अब यो पाँचतले मन्दिर ( न्यातपोल ) को अन्तिम टुंडालबाट मन्त्रोद्धार गरिन्छ। यसमा पनि तलको मूर्तिमा भैरवले वेतालमा टेकेको र भैरवीले अन्त टेकेको हुनाले रावबीज र मायाबीजको उद्धार भई माथिको देवता अतिचण्डिका भएकी हुनाले पहिले पूर्वोक्त बीज अनि अतिचण्डिका पछि श्रीपादुकां पूजयामि नमः हुन्छ।

यति दुर्गा भद्रकालीको प्रथमावरण भयो। यस्तै दोस्रो तलाको टुंडालबाट तलको मूर्तिबाट मन्त्रोद्धार गरी माथिको मूर्तिमा पहिले सिद्धिलक्ष्मीको द्वितीयावरण अनि प्रत्यङ्गिराको द्वितीयावरण त्यसपछि दुर्गा भद्रकालीको द्वितीयावरणका देवताहरूको नामबाट उद्धार गर्नुपर्छ। त्यस्तै तेस्रा तलाबाट तृतीयावरणको चौथो तलाबाट चतुर्थावरणको र पाँचौं तलाबाट पञ्चमावरणको उद्धार हुन्छ। यी देवताको पञ्चमावरणसम्म हुनाले तलको वेदी अथवा सिंढी पनि पाँचवटै छन् र माथि तला पनि पाँचवटै छन्। वेदी र तलाको बारेमा यही 'कामकलारहस्य' को प्रथम खण्डमा नै बयान भइसकेको छ।

॥ इति श्री कामकलारहस्यद्वितीयखण्डे भक्तपुरस्थभैरवस्य तथा तत्रैव न्यातपोलस्य रहस्यवर्णनन्नाम तृतीयः पटलः ॥



# चतुर्थ पटल

पीठहरूका मन्दिरहरूको टुंडालमा रहेका कुनै कुनै टुंडाल हेरेर यहाँ रहेका देवताका नाम र मन्त्र उद्धार गर्ने काइदा अब यस पटलमा आफ्नो गुरुपरम्परानुसार गुरुवक्त्रगम्य मन्त्रशास्त्रको आधारमा दर्शाउने चेष्टा गर्दछु। यो मन्त्रोद्धार गर्न योग्य गुरुबाट क्रमदीक्षा ग्रहण गरी मन्त्रार्थ मन्त्रचैतन्यको अभ्यास नभई यथार्थ अर्थ गर्न सकिंदैन। त्यसमा पनि पूर्ण अभ्यास हुनुपर्दछ। तर मेरो भने यसमा यथार्थ पूर्ण अभ्यास छैन। तथापि मेरो बुद्धिले भेटेसम्म उद्धार गरेको छु। त्यसमा कहीं भुवनको विचारमा ठीक अर्थ नलागेको हुन गए विद्वान् मन्त्रशास्त्राभ्यासीहरूमा मेरो भूल सुधारिदिने प्रार्थना गर्दछु।

चित्र नं. १०२

गणेश मन्दिरको टुंडाल, पतको ममरू, ललितपुर

यो तसवीरमा टुंडालको तलको रतासन मूर्तिबाट निम्न लिखित प्रकारले मन्त्र उद्धार हुन्छ। यो चित्र ललितपुर ( पतको ममरूटोल ) को गणेश मन्दिरको हो। यो गणेश मन्दिरको भएको हुनाले गाणपत्यपीठको तोरण ठहरिन आयो। यो तोरणको तलको मूर्ति पनि स्वाभाविक प्रकारको सपरीत रतासन नै हो, तर यसको गणेशसित संबन्ध भएको हुनाले र गणेशको चक्र मूलाधार भएको हुनाले मूलाधार भुवनबाट "ल" को उद्धार भई पूर्ववत् "ह" कार रूपी काममा "ल" मिल्न जांदा कामबाट "ह्ल" को उद्धार हुन्छ। अनि शक्तिबाट "ई" र तिनीहरूको गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई

पूर्वाम्नायको अर्थ दिने स्थिरामायाबीजको उद्धार हुन्छ । अनि यस रतासन मूर्तिमाथि गणेशको मूर्ति हुनाले पूर्वाम्नायात्मक गणेशबीज ( द्विविन्दुः पूर्वमार्गिणाम् ) र तलको रतासन मूर्तिमा स्त्री पुरुष दुवै भएको हुनाले नमःको उद्धार हुन्छ । तल सपरीत रतासन हुनाले यिनी विरिञ्चि गणेशको भेद हो भन्ने बुझिन्छ । यी गणेशको मूर्तिमा हातमा बञ्चरो लिएबाट आग्नेय ताप, अंकुश लिएबाट स्तंभनरूप, मोदक लिएबाट वशीकरण रूप र अक्षमाला लिएबाट मन्त्ररूप ठहर्छ । गणेश मन्दिरको टुंडालमा पूर्वाम्नायात्मक गणेशको मूर्ति भएबाट यस पीठको मूल गणेशमा पूर्वाम्नाय समष्टि भएको बुझिन्छ ।

चित्र नं. १०३

नारायण मन्दिरको टुंडाल, पतको ममरू, ललितपुर

यो चित्रमा टुंडालको तलको रतासन मूर्तिबाट निम्नलिखित प्रकारको मन्त्रोद्धार हुन्छ । यो चित्र पाटन (पतको ममरूटोल)को नारायण मन्दिरको हो । यो चित्र नारायण मन्दिरको हुनाले यो वैष्णव पीठको तोरण ठहरियो । यसमा काम ठाडो भएर बसेको हुनाले कामबाट प्रकाश सूचक हुने हुनाले यो प्रकाशात्मक तत्त्वको ठहरिंदा प्रकाशभुवनको ठहरियो । अतः कामबाट प्रकाश तत्त्वात्मक अक्षर "त्र" शक्तिको छातीमा पुरुषको हात रहेबाट सो "त्र" मा "स" पनि मिल्न जांदा कामबाट "स्त्र" को उद्धार हुन्छ । अनि शक्तिबाट "ई" तथा ती दुइको गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई पूर्वाम्नायको अर्थ दिने वधूबीजको उद्धार हुन्छ । यस माथिको मूर्ति प्रत्यालीढ आसनमा रहेको र स्त्रीबीज खास ताराको हुँदा यो मूर्ति रामको ठहरिएको हुनाले स्त्रीबीज पछि रांबीज त्यसपछि ङे युक्त राम अनि नमः भन्ने सप्ताक्षरी मन्त्रको उद्धार हुन्छ । यस मूर्तिमा राजदण्ड हातमा लिएबाट परमशक्तिशाली भन्ने बुझिन्छ ।

चित्र नं. १०४

पञ्चनारायण मन्दिरको टुंडाल, ललितपुर



यो चित्र पाटनको पञ्चनारायण मन्दिरको हो । यसमा पुरुषको हातले शक्तिको गोडा समाएको र शक्तिको हात पुरुषको कुममा राखेबाट चुम्बक भुवनको बुझिन्छ । यसमा चुम्बकको "ट" भए पनि यो वैष्णव पीठ हुनाले कामबाट "क्ल" को उद्धार भई शक्तिबाट "ई" को उद्धार हुन्छ । अनि तिनीहरूको गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई दक्षिणाम्नायार्थक कामबीजको उद्धार हुन्छ । यो रतासन मूर्ति माथि कृष्णको सानो मूर्ति देखिएकोले यहाँ पनि अर्को कामबीज, त्यसमाथि नाग देखिएकोले अनन्त बीज अनि त्यसमाथि अवस्थित वराहको देब्रे पाउनिर सानो पृथ्वीको मूर्ति भएबाट पार्थिवबीजको उद्धार भएर तल स्त्री पुरुष दुवै हुनाले नमः भई षडक्षरी मन्त्रको उद्धार हुन्छ । रतासन मूर्तिमाथि कृष्णको मूर्ति भएबाट र "कालीकृष्णयोरैक्यं" भन्ने उक्ति भएर कालबाट संकलन भएबाट कालग्रास भन्ने रूप बुझिन्छ । फेरि हातमा चक्र लिएबाट रक्षातत्त्व र अर्को हातमा करताल लिएबाट नादतत्त्व त्यसमाथि अनन्त भएबाट निर्विषीकरण तत्त्व अनि अनन्त माथि वराह भएबाट यिनी खास ब्रह्माको सगुण रूप भन्ने बुझिन्छ । यसमा विपरीत रतासन भएबाट दक्षिणाम्नायार्थक भन्ने बुझियो ।

चित्र नं. १०५

महादेव मन्दिरको टुंडाल, काठमाडौं, (गद्दीबैठक अगाडि)

यो चित्र काठमाडौं गद्दीबैठक अगाडिको महादेव मन्दिरको हो । यसमा कलाले कामको खुट्टा तानी कम्मरमा हात राखेको र कामले कलाको कांधमा हात राखेबाट आज्ञाचक्र मनोभुवन भएबाट प्रणव बुझिए तापनि यो शैवपीठ हुनाले र यसमाथि दुइटा हात्ती भएको हुनाले पुरुषबाट "श्र" र शक्तिबाट "ई" को उद्धार भई दक्षिणाम्नायार्थक श्रीबीजको उद्धार हुन्छ । यस रतासन मूर्तिमाथि दुइटा दिग्गजले थामेको पद्ममाथि गौरीशंकरको युगलमूर्ति देखिएको हुँदा अर्धनारीश्वर बुझिएबाट चिन्तामणि कूटको उद्धार हुन्छ । त्यसपछि प्रणवादि भई नमोन्त भएबाट पञ्चाक्षरी मन्त्रको उद्धार हुन्छ । यसमा युगल मूर्ति हुनाले प्रकृतिपुरुषात्मक तत्त्व, दुइ हात्तीले कमल

थामेबाट आधार शक्त्यात्मक तत्त्व, गौरीको हातबाट अभय र शङ्करको हातबाट वर भएबाट वरदाभय तत्त्व भन्ने र यो दक्षिणाम्नायात्मक हुनाले शिवको अघोरांश मूर्ति बुझिन्छ ।

चित्र नं. १०६

महादेव मन्दिरको टुंडाल, काठमाडौं (गद्दीबैठक अगाडि)

यो चित्र काठमाडौं गद्दीबैठक अगाडिको महादेव मन्दिरको हो । यसमा काम हिड्न लागे जस्तो देखिएबाट यो गति भुवनको ठहरियो । तसर्थ कामबाट "च" कलाले मुसलमा भर गरेबाट "स" अनि कामले आफ्नो गुप्तेन्द्रिय समाई रत गरेबाट "क्ष", कुहिना टेकाएकी शक्तिबाट "औ" र गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई चषक बीजको उद्धार हुन्छ । यस रतासन मूर्तिमाथि दुइ गणले थामेको पद्ममाथि गौरीशङ्करको युगल मूर्ति देखिएबाट चिन्तामणि कूट हुनुपर्ने हो तापनि अगाडि एउटा कूट भएकोले यहाँ शिवबाट "ह्रौं" र शक्तिबाट "सः" अनि रतासन मूर्तिमा स्त्री पुरुष दुवै भएबाट नमः प्रयोग भई पञ्चाक्षरीको मन्त्रको उद्धार हुन्छ । यसमा युगल मूर्ति हुनाले प्रकृति पुरुषात्मक तत्त्व, चराको आकारको दुइ गणले कमल थामेबाट खेचरी तत्त्व, गौरीको हातबाट अभय र शङ्करको हातबाट वर भएबाट वरदाभय तत्त्व र तलको मृगादिक रतासनबाट पश्चिमाम्नाय सिद्ध भएकोले यिनी शिवको सद्योजातांश भन्ने बुझियो ।

चित्र नं. १०७

गणेश मन्दिरको टुंडाल, पतको ममरू, ललितपुर

यो चित्र ललितपुर (पतको ममरूटोल) को गणेश मन्दिरको हो । यसमा दुइ शक्ति एक पुरुष भएबाट आज्ञाचक्र मानस भुवनको ठहरिन जांदा कामले रतिसित संभोग गरेको र प्रीति अर्कोतिर उभिएको हुँदा कामले



शक्तिको चुल्ठो समातेबाट "म" रतिबाट "अ" प्रीतिबाट "उ" अनि तिनको गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई तारबीजको उद्धार हुन्छ । यस मूर्तिमाथि कमलमा क्षेत्रपाल भएबाट तारबीज पछि ङे युक्त क्षेत्रपाल अनि नमः भई अष्टाक्षरी मन्त्रको उद्धार हुन्छ । यिनी तारक क्षेत्रपाल हुन् । यसमा दाहिने हातमा खडग भएबाट विजयतत्त्व देब्रे हातमा चक्र भएबाट रक्षातत्त्व अनि अर्को दुइ हातमा तत्त्वमुद्रा र पात्र भएबाट तत्त्व ज्ञानात्मक मूर्ति भन्ने बुझिन्छ ।

चित्र नं. १०८

ज्ञानेश्वर महादेव मन्दिरको टुंडाल, ज्ञानेश्वर, काठमाडौं

यो चित्र ज्ञानेश्वर महादेव मन्दिरको हो । यसमा कामको एक हात शक्तिको पुट्ठामा र अर्को हात शक्तिको कांधमा राखेबाट र शक्तिले हातमा केही लिएबाट र दुवै गतिशील जस्तो देखिएबाट लय भुवनको ठहरिन आउँदा यसमा पुरुषबाट "क्ष" शक्तिबाट "औ" अनि गुप्तेन्द्रियबाट नादविन्दु उद्धार भई पश्चिमाम्नायार्थक नारसिंहबीजको उद्धार हुन्छ । यस मूर्तिमाथि नाच्न लागेको शिवजीको मूर्ति देखिएबाट नृत्यनाथ ठहरिएको हुनाले नारसिंहबीजपछि ङे युक्त नृत्यनाथ अनि नमः हुन्छ । बायां हातले नाग समातेको र अर्को हात माथि उचालेबाट निर्वीषी तत्त्व र पश्चिमाम्नायात्मक भएको हुनाले सद्योजातांश र कमलमाथि वृषभासन गरेबाट धर्मतत्त्व ठहरिन्छ ।

चित्र नं. १०९

ज्ञानेश्वर महादेव मन्दिरको टुंडाल, काठमाडौं

यो चित्र ज्ञानेश्वर महादेव मन्दिरको हो । यसमा पनि अघि झैं कामले एउटा हात कलाको पुट्ठामा र अर्को हात कुममा राखी शक्तिलाई

आफूतिर आकृष्ट गरिरहेको हुंदा चुम्बक भुवनको देखिन आएको हुनाले र शक्तिले कामतिर विशेष प्रकारको दृष्टि दिएर हेरेको हुँदा कामबाट "ह्" कलाबाट "ऊ" र गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई पश्चिमाम्नायार्थक क्रोधबीजको उद्धार हुन्छ। यस मूर्तिमाथि नाच्न लागेको शिवजीको मूर्ति भएबाट नृत्यनाथ ठहरिएको हुनाले क्रोधबीज पछि ङेयुत नृत्यनाथ अनि नमः हुन्छ। वायां हातले नाग समातेको र दायां हातमाथि उचालेबाट निर्विषीतत्त्व, पश्चिमाम्नायात्मक हुनाले सद्योजातांश र कमलमाथि बृषभासन भएबाट धर्मतत्त्व ठहरिन्छ। माथिको चित्रमा र यसमा भुवन फरक भएको हुनाले नृत्य आकृति पनि केही फरक देखिन्छ।

चित्र नं. ११०

गणेश मन्दिरको टुंडाल पतको ममरू, ललितपुर

यो चित्र ललितपुर पतको ममरू टोलमा भएको गणेश मन्दिरको हो। यो गाणपत्यपीठको र साधारण किसिमको मृगादिक रतासन भएकोले यो मूलाधार पार्थिव भुवनको ठहरियो। यसमा कामबाट "ग" कलाबाट "अ" गुप्तेन्द्रियबाट नादविन्दु र अनि कामले देब्रे हात पुट्ठामा र दाहिने हात शक्तिमाथि राखेबाट विसर्गको उद्धार हुँदा पश्चिमाम्नायात्मक एकाक्षरी गणपति बीज (नादविन्दु विसर्ग युक्त "ग" कार) को उद्धार भयो। यसमाथि कमलमाथि सिंहासन गरेकी मातृका महालक्ष्मीको मूर्ति देखिनाले गणेशबीज भन्दा अगाडि श्रीबीजको र पछाडि ङेयुक्त महालक्ष्मी प्रयोग भई नमोन्त भएर अष्टाक्षरी मन्त्रको उद्धार हुन्छ। यहाँ हातमा तत्त्वमुद्रा र पात्र भएको हुनाले तत्त्वज्ञानात्मक तत्त्व भन्ने बुझियो।

चित्र नं. १११

महादेव मन्दिरको टुंडाल, काठमाडौं (गद्दीबैठक अगाडि)



यो काठमाडौं गद्दीबैठक अगाडिको महादेव मन्दिरको टुंडालको चित्र हो। यसमा पहिले सबभन्दा तल रतासन मूर्तिबाट मन्त्रोद्धार गरौं। यो शैवपीठको हुनाले र कामले कलाको पुट्ठामा समाती आफूतिर तान्न लागेको र कलाले एउटा हातले कामलाई घच्याडेको र अर्को हात कुंभभित्र घुसारेको हुनाले, कुंभ पञ्चतत्त्वको सूचक हुनाले र कुंडलीरूप शक्तिले गुरुरूप पुरुषलाई घच्याडेको गुरुरूप पुरुषले कुंडलीरूप शक्तिलाई आफूतिर तानेको देखिएबाट यो सहस्रारचक्र चैतन्यात्मक भुवनको ठहरियो। तसर्थ यसमा कामबाट "वि" कुण्डलीबाट "च्चे" को उद्धार भई पश्चिमाम्नायार्थक पुच्छबीजको उद्धार हुन्छ। यस माथिको मूर्ति गौरीशंकरको हो। यसमा दुवैले एक पाउ कमलमा र एक पाउ वाहनमा टेकेका छन्। यसमा शिवशक्ति भएबाट चिन्तामणि कूटको उद्धार हुन्छ। तलको रतासन मूर्तिबाट "विच्चे" उद्धार भएको हुनाले सबै उद्धृत अक्षर विच्चे भन्दा अगाडि बस्दछन्। तल स्त्री पुरुष दुवै हुनाले चिन्तामणि कूटपछि नमः अनि ङेयुक्त सद्योजात अनि त्यसपछि ङेयुक्त गौरी अनि बिच्चे भई द्वादशाक्षरी मन्त्रको उद्धार हुन्छ। यहाँ गौरीको हातमा अभयमुद्रा र शिवको हातमा वरमुद्रा भएकोले वरदाभय तत्त्व ठहरिन्छ।

चित्र नं. ११२

पञ्चनारायण मन्दिरको टुंडाल, ललितपुर

यो चित्र पाटनको पञ्चनारायण मन्दिरको हो। यसमा कामले एक हातले घडा समातेको र अर्को हातले कलालाई अङ्गालो हालेको अनि कलाले कामको लिङ्ग समाई कुम्भमा अडेस लाएको हुनाले प्रकाश भुवनको ठहरियो। प्रकाशको अक्षर "त्र" हो तापनि यहाँ शक्तिले लिङ्ग र पुरुषले घडा समाएबाट "छ्" द्वयको उद्धार हुन्छ। वस्त्र लाएकी कलाबाट "आ", घडामाथि हात राखेबाट "ई" को उद्धार भई अघि बताएको दुइमा पृथक् पृथक् प्रयोग भई पश्चिमाम्नायको "छ्" का रादि बीजद्वयको उद्धार हुन्छ। यसमा माथितिर नारायणको मूर्ति देखिएको र दायां हातको माथि चक्र,

तल गदा त्यसमुनि शङ्ख अनि वायां हातको माथि कमल, तल विमिरा त्यसमुनि पाश लिएबाट विष्वक्सेन नमः मा प्रणवाद्य गर्दा दशाक्षरी मन्त्रको उद्धार हुन्छ। यसमा चक्रबाट रक्षातत्त्व, गदाबाट वैराग्य तत्त्व, कमलबाट श्रीतत्त्व र विमिरोबाट आरोग्य तत्त्व ठहरिन्छ।

चित्र नं. ११३

महादेव मन्दिरको टुंडाल, काठमाडौं (गद्दीबैठक अगाडि)

यो चित्र काठमाडौं गद्दीबैठक अगाडिको शैवपीठको हो। यसमा शक्ति र पुरुष दुवै परस्पर अङ्कमाल गरी नाची नाची रतासन गरेबाट यो ताप भुवनको ठहर्न आयो र परस्पर अङ्कमालबाट अग्निभावको समेत सूचना भएबाट यहाँ कामबाट "फ्र" कलाबाट "ए" अनि दुवैको गुप्तेन्द्रियबाट नादबिन्दु सूचित भई रावबीजको उद्धार हुन्छ। अब यस रतासन मूर्ति माथिको चित्रमा विचार गरौं। यहाँ पांच मुख आठ हात भएका वामदेवांश शिव र उनको वायां शक्ति हुन्। शक्तिको हातमा अभय भएबाट शक्तिकूटको उद्धार हुन्छ। पांच मुख आठ हात भएका वामदेवांश शिवबाट पाशुपत कूटको उद्धार हुन्छ। अतः यी सवैबाट रावबीज, पाशुपत कूट शक्तिकूट त्यसपछि नमः भई पञ्चाक्षरी मन्त्रको उद्धार हुन्छ। यहाँ शक्तिको अभय मुद्राबाट अभयतत्त्व, शिवको हातमा वरमुद्रा भएबाट वरतत्त्व, शिवको हातमा कपाल पात्र भएबाट ज्ञानतत्त्व र वृषभासन भएबाट धर्मतत्त्व बुझिन्छ।

चित्र नं. ११४

महादेव मन्दिरको टुंडाल, काठमाडौं (गद्दीबैठक अगाडि)

यो पनि गद्दीबैठक अगाडिको शैवपीठकै चित्र हो। यसमा काम र कला दुवैको टाउको तलमाथि गरी ताण्डव रतासन गरेबाट विद्युत् भुवनको



ठहरिन जांदा पुरुषबाट "ठ" शक्तिबाट "अ" अनि ती दुइको टाउको तलमाथि भएबाट र दुवैले परस्परको गुह्यस्थानमा हात राखेबाट यिनीहरूको गुप्तेन्द्रियबाट विसर्ग उद्धार भई उत्तराम्नायात्मक विसर्गाढ्य स्थायी बीजको उद्धार हुन्छ। यसमाथिको मूर्तिमा शिव र शक्ति दुवैको श्वेतवर्ण भएबाट प्रणवादि, दुवैको हंसासन भएबाट "हंसः", त्यसपछि अघि उद्धार भएको विसर्गाढ्य स्थायीबीज अनि नमः भई षडक्षरी मन्त्रको उद्धार हुन्छ। शिवको हातमा वर र शक्तिको हातमा अभय भएबाट वराभय तत्त्व बुझिन्छ। यिनी पनि वामदेवांश शिव हुन्।

इति श्रीकामकलारहस्य द्वितीयखण्डे यथालाभतोरणरहस्योद्घाटनं नाम चतुर्थः पटलः।

# पंचम पटल

ठट्टाको कुरा होइन, ऐतिहासिक प्रमाणबाट पुष्ट हुन नसके तापनि हाम्रो यहाँ तुलजाविषयका किंवदन्तीहरू चलेर आएका छन्। 'देवमाला' मा यस विषयमा यस्तो लेखिएको छ–

"अघि सत्ययुगमा दिव्य एक हजार वर्ष इन्द्रले श्रीसदाशिवको उपासना गर्दा, भगवान् आशुतोष प्रसन्न भै तुलजा भवानीको सुनमा अंकित भएको यन्त्र, मन्त्र र पद्धति (हस्तलिखित वंशावलीमा वज्र अर्थात् हीरामा अंकित भएको भन्ने छ) इन्द्रलाई दिनुभयो। इन्द्रले पनि सो यन्त्र अमरावतीमा ल्याई भव्य मन्दिर बनाई यिनलाई विराजमान गराई आफ्नो इष्टदेवता मानी आराधना गरिरहेका थिए। पछि रावणको छोरा मेघनाथ स्वर्गमा आई इन्द्रसित लड्न थाल्यो र त्यहाँ तुलजा भवानी हुनुहुन्छ भन्ने कुरा बुझेकोले रोज नरवलि दिनेछु भन्ने भाकल गराई माईलाई संतुष्ट गराएको हुनाले इन्द्रलाई जित्यो र सो तुलजाको यन्त्र बोकी ल्याई लङ्कामा ठूलो मन्दिर (स्वर्गको भन्दा पनि राम्रो मन्दिर) बनाई स्थापना गर्‍यो र हररोज एक नरवलि दिने प्रथा चलायो। पछि त्रेतायुगमा रावणले सीता हरण गरी सीतालाई अनेक कष्ट दिएबाट सीताजी पनि तुलजा भवानीकै विभूति हुनाले उनी रावणसित विमुख हुन गइन् र राम लक्ष्मणद्वारा रावण र कुम्भकर्ण समेत सबै रावण परिवारको ध्वंस भयो अनि श्रीरामले सोही तुलजा भवानीलाई अयोध्यामा ल्याई नरवलिको साटो पशुवलि दिने गरी मनाई हररोज पशुवलि दिने प्रथा चलाई आफ्नो इष्टदेवता मानी स्थापना गर्नुभयो। पछि आफू स्वर्गारोहण हुने वेलामा यी तलेजुको यन्त्र, मन्त्र, पद्धतिसमेत एउटा तामाको पेटारीमा राखी सरयूमा डुबाई राखिदिनुभयो।



वहाँकै (श्रीरामकै) पाँचौं पिंडीमा नल नाम गरेका राजा भए। उनले केही देवी सूचना पाई सो तलेजुको यन्त्र, मन्त्र, पद्धतिसमेतको पेटारी सरयूमा फेला पारी शहरमा ल्याई आफ्नो इष्टदेवता संझी दिनको एक पशुवलि दिई आराधना गर्न थाले। उनीले पनि आफ्नो प्रयाण कालमा आफूले पाएकै ठाउँमा सरयूमै लगी सो यन्त्र, मन्त्र र पद्धतिसमेत दवाई दिए। त्यसपछि फेरि राजा पुरुरवाले पनि केही देवी सूचना पाई सोही मन्त्र पद्धतिसमेतको यन्त्र हात लगि गरी नलले झैं आराधना गर्ने गरेथे। निजकै सन्तान राजा अलर्कले पनि यिनकै आराधना गर्दथे। पछि ब्रह्मज्ञानी भई बलि दिन छोडेका हुनाले भगवती अप्रसन्न भइन्। सो बुझी आफ्नो पूर्वजले राखेको ठाउँ सरयूमा लगी सुनको वट्टामा सो यन्त्र राखी सो वट्टा र मन्त्र पद्धतिसमेत एउटा तामाको पेटारीभित्र राखी दवाई आफूले देहत्याग गरे।

त्यसपछि सो अयोध्यापुरीबाट ती अलर्क राजाका सन्तानहरू यत्र तत्र लागे। पछि राजा नान्यदेव एक दिन सरयूको तिरमा बसिरहेको बखत निद्राले ग्रस्त भई त्यहीं निदाऐछन् र सपनामा एक सुन्दरी स्त्री आई "म तेरो पुर्खाको इष्ट देवता हुं, सरयुका जलबाट झिक म बसेको ठाउँमा भ्रमराहरूले छोपिराखेको होला" भनी गइछन्। अनि निद्राबाट विउंझी ती नान्यदेवले सो ठाउँ पत्ता लगाई सो तामाको पेटारी झिकी हेर्दा सो पेटारीमाथि यो श्लोक लेखेको देखेः–

"रामो वेत्ति नलो वेत्ति वेत्ति राजा पुरुरवा।
अलर्कस्य धनं प्राप्य नान्यदेवो भविष्यति।"

अर्थात् रामले जाने, नलले जाने, पुरुरवाले जाने अलर्कको धन पाउने नान्यदेव नै हुनेछन्। अनि सो तामाको पेटारी खोली हेर्दा त्यहाँ भित्र पूजा पद्धतिको पुस्तक र एक सुनको वट्टा देखे। सुनको वट्टा पनि खोली हेर्दा त्यसभित्र तुलजा भवानीको सुनको यन्त्र देखी हर्षले खुशी भएर त्यही पद्धति वमोजिम भवानीको पूजा गर्न थाले। केही दिन पछि उनले भवानीको पूजा गरिरहेको बेलामा सो यन्त्रबाट "जनकपुरका समीपमा एक ठूलो जंगल छ मलाई त्यहीं लैजाउ र वहाँ मेरो मन्दिर बनाउ तिम्रो भाग्य पनि त्यहीं प्रकाश

हुनेछ" भन्ने वाणी निस्क्यो । अनि तुरुन्त यन्त्र मन्त्र पद्धतिहरू सबै अघिकै तामाको पेटारीमा हाली त्यस ठाउँबाट प्रस्थान गरी यथासमय भवानीले बताए झैं जनकपुरनेरको जंगलमा पुगे । त्यस ठाउँमा जाँदा "कालो सर्पको सिकार बन्नुपर्छ" भनी धेरै जनाले मनाही गर्दा पनि नमानेर ती नान्यदेव सो घोर जंगल भित्र पसी एक ठूलो ढुङ्गा देखेर त्यसैमाथि बसे । रात परेपछि भवानीलाई संगै त्यहीं माथि सुती निदाए । अनि स्वप्नामा अघि सरयूको तीरमा स्वप्नामा देखेको सुन्दरी आई "यो ढुङ्गामुनि एउटा खड्ग छ त्यो खड्ग लिई हातले समाई जागा भै बस एक कालोसर्प "मणिधर नाग" आई मणि भुइँमा छोडी खेल्न जानेछ । सो मणि गोवरले छोपिदिनू र त्यो कालोसर्प तिमीमाथि आईलाग्ने छ तिनलाई त्यही खड्गले काती शिरछेदन गरि देउ र यही ढुंगा मुनि द्रव्यले भरिएको सात इनार छ सो द्रव्य झिकी यहीं मेरो मन्दिर बनाई १२ मल्लारबाट तिम्रो स्वजात र प्रजा झिकाई देश बनाई राज्य गर" भनी गइन् । अनि निद्राबाट बिउझी झटपट् सो ढुंगामुनि हेर्दा एक खड्ग हात पर्‍यो र सो खड्ग हातमा लिएर बसेको बखत एक कालो सर्प आई आफ्नो मणि भुइमा बिसाई खेल्न गएको बखत नान्यदेवले गोवरले सो मणि छोपिदिए । तत्पश्चात् सो सर्प आफूमाथि आई लागेको देखी आफ्नो हातको खड्गले त्यसको टाउको छेदन गरिदिए र सो टाउकोमा हेर्दा त्यसमाथि पनि सुनको अक्षरले पहिलेकै श्लोक "रामो वेत्ति नलो वेत्ति" इत्यादि पेटारीमा लेखे बमोजिमकै श्लोक लेखिएको देखे । अनि भोलिपल्ट दिन व्याएपछि ढुंगामुनि खनी हेर्दा धनद्रव्यले भरिएको सात इनार फेला पर्न गयो र त्यसबाट धनद्रव्य झिकी १२ मल्लारबाट आफ्ना जातका र परजातका रैतीहरू झिकाई शहर बसाउने प्रबन्ध गरे ।

ती नान्यदेवकी एउटी सुसारेसित लङ्काको एक राक्षस बराबर आई विलास गर्न पल्केको रहेछ । एकदिन सो केटीले आफ्नो पति राक्षससित "हाम्रा मालिकले शहर बसाउन खोजेका छन् कैले सिद्धिने होला" भनी सोध्दा सो राक्षसले "खै यस्तो चालले एक जुगमा पनि सकिंदैन । हामी जस्ताको हात परेको भए एक रातमा तयार हुन्थ्यो" भनी भन्दा "उसो भए म मेरो मालिकसित यो कुरा भनौं त ? आजसम्म तपाईसितको मेरो व्यवहार गुप्त नै छ । फेरि यो कुरा प्रकाश गर्दा के पर्ने होला"! भनी



सुसारेले भन्दा "त्यसमा केही पर्दैन, तिम्रो मालिक भन्दा म धेरै शक्तिशाली छु । बरू यो कुरा सुन्दा उनले मलाई स्वागत गर्नेछन्" भनी सो राक्षसले जवाफ दियो । त्यसपछि भोलिपल्ट त्यो केटी नान्यदेवकहाँ गई "रिसानी माफ भए म केही कुरा बिन्ति गरूँ कि ?" भनी बिन्ति गर्दा नान्यदेवको मन्जुरी पाई "म यहाँ आएदेखि एउटा लङ्काको राक्षससित राती राती विहार गर्ने गरेको छु । सो राक्षसले एकचोटी हजुरसित भेटी हजुरको ईजाजत पाए एकै रातमा यो विशाल शहर बनाइदिने प्रतिज्ञा गरेका छन्" ।

सो कुरा सुनी सारै खुशी भै सो राक्षससंग भेट* गर्दा सो राक्षसले आज सूर्य अस्ताएपछि भोलि सूर्य नउदाएसम्म कोही पनि घरबाट बाहिर ननिस्कनू भन्ने सबै प्रजालाई आदेश होस् र त्यो रातभरमा हजुरको शहर सिध्याईदिन्छु" भनी भन्दा नान्यदेवले सो कुरा मन्जुर गरी सोही बमोजिम गरे । अनि सो रातमा सो राक्षसले आफ्नो भाइ बन्धु सबैलाई ल्याई हारगुहार गरी शहर बनाउन थाली दक्षिण दिशामा समाप्त गर्ने गरेकोमा केही बनाउन बांकी हुँदैमा दिन व्याएछ र लाचारीसाथ त्यत्तिकैमा छाडी गए । भोलिपल्ट सबै प्रजा सहित नान्यदेव उठी हेर्दा ठूलो शहर देख्दा बहुतै खुशी भए । तर दक्षिणतिर केही बन्न बांकी भएको हुँदा सो शहरको नाम सिमरौनगढ भन्ने राखिदिए । यही सिमरौनगढ भित्र देवालय बनाई श्रीतुलजा भवानी राज गराई आफू पनि सिमरौनगढमा बसी श्रीतुलजा भवानीको आज्ञा मुताबिक नान्यदेवले राज्य गरी अनेक सुखभोग गरी राज्य चलाई दर सन्तान समेतले राज्य गरी बसेका थिए । ती नान्यदेवका सन्तान हरसिंहदेवका पालामा दिल्लीका बादशाहले आक्रमण गर्न खोज्दा तुलजाबाट "यहाँ म्लेच्छ आउन लागे मलाई नराख, नेपालमा लैजाऊ अब उप्रान्त उहीं बस्छु" भनी स्वप्न हुँदा राजाले अब के गर्ने भनी अन्योलमा परी ईश्वरीको नित्यपूजा गर्न जांदा "मलाई आजै नेपाल लैजाऊ" भन्ने यन्त्रबाट वाणी भयो । अनि तुरुन्त भवानीलाई बोकी नेपालतिर बाटो तताए । जङ्गलमा वास पर्दा विहान पशुवलि के गर्ने" भन्ने मनमा लिई सुत्दा सपनामा "प्रातः कालमा जुन पशु भेटिएला उसैको मलाई वलि दिनू" भन्ने सपना

* हस्तलिखित वंशावलीमा नान्यदेवले राक्षसलाई भेटेको कुरा छ । तर मुद्रित पुस्तकमा भने केवल दासीकै वचनले मात्र काम भएको कुरा छ ।

भयो, नभन्दै भोलिपल्ट विहान सोही वासमा एउटा अर्को राङ्गो भेटियो र "अब ज्यापूको हातबाट यसको शिर छेदन गराई वलि गराउँ कि?" भनी यन्त्रसित सोध्दा "हुन्न"। "अहिले एउटा मान्छेलाई हेर्न पठाउनू, जसले पूर्वतिर चाक फर्काएर दिशा गरिरहेछ, त्यसैको हातबाट शिर छेदन गराई वलि गर्नू" भन्ने यन्त्रबाट आज्ञा भयो र सोही बमोजिम गरी ल्याएको मानिसको हातबाट शिर छेदन गराई वलि गरे र सो मानिसको हातबाट काटेको हुनाले त्यसलाई कसाही भन्ने जातको बनाए। अनि नित्य भोग अड्कन जाँदा ती ज्यापू मध्ये एउटालाई शुद्ध गराई भोक पकाउन लगाए र त्यसलाई सुवाल भन्ने जातको बनाए। अनि नेपाली संवत् ४४४ (वि. सं. १३८१) सालमा ती राजा तुलजा सहित नेपालको भक्तपुरमा आई पुगे पछि त्यहाँका वैश्य ठकुरी राजा भीमकहाँ गई सबै कुरा बताउँदा सो राजा भीमले हरसिंहदेवलाई खुब स्वागत सत्कार गरी "भवानीको जहां इच्छा हुन्छ त्यहीं राज गराउनुहोस्" भनी भने। अनि हरसिंहदेवले "कहाँ मन्दिर बनाउँ" भन्ने मनमा लिई सुत्दा "यहाँ एउटा दक्षिणी ब्राह्मण अग्निहोत्री छन्, उनैको घर पवित्र छ, त्यही मेरो मन्दिर बनाउनू" भन्ने स्वप्नमा भवानीको आज्ञा हुँदा सोही कुरा राजा भीमकहाँ बिन्ति पर्दा ती राजाले सो अग्निहोत्री ब्राह्मणलाई बोलाई "तिम्रो घरको सट्टा अर्को घर बनाइदिउला द्रव्य पनि दिउँला" भनी बताउति अनेक कुरा देखाई संझाउँदा पनि ती ब्राह्मणले नमान्दा पनि हरसिंहदेवले जबरजस्तीसाथ सो घरमा लगी भवानीलाई राज गराए। अनि सो ब्राह्मण खिन्न भई आफ्नो गला सेरिएर मरे। त्यसपछि "मलाई ब्रह्महत्या लाग्यो" भनी हरसिंहदेव अनशन बसेका बेलामा "ती ब्राह्मण गणेश हुन्, तिनको शिर अघि नै छेदन भई सकेको हुनाले तिमीलाई ब्रह्महत्या लाग्दैन। त्यसै ठाउँमा मन्दिर बनाई ढोकामा ती ब्राह्मणको लाश गाडी माथिबाट गणेश मूर्ति स्थापना गर" भन्ने ईश्वरीबाट आकाशवाणी भयो र सोहीबमोजिम ती ब्राह्मणको घरमा मन्दिर बनाई मूलढोकामा ती ब्राह्मणको लाश दबाई सो माथि गणेश मूर्ति राखी भवानीलाई विराजमान गराए। त्यस समयदेखि अद्यावधि सोही पद्धति बमोजिम पूजाआजा चलिरहेकै छ। वि. सं. १९९० सालमा ठूलो भँचालो जांदा भादगाउँ शहर एक प्रकारले ध्वस्त भएको थियो। तर यो तलेजुको मन्दिर ज्युँकात्युँ रह्यो।



तुलजा भवानी त्वरिता हुन् भनेर यिनको मूर्ति स्थापना भएको एउटा मन्दिर राजस्थानमा छ। सो मूर्तिको र मन्दिरको चित्र समेत गोरखपुरबाट निस्कने "कल्याण" को विशेष शक्ति अङ्कमा प्रकाश भएको छ। यी त्वरिता श्रीविद्याको षोडश नित्याकला मध्ये अष्टम नित्याकला हुन्। यिनको मन्त्र बाह्र अक्षरको हुन्छ। यिनको रूप किरातिनीको जस्तो छ। अतः यिनी ऊर्ध्वाम्नायकी भइन्। यस कुराबाट र सूर्यवंशी राजा नान्यदेवले पत्ता लाएकी तुलजा जो यहाँ ल्याइएको छ, ती पनि तुलजा नै भएबाट अधिका सूर्यवंशी राजाहरू ऊर्ध्वाम्नायी अर्थात् श्रीविद्याका उपासक रहेछन् भन्ने बुझिन्छ।

अब हाम्रो यहाँ भक्तपुरमा स्थापित भएकी तुलजातिर विचार गरौं। यहाँ पश्चिमाम्नायबाट पनि उपासना भए जैं बुझिन्छ। किनभने यहाँ डुमाजुको पनि पीठ यही मन्दिरको आसपासमा छ। तिनको पनि तुलजाकै क्रममा पूजा हुन्छ। डुमाजुको पीठ केवल कोरा शिलारूप मात्रै छ। तर विस्केटको जात्रामा भक्तपुरको सुनधाराको अगाडिको छिडीमा सर्वसाधारणलाई दर्शनको लागि राखिने डुमाजुको अष्टधातुको मूर्ति वृषभमाथि बसेका अष्टादशभुजी कुब्जिकेश्वरको काखमा दुइ भुजी कुब्जिका सिंहमाथि बसेकी मूर्ति देखिन्छ। अतः डुमाजु भनेको यही कुब्जिकाको युगलमूर्ति बुझियो। यसबाट यहाँको तुलजा भवानी पश्चिमाम्नाय र ऊर्ध्वाम्नायको समष्टिरूपकी हुन् भन्ने बुझिन्छ। फेरि "पश्चिमं त्वैहिकं फलम्" भन्ने देखिएको र राजकाजकै निमित्त अघि इन्द्रलाई शिवजीले दिएकोले खास रामोपासिता तुलजा भवानी यिनी नै हुन् भन्ने बुझिन्छ। राजस्थानमा यिनको एक रश्मि त्वरिता मात्र त्यहाँ भए जस्तो बुझिन्छ। किनभने रामोपासिता सिद्धिकराली गुह्यकालीको मन्त्र सर्वप्रसिद्ध छ, जसको प्रभावले रामले रावणलाई मारेथे।

फेरि "महात्रिपुरसुन्दर्याश्चण्डयोगेश्वरी परा
न तयोर्विद्यते भेदो भेदकृत् नरकं व्रजेत्"

भन्ने बृहद्वडवानल तन्त्रको उक्ति छ। फेरि चण्डयोगेश्वरी भनेको नै सिद्धिकराली गुह्यकाली हुन्। अतः यी तुलजामा (त्वरितामा) श्रीरामले ऊर्ध्वाम्नायात्मक श्रीविद्या, पश्चिमाम्नायात्मक कुब्जिका (कुजा) विद्या र उत्तराम्नायात्मक गुह्यविद्याको समष्टिरूप गराई उपासना गरेको बुझिन्छ।

तलेजु भवानीको मन्दिर कान्तिपुर र ललितपुरमा पनि विद्यमान छन् । त्यस विषयमा वंशावलीमा लेखिए बमोजिम वर्णन गर्ने चेष्टा गर्दछु । सर्वप्रथम यस प्रथम पटलमा तीनवटै तलेजुका देवालयको वर्णन गर्नेछु । त्यसपछि यिनका चित्र दिई विशेष यसका कामकलाङ्कित मूर्ति (पञ्चमी मूर्ति) सहितको यथालाभ व्याख्या गर्नेछु ।

अब कान्तिपुर तलेजुको वर्णन गर्दछु । कान्तिपुर तलेजुको बारेमा देवमालामा यस्तो उक्ति छ–

"सूर्यवंशी राजा महेन्द्र मल्ल नित्य भक्तपुर गै तुलजा भवानीको दर्शन गरी फर्केर आउने गर्दथे । यसरी देवीको नित्य सेवा गर्दा देवी श्रीतुलजा भवानी प्रसन्न भई सपनामा "हे राजा तिमी यहाँसम्म आउनु पर्दैन, किन कष्ट गर्छौं, अघि राजा रत्न मल्लका पालादेखि कान्तिपुरमा बसिरहेकी छु, तिम्रो चित्त नबुझे सो राजा रत्न मल्लले मलाई स्थापना गरेको स्थानमा भक्तपुरदेखिने गरी वडो उँचा गरी यन्त्राकार देवालय बनाई मलाई आवाहन गर म आउँला" भनी आज्ञा भयो । अनि राजा महेन्द्र मल्लले कालिगढहरू डाकी देवालयको लक्षण बताउन थाले । कालिगढहरूले सो बमोजिम देवालय बनाउन नसकी आजित भएको वेलामा अकस्मात् एकजना सन्यासी आई कालिगढहरूलाई यन्त्राकार देवालयको लक्षण बताई अन्तरध्यान भए । त्यसपछि कालिगढहरूले ती सन्यासीले भने बमोजिम शुभ-साइत पारी मखनदेखि दक्षिण, तारिणी देवीदेखि पश्चिम, क्षेत्रटोलदेखि उत्तर र प्याफलदेखि पूर्व यति चार किल्ला भित्र देवालयको जग बसाली देवालय बनाउन थाले । दिन भरी बनाएको मन्दिर रातमा बिग्रने हुँदा कालिगढहरू निराश भए र राजाले के कारणले यस्तो भएको होला भनी विचार गर्दा तारिणीदेवीले आफ्नो स्थानभन्दा उँचा गरी मन्दिर बनाउन लागे भनी विगारेको हो भन्ने थाहा पाई तारिणी देवीलाई २१ गजूर र ३६० राङ्गो चढाउने भाकल गरेपछि सो देवालय भत्किन छोड्यो । अनि निर्विघ्नसंग तन्त्रोक्त विधिले यन्त्राकारको भव्य देवालय बनाई सुनको पांचवटा गजूर चढाई माघ शुक्ल पञ्चमी रेवती नक्षत्र सोमवारको दिन शुभ मुहूर्तमा कोटि आहुति यज्ञ आरम्भ गरी यथाक्रमले सबै देवताको प्रतिष्ठा गरी सुसारे,



भण्डारे, ब्राह्मण, आचार्य, जोशी र जलवतहरूलाई राखी नित्यार्चन पर्वका पूजा, दमनारोहण, पवित्रारोहण र अष्टमीपिच्छे महापूजा गर्नलाई धेरै गुठी राखी नित्य तुलजा भवानीको दर्शन गर्न थाले । केही वर्षपछि उनको मृत्यु भयो । वि. सं. १९९० साल माघ २ गते सोमबार माघकृष्ण औंसीका दिन ठूलो भैंचालो जांदा देवालयको माथिल्लो एकतला भत्कियो । पछि वि. सं. १९९६ सालमा श्री ३ महाराज जुद्ध शमशेरबाट सो भत्केको बनाइयो ।

हस्तलिखित वंशावलीमा यिनै तलेजु भवानीमा नेपालको मुख्य पीठ गुह्येश्वरीको राजा प्रताप मल्लले समष्टि गराएको पनि यस प्रकारले वर्णन गरिएको छ–

"तान्त्रिक नृसिंह ठाकुरले हिमवत्खण्ड नेपालमाहात्म्यमा लेखिए-बमोजिम श्लेष्मान्तक वनमा श्रीगुह्येश्वरी पीठ कुण्डरूप पत्ता लगाई चारैतिर गिर्दा पर्खाल लगाई राम्रो मन्दिर बनाई दिएका थिए । पछि नेपाली संवत् ७७४ वि. सं. १७११ वैशाख शुक्ल एकादशी बृहस्पतिवारको दिन सो श्रीगुह्येश्वरीको कुण्डमा फलामे दलिन र चौगिर्दा पर्खाल लगाई ढुङ्गाले छोपी अष्टदल पद्माकार र भैरवसहित गरी स्फटिकको कलश बनाई राजा प्रताप मल्लले लम्बकर्ण भट्टको सम्मतिले स्थापना गरी बाहिर र भित्र हालमा भए जैं देवदेवीहरू र ढुङ्गाको खम्बामाथि सिंहको मूर्ति राखी जीर्णोद्धार गरेर आचार्यद्वारा नित्य नैमित्यिक पूजा गर्ने गराई गुठी राखी दिएका थिए । अनि श्रीतुलजा भवानी र श्रीगुह्येश्वरीलाई समष्टि गराएर सो कुण्डको अष्टदल पद्म र भैरवमाथि अर्को कलशसहितको अष्टदल यन्त्र र भैरव यन्त्रसमेत मार्ग कृष्णनवमीमा अहोरात्र सपर्या गरी भोलिपल्ट दशमीको राती जात्रा चलाई ती यन्त्रहरू तुलजा मन्दिरमा लगी श्रीतुलजा भवानीमा समष्टि गराएर राख्ने प्रथा चलाए ।"

यस पटलमा तुलजाको विषयमा मात्र वर्णन हुने हुनाले अब पाटनको तुलजाको विषयमा वंशावलीको उक्ति दर्शाउने चेष्टा गर्दछु ।

"हरिहरसिंह मल्लको देहावसान भएपछि निजकी जेठी रानीपट्टिका छोरा राजा लक्ष्मीनरसिंह मल्ल कान्तिपुरका राजा भए । अनि स्वर्गवासी

राजा हरिहरसिंह मल्लकी माहिली रानी लालमतीले आफ्नो छोरा सिद्धिनरसिंह मल्ललाई साथमा लिई तुलजा भवानीलाई सुटुक्क साथमा लिई ललितपुर गई आफ्नो छोरा सिद्धिनरसिंह मल्ललाई त्यस ठाउँको राजा बनाई सुख शान्तिसित आमा छोराले राज्य भोग गर्न थाले। केही वर्ष पछि राजा सिद्धिनरसिंह मल्लले आफ्नो कौसीबाट कान्तिपुरतिर हेरिरहेको बेलामा कान्तिपुर दरवारबाट आगोको ज्वाला उठेको देखी झट्ट तल आई घोडा चढी कान्तिपुर दरवार आउँदा त आफ्नो दाज्यू कान्तिपुरका राजा लक्ष्मीनरसिंह मल्लको वेहान्त भइरहेको रहेछ र निजको छोरा आफ्नो भतिजा प्रतापमल्लसित "तिमीले तिम्रो बुवाबाट तुलजा जगाउने मन्त्र पायौ कि पाएनौ ?" भनी प्रश्न गरे। "कोचा भडेलले मलाई अल्मल्याएर बुवाको अन्त्यकाल भेट्न दिएन र बुवाले एउटा नयां गोल्फूमा टेकूको जल भरी त्यसैलाई सो मन्त्र प्रदान गरी बुवाले देह त्याग गर्नु भयो" भन्ने जवाफ मिल्यो। त्यस्तो निराशको वचन सुनेर भतिजोलाई धिक्कार दिई सिद्धिनरसिंहले आफ्नो दरवार ललितपुरमा फर्केर आई आफ्नो मुमालाई सबै कुरा बताए। अनि उनको मुमा (लालमती) ले "देवी त मैले सुटुक्क ल्याएर खोपामा राखेकी छु; फेरि कान्तिपुरबाट उडेर आएको पनि तिमीले देख्यौ होला" भनी भनिन्। त्यसपछि तुलजाको साङ्गोपाङ्ग दीक्षा दिनसक्ने ब्राह्मणको खोजी हुँदा "विश्वनाथो जानाति" भन्ने लालमती रानीले स्वप्नामा आवाज सुन्दा विश्वनाथ उपाध्यायलाई बोलाई उनैबाट आफ्ना छोरा सिद्धिनरसिंहलाई दीक्षित गराइन्। त्यसपछि नेपाली संवत् ७४० वि. सं. १६७७ ज्येष्ठ शुक्ल दशमी हस्तानक्षत्र व्यतिपात योग बुधवारका दिन तुलजा भवानीको प्रतिष्ठा गर्दा बुनियांसहित राजाले एक अग्निज्वाला आकाशमार्गबाट देवालयमा प्रवेश भएको देखे। अनि राजा खुशी भै सुवर्णको एउटा कल्पवृक्ष बनाई गुरु विश्वनाथ उपाध्यायलाई गुरु दक्षिणारूप प्रदान गरे। वि. सं. १९९० साल माघ २ गतेका दिन ठूलो भूकम्प हुँदा केही भएन।"

पाटनमा दिगुतुलजा भन्ने पनि मन्दिर छ। यिनी माथि वर्णित तुलजा होइनन्। यिनी कान्तिपुरको दिगुन्तले जस्तै दिगुन्तले हुन्। यी दिगुन्तले तात्कालिक नेवारेराजाहरूको इष्टदेवता हुन्। यिनको यथार्थ नाम गुप्त राखिएको छ। सो त्यहाँकै आगमका दीक्षितहरूलाई मात्रै थाहा हुन्छ। सो प्रकाश गर्न सख्त मनाही छ।



अब यहाँ एउटा शंकाको कुरा देखिन्छ। त्यो के हो भने– पहिले अयोध्याबाट ल्याइएकी तुलजा भवानी भक्तपुरमा स्थापित भइन्। त्यसपछि उनै तुलजा कान्तिपुरमा आवाहित भइन्। फेरि उनै ललितपुरमा स्थापित भइन् भन्ने वंशावलीबाट देखियो। अद्यावधि तीनै ठाउँमा यथोक्त विधिले सपर्याको प्रथा चलिनै रहेको छ। वंशावलीको कुराबाट त भक्तपुर र कान्तिपुर छाडी ललितपुरमै बसोवास गरेजस्तो बुझिन्छ। यो कुरा सर्वथा होइन। उनी तीनै ठाउँमा मौजुद छिन्। किनभने एउटा बत्तीमा जतिवटा बत्ती सल्काए पनि सबै बत्तीमा बराबरै ज्योत्स्ना रहन्छ। त्यस्तै तीनै ठाउँमा उनी उत्तिकै प्रभावले मौजुद छिन्। फेरि ईश्वर जताततै व्याप्त छन्। जहाँ जुन रूपमा उनलाई आवाहन गर्‍यो, भक्तको इच्छा पूर्तिको लागि उही रूपमा प्रकट हुन्छन्। सो कुरा सबै शास्त्रमा निर्विवाद वर्णन भएकै कुरा हो।

अब यी तीनै ठाउँका चित्र दिई केही मन्त्रोद्धारको झलक र तसवीरको वर्णन गर्दछु।

इति कामकलारहस्ये द्वितीयखण्डे तुलजानेपालप्रवेशवर्णनन्नाम पञ्चमः पटलः।

# षष्ट पटल

चित्र नं. ११५

श्रीतुलजा (तलेजु) को मन्दिर (पश्चिमढोका) काठमाडौं

देख्नासाथ स्पष्ट थाहा हुने तलेजु भवानीको मन्दिरको मूल सडकबाट लिइएको पश्चिम मोहडाको चित्र दर्शाएर यस पटलमा कान्तिपुरको तुलजा पीठको यथाज्ञान वर्णन हुन्छ।

चित्र नं. ११६

तलेजुको मन्दिर, काठमाडौं (त्रिशूलचोकको आग्नेयकोणबाट)

यो चित्र त्रिशूलचोकको आग्नेय कुनाबाट लिइएको तुलजा मन्दिरको हो। यसका नौ सिंढी मूलाधार, स्वाधिष्ठान, मणिपूरक, अनाहत, विशुद्धि, आज्ञा, नाद, विन्दु र ब्रह्मरन्ध्र यी नौ चक्रका सूचक हुन्। अतः यी देवीलाई परमदीपाकार चैतन्यरूपी शक्तिको सूचक गराइएको छ। पूर्वतिर पाँच र दक्षिणतिर एउटा सानो सानो मन्दिर पनि छन्। आठौं सिंढी अर्थात् विन्द्वात्मक चक्रमा एक देवल छ। त्यो प्रासादी विद्याको सूचक हो। यही विन्द्वात्मक चक्रमा पूर्वतिर भएको तीनवटा देवल अकार, उकार र मकारको सूचक बुझिन्छ। नवौं सिंढी अर्थात् ब्रह्मरन्ध्रमा आग्नेयपट्टि रहेको एउटा



सानो देवल कलात्मक तत्त्व बुझिन्छ। अनि ठूलो मूल देवल त परमदीपाकार ज्योतिर्मय र तीन छाना भएबाट आत्मतत्त्व, विद्यातत्त्व र शिवतत्त्वात्मक परमशक्त्यात्मक ज्योत्तिर्मयतत्त्व भन्ने बुझिन्छ। फेरि यिनमा त्वरिता, कुब्जिका र रामोपासिता सिद्धिकराली समष्टि भएकी हुन् भन्ने पनि माथिकै पटलमा वर्णन भएको छ। त्यस उसले यी तीन छानाबाट यी तीन शक्ति समष्टि गराई टुंडालहरूबाट यिनैका आवरण देवताको सूचना भएको बुझिन्छ।

चित्र नं. ११७

तलेजु मन्दिरको मूलद्वारको (दक्षिण) तोरण, काठमाडौं

यो चित्र तलेजु मन्दिरको मूलद्वारको तोरण हो। यसमाथि पञ्चप्रेतमाथि बसेकी पञ्चवक्त्रा दशभुजा वज्रकुब्जिका हुन् तापनि पञ्चप्रेतमाथि बसेकोले त्वरितामा समष्टि भएबाट वज्रत्वरितारूप हुन् भन्ने बुझिन्छ। यिनको दायाँ वृषभासनमाथि बसेका षड्वक्त्र गुह्येश्वर शाम्भव, बायाँ द्वादशभुजी दशवक्त्रा (ज्योतिवक्तसमेत) रामोपासिता सिद्धिकराली (यिनको प्रसिद्ध ध्यानमा चवन्न हात हुन्छ, तर शाम्भवरूपमा बाह्र हात मात्रै हुन्छ) र यिनको तल तीन मुख, छ हात भएकी वीरकुब्जिकाको मूर्तिको अनुमान हुन्छ। अतः यस मन्दिरकी अधिष्ठात्री देवता यी सबैको समष्टिरूप हुन् भन्ने बुझियो।

चित्र नं. ११८

तलेजु मन्दिरको मूलद्वार (दक्षिणद्वार), काठमाडौं

यो चित्र सोही द्वारको तलदेखि माथिसम्मको चित्र हो। अक्सर आगमहरूको द्वारमा तीन नेत्र लेखिन्छ अथवा द्वारमा नलेखे पर्दामा तीन नेत्र लेखेको हुन्छ। यो आगमको दिग्बन्धनको सूचक हो। फेरि यो आँखाको बीचमा अर्थात् नाक रहने ठाउँमा यो जुन पीठ हो, त्यो पीठको देवताको

मुख्य हातको हतियार अंकित गरिएको हुन्छ। यहाँ कलश अंकित छ। शायद पूर्वोक्त तीन शक्तिको समष्टि मूर्तिको कुनै बाहुलीमा कलश लिएको हुनुपर्दछ।

चित्र नं. ११९

तलेजु मन्दिरको पश्चिमद्वारको तोरण, काठमाडौं

यो पश्चिमद्वारको तोरणको चित्र हो। यसमा पञ्चवक्त्रा अष्टादशभुजा मूर्ति देखिन्छ। यो अघि दक्षिणद्वारमा भएकी मूल शक्तिकै महोग्रचण्डामा समष्टि भएको मूर्ति हो। यिनको दायां बायांको मूर्तिमध्ये दाहिने पट्टिको षड्वक्त्रा मूर्ति अघोर कुब्जिकाको र बायां पट्टिको पञ्चवक्त्र मूर्ति स्वच्छन्द ललितभैरवको बुझिन्छ। कुब्जिका विद्याको पूजामा शक्तिको बायाँपट्टि भैरवको पूजा हुन्छ। तारा विद्याकोमा जुरोमा नागरूप भैरवको पुजा हुन्छ। अरूमा दाहिनेपट्टि भैरवको पूजा हुन्छ।

चित्र नं. १२०

तलेजु मन्दिरको पश्चिमद्वार भन्दा उत्तर पट्टिका टुंडाल, काठमाडौं

यो चित्रमा पश्चिमद्वारभन्दा माथि उत्तरपट्टि रहेका टुँडालहरू रहेका छन्। आवरण देवताको रूप त सबैको एकै हुन्छ भन्ने कुरा माथिको पटलमा वर्णन भएकै छ। पूर्वोक्त देवताहरूको रूपबाट यो तला पश्चिमाम्नायात्मक बुझिएको हुनाले यहाँको आवरण देवता कुब्जिकाको आवरण देवता बुझिन आयो। यसमा भएको सबभन्दा उत्तरपट्टिको टुंडालमा द्वादशभुजा मूर्ति र तल एउटा घुंडा टेकेर बसेको हुनाले मङ्गलमहाभैरवानन्दनाथ र ब्रह्माणी भन्ने बुझियो। त्यसपछिको तलकै मूर्तिमा वेतालको आसन गरेको भैरव नै मङ्गलमहानन्दभैरव हुन्। माथिको मूर्ति त सबै एकै प्रकारको



छ। यसमा भैरवको अगाडि कूर्चबीज र शक्तिको अगाडि कूर्च र मायाबीजको उद्धार हुन्छ। अब तलको मूर्तिमा तेस्रो मूर्तिमा भैरवको काखमा भैरवी बसेबाट सुर्चाचक महाभैरवानन्दनाथ र वैष्णवी भएबाट सुर्चाचक महाभैरवानन्दनाथ बसेबाट भैरवको अगाडि मायाबीज र शक्तिको अगाडि मकारमा नादविन्दु सहित वामकर्ण र वामनेत्र उद्धार हुन्छ। अब तेस्रो टुंडालको मुनिको पांचौं मूर्तिमा शक्ति नृत्यासनमा भएबाट भट्टमहानन्दनाथ भैरव र वाराही देवी बुझिन्छ। भैरवको अगाडि दीर्घकर्णयुक्त नादविन्दुसहित पार्थिव अक्षर र देवीको अगाडि नादविन्दुयुक्त वामकर्णसहित पार्थिव अक्षर र नादविन्दुयुक्त वामनेत्रसहित सोही अक्षरको उद्धार हुन्छ।

चित्र नं. १२१

तलेजु मन्दिरको पश्चिमद्वार भन्दा दक्षिण पट्टिको टुंडाल, काठमाडौं

यो चित्रमा पश्चिमद्वारभन्दा माथि दक्षिणपट्टिका टुंडालहरू रहेका छन्। यसमा पहिलो टुंडाल मुनिको मूर्तिमा भैरवको काखमा भैरवी बसेकी छन्। यी भैरव किलिकिलिमहाभैरवानन्दनाथ र भैरवी इन्द्राणी हुन्। यी भैरवको अगाडि नादविन्दुयुक्त वामकर्णसहित वरुणाक्षर र भैरवीको अगाडि नादविन्दुयुक्त वामकर्ण र वामनेत्रसहित दुइ चोटि वरूणाक्षर उद्धार हुन्छ। दोस्रो मूर्तिमा नृत्यमुद्रामा रहेका भैरव यिनै किलिकिलिमहाभैरवानन्दनाथ हुन्। दोस्रो टुंडालको मुनि तलको तेस्रो मूर्तिमा पनि युगल मूर्ति छ। यसमा कालरात्री महाभैरवानन्दनाथ र चामुंडा हुन्। यी भैरवको अगाडि नादविन्दुयुक्त वामकर्णसहित वाताक्षर र देवीको अगाडि नादविन्दुयुक्त वामकर्ण र वामनेत्रसहित दुइ वाताक्षर उद्धार हुन्छ। अब योभन्दा पछिको अर्थात् चौथो मूर्तिमा यिनै कालरात्री महाभैरवानन्दनाथ नै हुन्। अब तेस्रो टुंडालको मुनिको सानो मूर्तिमा भैरव भैरवी नृत्यासनमा देखिन्छन्। यी भैरव भीषण महाभैरवानन्दनाथ र भैरवी कमलादेवी हुन्। भैरवको अगाडि नादविन्दुयुक्त वामकर्णसहित अनलाक्षर र भैरवीको अगाडि नादविन्दुयुक्त वामकर्ण र वामनेत्रसहित दुइ भिन्नाभिन्नै अनलाक्षरको उद्धार हुन्छ।"

चित्र नं. १२२

तलेजु मन्दिरको उत्तरद्वारको तोरण, काठमाडौं

यो चित्र तलेजु मन्दिरको उत्तरद्वारको तोरणको हो। यसमा एकवक्त्रा दशभुजा मूर्ति देखिएबाट जयकुञ्जिकाको भएबाट मूलदेवता र जयकुञ्जिकाको समष्टिरूप बुझिन्छ । यिनको दुइतिर वीरासनमा बसेका पुरुष र स्त्रीरूप उनैका चेटक र चेटिका हुन् भन्ने बुझिन्छ ।

चित्र नं. १२३

तलेजु मन्दिरको पूर्वद्वारको तोरण, काठमाडौं

यो तलेजु मन्दिरको पूर्वद्वारको तोरणको चित्र हो। यसमा आठ हात एक मुख भएकी शक्ति वनदुर्गा बुझिन्छ । यिनको दायां एक मुख भएका वीरासनमा बसेका पांडुनाथ भैरव र वायांतिर बसेकी तीनमुख चारहात भएकी भुवनसुन्दरी शक्ति भए झैं बुझिन्छ ।

चित्र नं. १२४

तलेजु मन्दिरको छानाको नैर्ऋत्य कुना, काठमाडौं

यो चित्र तल्लो तलाको, नैर्ऋत्य कुनाको हो । यो क्षेत्रपालको मूर्ति जस्तो बुझिन्छ ।

चित्र नं. १२५

यो चित्र तलेजु मन्दिरको नैर्ऋत्य कुना सहितको पश्चिम मोहडाको हो। (काठमाडौं)



चित्र नं. १२६

तलेजु मन्दिरको वायव्य कुना, काठमाडौं

यो चित्र वायव्य कुनाको हो । यसमा रहेको मूर्ति पनि क्षेत्रपालको नै बुझिन्छ ।

चित्र नं. १२७

तलेजु मन्दिरको ईशान कुना, काठमाडौं

यो चित्र ईशान कुनाको हो। यसमाथिको मूर्ति पनि यसै दिशाको क्षेत्रपालको भन्ने बुझिन्छ ।

चित्र नं. १२८

तलेजु मन्दिरको आग्नेय कुना, काठमाडौं

यो चित्र तलेजु मन्दिरको आग्नेय कुनाको हो । यसमा रहेको मूर्ति पनि यसै दिशाको क्षेत्रपालको जस्तो बुझिन्छ ।

चित्र नं. १२९

तलेजुको दक्षिण (त्रिशूलचोक) मा रहेको त्रिशूल, काठमाडौं

यो चित्रमा मूलमन्दिर अगाडि रहेको त्रिशूल हो। त्यस कारण यस चोकको नाम पनि यसैको नामबाट त्रिशूलचोक भएको हो। यसमा था पूजा (क्रमार्चन) मा एउटा एउटा रांगो बोको र हाँस बलि दिइन्छ। अरू बलि माथि नै हुन्छ।

अब मूलचोकको विषयमा वर्णन हुन्छ ।

चित्र नं. १३०

मूलचोक मन्दिरको मूलद्वार पश्चिम पट्टिको (बायां) द्वारको तोरण,
हनुमान्‌ढोका, काठमाडौं

यो चित्र मूलचोक मन्दिरको मूलद्वारभन्दा पश्चिमपट्टिको (बायां) द्वारको तोरण हो । यस चित्रमा भएकी मूल द्वादशभुजा त्वरिता हुन् । यिनको दायां अष्टभुजा विन्ध्यवासिनी दुर्गा र बायांपट्टि अष्टभुजा सर्वमङ्गला दुर्गा भन्ने बुझिन्छ । यसमाथिको पाँच मूर्तिमध्ये अष्टभुजा चार मूर्तिमा अतिदुर्गा, जयदुर्गा, सिद्धिदुर्गा र ज्वालामुखीदुर्गा र अर्को एउटा मूर्तिमा चारभुजा मूलदुर्गा भन्ने बुझिन्छ ।

चित्र नं. १३१

मूलढोकाको मन्दिरको मूलद्वारको बायां (पश्चिम) पट्टिको आँखिझ्यालको तोरण,
हनुमान्‌ढोका, काठमाडौं

यो चित्र मूलचोक मन्दिरको मूलद्वारको पश्चिमपट्टि रहेको आँखिझ्यालको तोरण हो । यसमा दशभुजा कात्यायनी दुर्गा र यिनको दायां चार हात भएका पांडुनाथ भैरव (सत्यनारायण) र बायांतिर आठ हात भएकी सत्यदुर्गा भन्ने बुझिन्छ ।

चित्र नं. १३२

मूलचोकको मन्दिरको मूलद्वारको बायां (पश्चिम) पट्टिको आँखिझ्याल,
हनुमान्‌ढोका, काठमाडौं

यो सोही झ्याल (१३१ नं. को चित्र) को पूर्ण चित्र हो ।



चित्र नं. १३३

मूलचोकको मन्दिरको मूलद्वारको दायां (पूर्व) पट्टिको आंखिझ्यालको तोरण,
हनुमान्‌ढोका, काठमाडौं

यो चित्र मूलचोक मन्दिरको मूलद्वारको पूर्व (दायां) तिरको आँखिझ्यालको तोरणको हो । यसमा वेताल आसन चतुर्भुज महाभैरव र यिनको दायां गणेश र बायां कुमार भन्ने बुझिन्छ ।

चित्र नं. १३४

मूलचोक मन्दिरको मूलद्वारको दायां (पूर्व) पट्टिको आँखिझ्याल,
हनुमान्‌ढोका, काठमाडौं

यो चित्र सोही झ्यालको अर्थात् १३३ नं. चित्रको पूर्ण रूप हो ।

चित्र नं. १३५

मूलचोक मन्दिरको मूलद्वारको दायां (पूर्व) पट्टिको द्वारको तोरण,
हनुमान्‌ढोका, काठमाडौं

यो चित्र मूलचोक मन्दिरको मूलद्वारको दायां (पूर्व) पट्टिको द्वारको तोरणको हो । यसमा भएको मुख्य देवता द्वादशभुजा महासाम्राज्यदायिनी चतुर्मुखी दुर्गा हुन् । यिनको दायां बायांका श्री र लक्ष्मी हुन् । यिनको माथिका सात मूर्तिहरू महाकाली, महालक्ष्मी, महासरस्वती, चामुण्डा, शांकभरी, भ्रामरी र रक्तदन्तिकाको बुझिन्छ ।

**चित्र नं. १३६**

मूलचोक मूलमन्दिरको मूलद्वार (दक्षिणलङ्ग) उत्तरमोहडा,
हनुमान्ढोका, काठमाडौं

यो चित्र मूलचोक मूलमन्दिरको मूलद्वारको हो । यसमाथिको सबभन्दा तल्लो मूर्ति त्वरिताको हो । अतः त्यसभन्दा माथिल्लो अष्टादशभुजा मूर्ति त्वरितोग्रचण्डिकाको बुझिन्छ । अतः यिनलाई वेष्टित गरेर रहेका माथिका नवशक्ति क्रमशः निम्नलिखित (नवदुर्गा भन्ने बुझिन्छ)– रुद्रचण्डा, प्रचण्डा, चण्डोग्रा, चण्डनायिका, चण्डा, चण्डवती, चण्डरूपा, अतिचण्डिका, र महोग्रचण्डिका ।

**चित्र नं. १३७**

मूलचोकको मूलमन्दिर, (दक्षिण लङ्गपुरै), उत्तरमोहडा (पछाडि वसन्तपुर
माथिल्लो भाग समेत) हनुमान्ढोका, काठमाडौं

यहाँ तोरणहरूको चित्रको विचारबाट उग्रचण्डा कल्पबाट पूजा हुने प्रथा जस्तो बुझिन्छ । फेरि अर्को ठाउँमा दशभुजा पनि देखिएबाट र यहाँ फुलपाती पनि ल्याउने चलन भएबाट र कालरात्री पूजा समेत हुने प्रथा भएबाट कात्यायनीकल्प पनि सप्तमीदेखि समावेश भए जस्तो बुझिन्छ । चित्रमा देखिएको त्यो अगाडिको मौलोमा सप्तमीदेखि पूजाको वलि हुने हुन्छ । प्रतिपद्देखि यस ठाउँमा घटस्थापना भएर षष्ठीसम्म केवल उग्रचण्डाको पूजा भई सप्तमीको दिन विहान मूल मन्दिरबाट मूल देवता तुलजालाई पर्दाले ढाकी यहाँ ल्याइन्छ र भित्र लगी मूल घडामा समष्टि गराई त्वरितोग्रचण्डारूप र मूलतुलजाको रूपमा समष्टि गराई अपराह्नमा फूलपाती अर्थात् नवपत्रिका प्रवेश गराउँदा कात्यायनी भद्रकालीमा समेत समष्टि गराउने प्रथा भए जस्तो बुझिन्छ ।



**चित्र नं. १३८**

यो चित्रमा मूलचोकको तोरण (टुंडाल)को एक नमूना देखाइएको छ । यी टुंडालहरूबाट यिनको आवरण पूजाको नाममन्त्र उद्धार हुन्छ ।

**चित्र नं. १३९**

मूलचोकको उत्तर लङ (कुमारी राख्ने तला, दक्षिणमोहडा)
हनुमान्ढोका, काठमाडौं

यो मूलचोकको उत्तर लङको चित्र हो । यस ठाउँमा महानवमीको दिन कुमारीलाई ल्याएर राखिन्छ । मूलकुमारीलाई मूलढोकापट्टि र गणकुमारीलाई उत्तरपट्टि राखेर पूजा गरिन्छ । यहाँ पनि आवरण देवता सबैको एकै नासको मूर्ति छ । यहाँका यी छवटा देवताहरू कुमारीका षडङ्ग युवतीरूपका हुन् अर्थात् मायाबीजको षड्दीर्घयुक्त एक एक बीज क्रमैसित उच्चारण गरी हृदयदेवी श्रीपादुकां पूजयामि नमः एवं शिरोदेवी, शिखादेवी, कवचदेवी, नेत्रदेवी र अस्त्रदेवी यति छ हुन् । यही मूलचोकको पूर्वपट्टि दुमाजु स्थापित छन् । त्यहाँ जान र तसबीर लिन सक्त मनाही छ । यी दुमाजु कुब्जिका हुन् भन्ने पञ्चमपटलमा वर्णन भएकै छ । यहाँ विशेष केही लेख्न जरूरत परेन । यस विषयमा मेरो अनुभवको कुरा यत्तिकै हो । अब अर्को पटलमा यस्तै गरी भक्तपुरतुलजाको वर्णन गर्नेछु ।

इतिश्री कामकलारहस्ये द्वितीयखण्डे कान्तिपुरतुलजावर्णनन्नाम
षष्ठः पटलः ।

# सप्तम पटल

तुलजाको विषयमा सबै विवरण माथिका पटलहरूमा भएकै छ। कान्तिपुरको तुलजाको ठाउँ ठाउँको तसवीर राखेर पीठको देवता र आम्नाय विषयमा यथायोग्य झलक दर्शाएकै छु। भक्तपुरको तुलजा पनि उनै हुन् भन्ने कुरा माथिको लेखबाट विदित भएकै छ। तसर्थ भक्तपुरको तुलजाको सबै चित्र दिन सकिनँ। त्यसमा क्षमाप्रार्थी छु। यहाँ अहिले फगत् भक्तपुर तुलजाको मूल सुनढोकाको यो चित्र दर्शाएको छु।

चित्र नं. १४०

सुवर्णद्वार (सुनढोका) भक्तपुर

यस चित्रबाट त्यसभन्दा भित्रको ढोका पनि देखिएको छ। यी दुइ ढोकाको बीचको चोकमा भित्र मूल देवीको पूजाको शेष उच्छिष्टेश्वरलाई अर्पण हुन्छ। त्यहाँ कुकुरहरू आएर खाने प्रत्यक्ष छ। त्यो भित्री ढोका जो हो, त्यही ढोकामुनि माथि वर्णन भए जस्तो ऐतिहासिक अग्निहोत्रीको लाश दबाएको छ र सो ढोकामाथि गणेशको आकारको मूर्ति अंकित छ।

चित्र नं. १४१

सुवर्णद्वार (सुनढोका) (चित्र नं. १४०) को तोरण, भक्तपुर



यो सोही सुनढोकाको माथिको चित्र हो। यसमा माथि जो साना साना देवताहरू छन्; ती सबै तुलजाका आवरणका देवता हुन्। बीचमा अठाह्र हात अनि माथिदेखि १, ३ र ५ मुख गर्दा जम्मा नौ मुख भएकी महाकाली, महालक्ष्मी र महासरस्वती कुब्जिकात्मक त्वरित रूप बुझिन्छ। माथिको १ मुख त्वरिताको, बीचको ३ मुख महाकाली, महालक्ष्मी र महासरस्वतीको अनि तलको पाँचमुख कुब्जिकाको हो। तिनको दाहिनेपट्टि अष्टभुजा वनदुर्गा अर्थात् विन्ध्यवासिनी र बायाँपट्टि दशभुजा पञ्चवक्त्रा महाकालीको रूप बुझियो। फेरि टुंडालमा दाहिनेपट्टि र बायाँपट्टि आठ आठ हात भएका दुइ शक्ति छन्। ती दुइबाट मायाबीज र श्रीबीजको उद्धार भई पीठलाई सन्दीपन गरेको बुझिन्छ।

अब भक्तपुरको राजप्रासादको विषयमा विचार गरौं। जहाँ तहींको राजप्रासादमा परकृत्यानाशको लागि हनुमान् र वज्रनिवारणको लागि नृसिंह द्वारको नजीकमा स्थापित हुन्छन्। हाम्रो कान्तिपुरको राजप्रासाद हनुमान्ढोकामा मूलद्वारको दाहिनेपट्टि हनुमान् र भित्र प्रवेश गर्ने बित्तिकै दाहिने पट्टि नृसिंह स्थापित छन्। त्यस्तै भक्तपुरमा पनि राजप्रासादको मूलद्वारको दुइपट्टि हनुभैरव र नारसिंह भैरव स्थापित छन्। यहाँ यिनलाई भैरवरूपमा थापेको मतलब शायद श्रीतुलजामा र बैठकभित्रको चोकका देवीहरूमा बलि हुँदा रगतको लसपस होला भनेर यिनलाई भैरवरूप बनाएर स्थापना गरेको हुनु पर्छ। यी दुवै दक्षिण फर्केको हुनाले शायद ज्यादै जाज्वल्य होलान् भन्ने हेतुले त्रिनेत्र नगराएर दुइ नेत्र गराएको बुझिन्छ।

चित्र नं. १४२

हनुभैरव (पाषाणमूर्ति) भक्तपुर, (राजप्रासादको मूलद्वार)

यी द्वारको दाहिनेतिर रहेको करीब ३ फीट अग्लो हनुभैरवको मूर्ति हो। ऐरावण महीरावणले रामलक्ष्मणलाई हरेर पाताल लैजाँदा हनुमान् पातालमा पुगी सूक्ष्म रूपले देवीको मन्दिरभित्र पसी भैरवरूप बनी ऐरावण महीरावणले देवीलाई पूजा गर्न लगेको माँस मद्यादि ढोका नखोलेर भित्र दिनू भन्ने वाणी

बोली ऐरावण महीरावणद्वारा चढाएको सबै खाई नरबलि दिन भनी राम लक्ष्मणलाई भित्र हुल्न लगाए । अनि राम लक्ष्मणलाई शस्त्रास्त्रले सुसज्जित गराई आफूसमेत भित्रबाट बाहिर निस्की सबै राक्षसवर्गलाई निर्मूल गराई राम लक्ष्मणलाई फेरि लङ्का ल्याएथे । सोही रूप यो हो । राजा भूपतीन्द्र मल्लले यसको स्थापना गरेका हुन् ।

चित्र नं. १४३

नारसिंह भैरव (पाषाणमूर्ति) भक्तपुर (राजप्रासादको मूलद्वार)

यो नारसिंह भैरवको चित्र हो । यी नृसिंह भगवान्ले हिरण्यकशिपुलाई मारेर ज्यादा जाज्वल्य भई जागेर भैरवरूप भएको अवस्थामा श्रीगुह्यकाली सिद्धिलक्ष्मीरूप भई यिनलाई आफ्नो भैरवरूप बनाएर शान्त गराएकी थिइन् । कुराको तन्त्रान्तरमा वर्णन छ । यो सोही रूप हो । यो मूर्ति पनि ३ फीटको छ । यसको मुनि यस्तो अङ्कित छ–

"स्फुरन्नखरनिर्मलो दितिजयूथसंत्रासनो
हिरण्यकशिपुं रुषा हृदि विदारणैकोत्सुकः ।
जटाविकटमूर्तिमान् सकललोकरक्षापरो
युगान्तदहनोपमो जयति नारसिंहो हरिः ।।
स्वस्ति श्रीजयभूपतीन्द्रमल्ल देवसन थ्व नरसिंहमूर्ति दयका जुरो ।। संवत् ८७८"

चित्र नं. १४४

राजप्रासादको मूलद्वार, भक्तपुर

यो चित्र राजप्रासादको मूलद्वारको हो । यसैको दायां वायां हनुभैरव र नारसिंह भैरवको मूर्ति छ ।



चित्र नं. १४५

राजप्रासादको मूलद्वारको तोरण, भक्तपुर

यो सोही द्वार (माथिको) को माथिल्लो भागको चित्र हो । यसमा दुइतिर दुइटा राजचिह्नरूप दुइ छत्रहरू छन् । बीचको अपराजिता वैष्णवी र रक्तचामुण्डाको समष्टिरूप महासाम्राज्यलक्ष्मीको रूप बुझिन्छ । यिनको दुइ मुखमा माथिको मुख अपराजिता वैष्णवीको र तलको मुख रक्तचामुण्डाको हो । दाहिने अङ्ग अपराजिता वैष्णवीको हुनाले गरुडवाहन छ र वायां अङ्ग चामुण्डाको हुनाले शववाहन छ । यिनको दश हातमा छ हात वैष्णवीको र चार हात चामुण्डाको हो । अब दाहिने र वायांमा दुइ दुइ हातका दुइ शक्ति कीर्ति र कान्ति हुन् ।

चित्र नं. १४६

पशुपति मन्दिर, भक्तपुर

यो भक्तपुर दरवार अगाडिको पशुपति मन्दिर हो । यस विषयमा वंशावलीमा यस्तो लेखिएको छ । राजा सुमति जयजितामित्र मल्ल प्रतिदिन भक्तपुरबाट देवपाटनमा आई ज्योतिर्लिङ्ग श्रीपशुपतिनाथको दर्शन गरी आफ्नो दरवारमा फर्केर गएपछि मात्र भोजनादि गर्ने गर्दथे । वि. सं. १७४९ सालमा एकदिन निज राजालाई श्री पशुपतिनाथ आई स्वप्नामा "हे राजा तिमी दिनका दिन यहाँ देवपाटनमा आई मेरो दर्शन गरी फर्केर जांदा तिमीलाई साह्रै दुःख भयो । त्यस उसले त्यहाँ भक्तपुरमै तान्त्रिक विधानले देवालय बनाई मेरो मूर्ति समेत बनाई स्थापना गरी मलाई आवाहन गर म त्यहाँ आई प्रत्यक्ष भै बस्नेछु" भन्ने हुँदा सोही बेलामा यो पशुपतिनाथको मन्दिर तयार गरी पशुपतिनाथको आवाहन गर्दा एउटा ज्योति देवपाटनबाट उडेर आई त्यहाँको पशुपतिमा लीन भएको त्यस वखतमा धेरै भादगाउलेहरूले

देखेका थिए भन्ने लेखेको छ। यो पशुपतिनाथको मन्दिर दरवारको झ्यालबाट देखिने गरी स्थापना भएको छ। तर त्यस मन्दिरमा रहेका तामपत्रहरूबाट सो मन्दिर यक्षमल्लको नाउँबाट स्थापित यक्षेश्वरको हो भन्ने स्पष्ट हुन्छ।

चित्र नं. १४७

पशुपति मन्दिरको मूलद्वारको तोरण, भक्तपुर

यो सोही पशुपतिको दक्षिणपट्टिको मूलद्वारको तोरण हो। यसमा दाहिनेपट्टि गणेश र बायां कुमार छन्। बीचमा नागासन गरेका पाशुपत कूटरूप भैरव छन्।

अब यस मन्दिरको तीन प्रकारका टुंडालको मन्त्रोद्धार गरी यस मन्दिरको मन्त्रको उद्देश्य झल्काउने चेष्टा गर्दछु।

चित्र नं. १४८

पशुपति मन्दिरको टुंडाल, भक्तपुर

यो पशुपतिको मन्दिरको टुंडालको चित्र हो। यसमा ताण्डव रतासन भएको हुनाले यसबाट उत्तराम्नायात्मक मन्त्रको उद्धार हुन्छ। यी माथिको मूर्ति प्रत्यालीढ आसनमा बसेबाट पुरुषबाट "ह्" कार, स्त्रीबाट "र" कार, माथि प्रत्यालीढमा बसेबाट "औं" कार र गुप्तेन्द्रियबाट नादविन्दु उद्धार भई माथिको मूर्ति शिवरूप हुनाले तैजसात्मक शिवप्रासादको उद्धार हुन्छ।

चित्र नं. १४९

पशुपतिको टुंडाल, भक्तपुर



यो चित्रमा चणकाकार रतासन भएकोले यो ऊर्ध्वाम्नायात्मक भयो। अतः पुरुषबाट "ह्" कार र स्त्रीबाट "स" कार र माथि प्रत्यालीढ शिवको रूप हुनाले त्यसबाट समरसाकार हुनाले "औं" कारको उद्धार हुन्छ। गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार हुन्छ। यो ऊर्ध्वाम्नायात्मक भएको हुनाले यसबाट विसर्गको समेत उद्धार भई श्रीप्रासादबीजको उद्धार हुन्छ।

चित्र नं. १५०

पशुपति मन्दिरको टुंडाल, भक्तपुर

यसमा मृगाविक रतासन भएको हुनाले यो पश्चिमाम्नायात्मक ठहरियो। यसमा शिवबाट उपल्लो हार्धकला र शक्तिबाट तल्लो हार्धभागको उद्धार भई माथिको शिवबाट समरसाकार "औं" को उद्धार हुन्छ। गुप्तेन्द्रियबाट नादविन्दुको उद्धार भई शिवप्रासादको उद्धार हुन्छ।

यो माथिका तीनवटै चित्रमा खाली बीजको मात्र उद्धार भएको छ। मूर्तिबाट नाम र पुच्छबीजको उद्धार हुन बाँकी नै छ। यो त सबै अरू टुंडालको पनि विचार गरेर मात्र हुनुपर्ने हुनाले सो यहाँ उद्धार हुन सकेन। त्यसमा क्षमाप्रार्थी छु।

चित्र नं. १५१

वत्सला मन्दिर, भक्तपुर

यो भक्तपुरको वत्सला मन्दिरको चित्र हो। राजा सुमति जयजितामित्र मल्लले पशुपतिनाथको मन्दिरभन्दा उत्तरपट्टि श्रीपशुपतिनाथकी शक्ति श्रीवत्सला देवीको मन्दिर र मूर्ति बनाई स्थापना गरिदिएका हुन्।

यो वत्सलाको मन्दिरमा एउटा घण्टा पनि देखिएको छ। यो ऐतिहासिक घण्टा हो र यसको बारेमा पछि वर्णन गरिनेछ।

चित्र नं. १५२

हनुमानघाट, भक्तपुर

यो भक्तपुरको हनुमान्घाटको चित्र हो। यो घाट तीन नदी वीरा भद्रा र तमसारूप त्रिवेणीको संगमस्थल हो । यो घाट वि. सं. १९१२ सालमा कमाण्डर इन चीफ श्रीधीर शमशेर ज. व. रा. बाट बनाइएको हो ।

चित्र नं. १५३

हनुमन्तेश्वर शिवलिङ्ग, भक्तपुर

यो सोही हनुमान्घाटमा रहेको हनुमन्तेश्वरको चित्र हो । यो शिवलिङ्ग श्रीहनुमानजीले स्थापना गर्नुभएको हो भन्नेछ । यस विषयमा यहाँ एउटा कथा पनि दर्शाइन्छ।

"अघि त्रेतायुगमा सीताजीलाई रावणले हरेर लग्यो । त्यसपछि श्रीराम र लक्ष्मण लङ्कामा पुगी राक्षसहरूसंग लडाइँ गर्न थाल्नुभयो । लडाइँ खेल्दा खेल्दै रावणको छोरो इन्द्रजित्ले हानेको वाण लक्ष्मणलाई लागी लक्ष्मण मूर्छा परे। त्यस पछि झटपट् हनुमान् हिमालयमा गई मृतसंजीवनी बुटी भएको हिमालयको शृङ्ग बोकी ल्याउँदा उनलाई पानीको प्यास लाग्यो। अनि हनुमान्ले सो शृङ्ग दोलागिरी पर्वत (चांगुको डांडा) मा बिसाई त्यहाँको नदीमा पानी खाई एक शिवलिङ्ग स्थापना गरी हनुमन्तेश्वर भन्ने नाम राखी गए।"

बाल्मीकि ऋषिले यही दोलागिरी पर्वत (चांगुको डाँडा)मा वसी रामायणको रचना गरेका हुन् पनि भन्दछन् । यस विषयमा यहाँ एउटा



कथा दर्शाइन्छ । "अघि कुनै एकदिन श्रीवाल्मीकि ऋषि उनका चेला-सहित यस दोलागिरि पर्वतमा घुम्न आउँदा एउटा व्याधाले क्रौंच (कराङकुरूङ)को भालेपोथी वसीरहेको ठाउँमा भाले चाहिंलाई मारिदिएछ। यस्तो दृश्य वाल्मीकि ऋषिले देखेपछि उनको मुखबाट यस्तो वचन निस्क्यो–

"मानिषाद प्रतिष्ठां त्वमगमः शाश्वतीः समाः ।
यत्क्रोचमिथुनादेकमवधीः काममोहितम् ।।

अर्थात्– "हे निषाद अर्थात् हे व्याधा! तँले अनन्त वर्षसम्म प्रतिष्ठा नपाएसम्म, अर्थात् तँ कहिल्यै गति नपरेस्, किनभने तँले काममोहित क्न्याङकुरूङको जोडीमध्येबाट एउटाको ज्यान लिई दिइस् ।" अनि उनी आफ्नो आश्रममा आई पूर्वोक्त श्लोकको विचार गर्दा "मानिषाद" भन्ने पदबाट विष्णु र क्रौंच भन्ने पदबाट राक्षस भन्ने अर्थ संझी मनन गर्दा यो श्लोकबाट धेरै प्रकारको अर्थ निस्किन गयो र सो श्लोकको विचारबाट रामायणको कथा उनको मनमा झल्कन गयो र महाकाव्य रामायण बनाउन उनलाई तीव्र इच्छा हुनगयो । अतः नारदलाई संझदा नारदजी उनको अगाडि उपस्थित हुन गए । अनि वाल्मीकिजीले आफ्नो इच्छा प्रकट गर्दा नारदजीले हनुमत्तीर्थको विषयमा पूर्वोक्त इतिहास यथार्थ सुनाए र सोही ठाउँमा बसी रामायण काव्यको निर्माण गर्ने सल्लाह दिए। अनि वाल्मीकिजी यही हनुमान्घाटमा आई हनुमन्तेश्वरको आश्रममा रही संपूर्ण सातकाण्ड वाल्मीकि रामायण निर्माण गरी स्मृतिको लागि वाल्मीकेश्वर नामको शिवलिङ्ग पनि स्थापना गरे।

चित्र नं. १५४

वाल्मीकेश्वर शिवलिङ्ग, भक्तपुर

यो सोही वाल्मीकेश्वरको तसवीर हो।

अब फेरि माथि वत्सला माईको चित्रमा भएको ठूलो घण्टातिर विचार गरौं । सो तसबीर माईकै मन्दिरको साथमा खिचिएको छ । भित्र माईको आरती हुँदा बाहिर यो घण्टा करीव आधा घडी जति वजाइन्छ । त्यो घण्टाको शब्द भएसम्म भित्र चोकमा वलि खाने कुकुरहरू जम्मा भई कोलाहल शब्द गर्दछन् । यो प्रत्यक्ष छ । यो घण्टा राजा भूपतीन्द्रमल्लले स्थापना गरेका हुन् ।

अब यत्तिकैमा यो पटल समाप्त गर्दछु ।

।। इति श्रीकामकलारहस्ये द्वितीयखण्डे भक्तपुरस्थतुलजादि-
वर्णनन्नाम सप्तमः पटलः ।।

समाप्त



# परिशिष्ट

## यसमा उल्लेख गरिएका ग्रन्थहरू


१. अग्निपुराण– श्री १०८ बाबा मूर्खारण्य स्वामीजीको मुखबाट अवगत ।

२. आनन्दलहरी– श्री शङ्कराचार्य विरचित, श्रीकैवल्याश्रमकृत सौभाग्यवर्धनीटीका सहित । गणेश एण्ड को. प्राइवेट लिमिटेड, मद्रासबाट सन् १९६१ मा प्रकाशित ।

३. कामकलाविलास– पुण्यानन्दनाथ विचरित, नटनानन्दनाथकृत चिद्वल्लीटीकासहित । गणेश एण्ड को. प्राइवेट लिमिटेड, मद्रासबाट सन् १९६१ मा प्रकाशित ।

४. कुलकर्मचिन्तामणि– (अप्रकाशित)– भक्तपुरका स्वर्गीय श्रीकाजीमान अचाजुको हस्तलिखित पुस्तकबाट सं. १९८८ सालमा प्रतिलिपि गरिएको निजी संग्रह ।

५. कुलचूडामणि– निम्नलिखित सर्वोल्लासतन्त्रमा उद्धृत ।

६. कुलार्णवतन्त्र– गणेश एण्ड को., प्राइवेट लिमिटेड, मद्रासबाट सन् १९६५ मा प्रकाशित ।

७. कौलावलीनिर्णय– श्रीज्ञानानन्द परमहंसविरचित, संस्कृतप्रेस डिपोजिटरी, कलकत्ताबाट सं. १९८५ मा प्रकाशित ।

८. चतुःशती– उपर्युक्त कामकलाविलासको टीका चिद्वल्लीमा उद्धृत ।

९. तन्त्रशास्त्र– नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, काठमाडौंबाट सं. २०१८ मा प्रकाशित ।

१०. देवीयामल– निम्नलिखित बृहत्पुरश्चर्यार्णवमा उद्धृत ।

११. नारद पञ्चरात्र– स्वर्गीय सुब्बा पं. वीरेन्द्रकेशरीको संग्रहमा रहेको हस्तलिखित (हाल अप्राप्य) पुस्तक ।

१२. बृहत्पुरश्चर्यार्णव– श्री ५ प्रतापसिंहशाहदेवविरचित, रथी श्री धन शमशेर ज. ब. रा. द्वारा सं. २०२५–३० मा काठमाडौंबाट प्रकाशित (१–४ खण्ड) ।

१३. बृहद् योनितन्त्र– निम्नलिखित सर्वोल्लासतन्त्रमा उद्धृत ।

१४. बृहद् वडवानलतन्त्र– अघि भक्तपुरमा हुँदा स्वर्गीय श्री काजीमान अचाजुको संग्रहबाट हेरेको (हाल अप्राप्य) ।

१५. मातृकाहृदयतन्त्र– पूर्वोक्त गणेश एण्ड को., मद्रासबाट प्रकाशित आनन्द लहरीको टीका "सौभाग्य वर्धनी" मा उद्धृत ।

१६. शक्तिसंगमतन्त्र– "गायक वाड" को ओरिएण्टल सिरीज, बरोदाबाट सन् १९४१ मा प्रकाशित ।

१७. शिवस्वरोदय– ठाकुरप्रसाद एण्ड सन्स बुक्सेलर, राजादराजा, वाराणसीबाट प्रकाशित ।

१८. श्री त्रिशिकाशास्त्र– पूर्वोक्त गणेश एण्ड को., मद्रासबाट प्रकाशित कामकलाविलासटीका चिद्वल्लीमा उद्धृत ।



१९. श्री विद्याक्रमार्चन पद्धति– (अप्रकाशित) निजी संग्रहमा रहेको हस्तलिखित प्रति ।

२०. सर्वोल्लासतन्त्र– श्रीमत्सर्वानन्दनाथविरचित, राममाला ग्रन्थागार, कुमिल्ला, वङ्गलादेशबाट सन् १९४१ मा प्रकाशित, (कलकत्तामा मुद्रित) ।

२१. सिद्धडामरतन्त्र– मेरा पूज्य गुरु स्वर्गीय सुब्बा श्रीवीरेन्द्र केशरी अर्ज्यालको मुखबाट अवगत ।

२२. देवमाला वंशावली श्रीदेवीनाथ मृगस्थलीबाट सम्पादित, श्री ज. सूरशम्शेर ज.ब.रा. द्वारा २०१३ मा प्रकाशित ।

## द्वितीय खण्डमा उल्लेख गरिएका ग्रन्थ र अभिलेखहरू

१. देवमाला– मृगस्थली (काठमाडौं) बाट सं. २०१३ मा प्रकाशित।

२. हस्तलिखित संग्रह (क)– श्री रमानाथ झा (काठमाडौं)को हस्तलिखित पुस्तकबाट प्रतिलिपि गरिएको।

३. पशुपतिपुराण– श्री कृष्णप्रसाद शर्माद्वारा प्रकाशित।

४. हस्तलिखित संग्रह (ख)– ख. गङ्गालाल मास्के (काठमाडौं)को संग्रह-बाट उद्धृत।

५. "कल्याण" पत्रिकाको "शक्ति" विशेषाङ्क– गोरखपुरबाट प्रकाशित।

६. बृहद् वडवानलतन्त्र– (हाल अप्राप्य)।

७. नृसिंहको पाषाणमूर्तिको पीठको शिलालेख– जयभूपतीन्द्र मल्लको ने. सं. ८७८ को अभिलेख (भक्तपुर)।

८. रामायण– उपर्युक्त देवमालाबाट उद्धृत।



# चित्र प्रतिलिपिहरू



चित्र नं. २७

चित्र नं. २८





चित्र नं. ३०

चित्र नं. ३०





चित्र नं. ३९



चित्र नं. ४१

चित्र नं. ४०



चित्र नं. ४२




चित्र नं. ४३

चित्र नं. ४४


चित्र नं. ४५


चित्र नं. ४६




चित्र नं. ५५



चित्र नं. ५७

चित्र नं. ५६



चित्र नं. ५८





चित्र नं. ८७



चित्र नं. ८८



चित्र नं. ८९



चित्र नं. ९०



चित्र नं. ६५



चित्र नं. ६६



चित्र नं. ६७



चित्र नं. ६८

